सतगुरुदेवको दया

# ज्ञान गंगा

अनुवादक
भक्त सुमन दास
हिन्दीबाट नेपाली अनुवाद
फोन नं. +977-9804885093

-ःप्रचार प्रसार समितिः-
सतलोक आश्रम, चण्डीगढ रोड, बरवाला
जिल्ला-हिसार (हरियाणा) भारत

**जगतगुरु तत्त्वदर्शी संत रामपालज्यू**
**महाराजको सत्संग प्रवचनहरूबाट संग्रहित**
**अनमोल पुस्तक**

# "ज्ञान गंगा"

"भक्ति सौदागरको सन्देश" पुस्तकको विकल्प "ज्ञान गंगा"

-:प्रचार प्रसार समितिः-
सतलोक आश्रम, चण्डीगढ रोड, बरवाला
जिल्ला- हिसार (हरियाणा) भारत

धर्मार्थ मूल्य केवल - ने.रु. २५।-
- भा.रू. १५।-

नेपालका सम्पर्क मोबाइल नम्बरहरूः-
+977-9841684061, 9804749253, 9815809785,
9848723769, 9844094249,

**सतलोक आश्रम**

१. सतलोक आश्रम चण्डीगढ रोड बरवाला,
जिल्ला-हिसार (हरियाणा) भारत
२. निर्माणाधीन सतलोक आश्रम बैतूल, ग्राम उडदन, इटारसी रोड,
जिल्ला बैतूल (म.प्र), भारत

Ph. No.(+91)9992600801,9992600802,9992600803,
9812166044,9812151088,9812026821,9812142324,9992600825

visit us at: www.jagatgururampalji.org
e-mail: jagatgururampalji@yahoo.com

# -:विषय सूची:-

## भूमिका

अनादि कालदेखि नै मानिस पूर्ण शान्ति, सुख तथा अमृत्वको खोजीमा लागिरहका छन् । उनीहरू आफ्नो क्षमता अनुसार प्रयास गर्दै आइरहेका छन् तर उनीहरूका इच्छा आंकाक्षा पूरा भइरहेका छैनन् । यो इच्छा पूरा नहुनुको कारण सही बाटोको सही ज्ञान नहुनु हो । सबै मानिस चाहन्छन् कि कुनै काम गर्न नपरोस, मिठो खाना पाइयोस्, बस्नको लागि आकर्षक घर होस्, घुम्नको लागि सुन्दर तथा रमणिय पार्क, मनोरञ्जन गर्नको लागि सुमधुर संगीत, नाचगान, खेलकूद, मोजमस्ती गर्नका लागि उपयुक्त ब्यवस्था होस् अनि कहिल्यै रोग नलागोस्, बुढो पनि हुन नपरोस र मृत्यु नहोस् आदि । तर जुन संसारमा हामी बस्दछौं, यहाँ यस्तो कुनै ब्यवस्था देखा पर्देन र ती कुराहरू सम्भव पनि छैनन् । किनकी यो संसार नाशवान छ र यो संसारका सम्पूर्ण वस्तुहरू नाशवान छन् । यो संसारको राजा ब्रह्म (काल) हो जसले दैनिक एक लाख मानव सुक्ष्म शरीरको भोजन (खाना) गर्छ । उसले सम्पूर्ण प्राणीलाई कर्म, धर्म र पाप-पुण्य रूपी जालमा फसाएर तीन लोकको पिंजडामा कैंद गरेको छ । कबीर साहेब भन्नु हुन्छ किः-

कबीर, तीन लोक पिंजरा भया, पाप पुण्य दो जाल ।
सभी जीव भोजन भये, एक खाने वाला काल ।।
गरीब, एक पापी एक पुन्यी आया, एक है सूम दलेल रे ।
बिना भजन कोई काम नही आवै सब है जम की जेल रे ।।

उसले चाहदैन कि कुनै पनि प्राणी यो पिंजरा रूपी कैंद (कारागार) बाट बाहिर निस्कन पाओस् । उसको चाहना अनुसार कुनै जीव (प्राणी) ले आफ्नो निज घर सतलोकको जानकारी नपाऊन् । त्यसकारण वहाँले आफ्नो त्रिगुणी मायाद्वारा प्रत्येक जीवलाई अल्मल्याएर राखेका छन् । फेरी मानिसलाई उपरोक्त चाहना कहाँबाट उत्पन्न भएको होला ? यहाँ हामी सबैलाई मर्नु छ, सबै दुःखी र अशान्त छौं । जुन अवस्थालाई हामी यहाँ प्राप्त गर्न चाहन्छौं त्यो अवस्थामा हामी आफ्नो निज घर सतलोकमा र हन्थ्यौं । तर हामी काल ब्रह्मको लोकमा आएर फँसेका छौ र आफ्नो निज घरको बाटो बिराएका छौ । कबीर साहेब भन्नुहुन्छ किः-

इच्छा रुपी खेलन आया, तातैं सुख सागर नहीं पाया ।

यस काल ब्रह्मको लोकमा शान्ति, सुखको कुनै नाम निशान छैन । त्रिगुण मायाबाट उत्पन्न काम, क्रोध, लोभ, मोह, अहंकार, राग, द्वेष, हर्ष-शोक, नाफा-नोक्सान, मानसम्मान रूपी अवगुणहरूले हरेक जीवलाई दुखित बनाईरहेका छन् । यहाँ एउटा प्राणीले अरू प्राणीलाई मारेर खाइरहेका छन्, शोषण गर्दैछन्, इज्जत लुटिरहेका छन्, धन सम्पति लुटिरहेका छन्, शान्ति खोसिरहेका छन् । लाग्छ चारैतिर आगो दन्कि रहेको छ । तपाई शान्तिले बस्न चाहनुहुन्छ भने पनि अरूले शान्तले बस्न दिदैनन् । तपाईले

नचिताएता पनि चोरले चोरी गरेर लैजान्छ, घटना घटिरहन्छ, किसानको (फसल) बाली नष्ट भइरहेछ, व्यापारीको व्यापार ठप्प भइरहेछ, राजाको राज्य खोसिन्छ, स्वस्थ शरीरमा रोग लाग्छ अर्थात् यहाँ केहि सुरक्षित छैन । राजाको राज्य, इज्जतदारको इज्जत, धनीको धन, बलियोको बल र यहाँसम्म की हामी सबैको शरीर पनि अचानक खोसेर लैजान्छ । आमा-बुवाको सामुन्ने युवा छोराछोरी मर्छन, दुधे बालकलाई रूवाँउदै छोडेर आमा बुवाको मृत्यु हुन्छ, जवान बहिनी विधुवा हुन जान्छिन् र मान्छे पहाड जस्तो दुःख भोग्नका लागि विवश हुन्छन् ।

विचार गर्नुहोस् कि यो स्थान बस्नको लागि उपयुक्त छ त ? तर हामी विवश भएर यहाँ बसिरहेका छौं, किनकि यस कालको पिंजराबाट बाहिर निस्कनको लागि कुनै बाटो देखा पर्दैन । हामीमा अरूलाई दुःखी बनाउन र आफू पनि दुःख सहने बानी परी सकेको छ । किनकि हामीले आफ्नो निज घरलाई बिर्सीसकेका छौं । परम शान्ति तथा सुख यहाँ नभएर निज घर सतलोकमा छ । जहाँ जन्म मृत्यु हुँदैन, बुढापा हुँदैन, दुःख हुँदैन, लडाइ झगडा हुँदैन, रोग लाग्दैन, पैसाको लेनदेन हुँदैन, बिजुलीको विल तिर्नुपर्दैन, मनोरञ्जनको साधन किन्नु पर्दैन । त्यहाँ सबै कुरा परमात्माद्वारा निःशुल्क तथा अखण्ड छ । बन्दीछोड गरीबदासजी महाराजको वाणीमा प्रमाण छ किः-

बिन ही मुख सांरग राग सुन, बिन ही तंती तार । बिना सुर अलगोजे बजैं, नगर नांच घुमार ।।
घण्टा बाजै ताल नग, मंजीरे डंफ झांझ । मूरली मधूर सुहावनी, निसबासर और सांझ ।।
बीन बिहंगम बाजहिं, तरक तम्बूरे तीर । राग खण्ड नहीं होत है, बंध्या रहत समीर ।।
तरक नहीं तोरा नहीं, नाँही कशीस कबाब । अमृत प्याले मध पीवैं, ज्यों भाटी चवैं शराब ।।
मतवाले मस्तानपुर, गली-२ गुलजार । संख शराबी फिरत हैं, चलो तास बजार ।।
संख-संख पत्नी नाचैं, गावैं शब्द सुभान । चंद्र बदन सूरजमुखी, नांही मान गुमान ।।
संख हिंडोले नूर नग, झूलैं संत हजूर । तख्त धनी के पास कर, ऐसा मुलक जहूर ।।
नदी नाव नाले बगैं छूटैं फुहारे सुन्न । भरे होद सरवर सदा, नहीं पाप नहीं पुण्य ।।
ना कोई भिक्षुक दान दे, ना कोई हार व्यवहार । ना कोई जन्मे मरे, ऐसा देश हमार ।।
जहां संखों लहर मेहर की उपजैं, कहर जहां नहीं कोई ।
दासगरीब अचल अविनाशी, सुख का सागर सोई ।।

सतलोकमा मात्र एउटा रस परम शान्ति तथा सुख छ । जबसम्म हामी सतलोकमा जाँदैनौं तबसम्म हामी परमशान्ति, सुख तथा अमृत्वको प्राप्ति गर्न सक्दैनौं । सतलोकमा जानलाई तब सम्भव हुन्छ जब हामी पूर्ण संतबाट नाम उपदेश लिएर पूर्ण परमात्माको भक्ति अन्तिम साससम्म गरिरहन्छौं । यस किताबको माध्यमबाट हामी जुन सन्देश दिन चाहन्छौं त्यसमा कुनै देवी, देवता, धर्मको आलोचना नगरी सबै पवित्र धर्म ग्रन्थहरूमा (छुपेको) लुकेका गुढ रहस्य (मूल कुरा) को उजागर गरी यथार्थ भक्ति मार्ग बताउन चाहन्छौं, जुन वर्तमानको संत, मंहत तथा आचार्य गुरू साहेवान

शास्त्रहरूमा लुकेका गुढ रहस्य (मुल कुरा) लाई बुझ्न सकिएको छैन । कबीर साहेब आफ्नो वाणीमा भन्नुहुन्छ कि:-

वेद कतेब झुठे ना भाई, झुठे हैं सो समझे नांही ।

जसकारण भक्त समाजलाई ठूलो हानी भइरहेको छ । सबै आफ्नो अनुमानले अथवा गुरुहरूद्वारा बताए अनुसार शास्त्र विरूद्ध साधना गर्दैछन् । जसबाट न त मानसिक शान्ति मिल्छ, न त शारिरीक सुख, न त घर तथा कारोबारमा लाभ हुन्छ र न त परमेश्वरसँग साक्षात्कार हुन्छ, न त मुक्तिको प्राप्ति हुन्छ । यो सबै सुख कसरी मिल्छ तथा यो कुरा जान्नको लागि कि म को हुँ, कहाँबाट आएको हुँ, किन जन्म लिन्छु, किन मर्छु र किन दुःख भोग्छु ? आखिर यो सबै कसले गराइरहेको छ र परमेश्वर को हुन, कस्तो हुनुहुन्छ, कहाँ हुनुहुन्छ तथा कसरी मिल्नुहुन्छ ? ब्रह्मा, बिष्णु र शिवको आमा बुवा को हुन् र कसरी काल ब्रह्मको कारागारबाट छुटकारा पाएर आफ्नो निज घर सतलोकमा फिर्ता जान सक्छौ ? यो सबै यस किताबको माध्यमबाट प्रष्ट गरिएका छन्, जसले गर्दा यो किताब पढेर सम्पूर्ण भक्तात्माहरूको कल्याण सम्भव हुन सकोस् । यो किताब सतगुरू रामपालजी महाराजको प्रवचनको संग्रह हो जुन सत्य तथ्यमा आधारित छन् । हामीलाई पूर्ण विश्वास छ कि जुन पाठकवर्ग रूची तथा निष्पक्ष भावबाट पढेर अनुशरण गर्ने छन्, उसको कल्याण सम्भव छ ।

"आत्म प्राण उद्धार हीं, ऐसा धर्म नहीं और । कोटी अश्वमेघ यज्ञ, सकल समाना भौर ।।"

*भावार्थ* :- यदि एउटा आत्मालाई सतभक्ति मार्गमा ल्याएर उसको आत्म कल्याण गरायो भने करोड अश्वमेघ यज्ञ बराबरको फल मिल्छ र यो बराबर अरू कुनै धर्म हुँदैन । कबीर साहेब भन्नुहुन्छ कि मेरो यो ज्ञान यस्तो छ की यदि ज्ञानी पुरूष छ भने यो सुनेर आफ्नो हृदयमा बसाउछ र मूर्ख छ भने उसले सम्झन सक्दैन ।

'कबीर, ज्ञानी हो तो हृदय लगाई, मूर्ख हो तो गम ना पाई'

सत साहेब ।



# भक्ति मर्यादा

**"जीव हमारी जाति है, मानव धर्म हमारा ।**

**हिन्दु, मुस्लिम, सिक्ख, इसाई धर्म नही कोई न्यारा ।।"**

***प्रिय भक्तजनहरू !***

*आज भन्दा करीब पाँच हजार वर्ष अगाडी कुनै धर्म वा अन्य कुनै सम्प्रदाय थिएन । न हिन्दु, न मुस्लिम, न सिक्ख, न ईसाई थिए । एकमात्र मानव धर्म थियो । सबैको एउटै मानव धर्म थियो र अहिले पनि विद्यमान छ । तर जतिजति कलियुगको प्रभाव बढदै गयो त्यति नै हामीबीच मतभेदहरू बढदै गयो । कारण मात्र एउटै थियो कि धार्मिक कुल गुरूहरूद्वारा शास्त्रमा उल्लेखित सत्यतालाई लुकाइयो । कारण चाहे व्यक्तिगत स्वार्थ होस् वा आडम्बर। जसको परिणाम स्वरूप आज एक मानव धर्मका चार धर्म र अनेक सम्प्रदायहरू विभाजित भैसकेका छन् । जसको फलस्वरूप आपसमा मतभेद हुनु स्वभाविक नै हो । सबैका प्रभु/भगवान/राम/अल्लाह/रब/गाड/ खुदा/परमेश्वर एउटै हुन । यी मात्र भाषाका भिन्न पर्यायवाची शब्दहरू हुन । सबैले मान्छन् कि सबैका मालिक एउटै हुन् फेरी पनि यी अलग अलग धर्म सम्प्रदायहरू किन ?*

*यो कुरा बिल्कुल ठिकै हो कि सबैका मालिक/रब/खुदा/अल्लाह/गड/राम/परमेश्वर एउटै छ जसको वास्तविक नाम कबीर हो र उहाँ आफ्नो सत्यलोक/सतधाम/सच्चखण्डमा मानव सदृश्य साकार रूपमा बस्नुहुन्छ । तर अहिले हिन्दु भन्छन् हाम्रो राम ठूलो हो, मुस्लिम भन्छन् हाम्रो अल्लाह ठूलो हो , ईसाई भन्छन् कि हाम्रो ईसामसीह ठूलो र सिक्ख भन्छन् कि हाम्रो गुरू नानक साहेबजी ठूलो हुन् । यसरी भन्छन् जसरी चार वटा अवोध बालकहरूले भन्छ यो मेरो पापा, दोस्रो भन्छ यो मेरो पापा हो तेरो होइन, तेस्रो भन्छ यो मेरो बुवा ज्यू हो जो सबैभन्दा ठूलो हो र चौथो भन्छ अरे मूर्खहरू यो त मेरो डैडी हो, तिम्रो होइन । जब कि उनी चारैका पिता उही एक हुन् । तिनै अबुझ केटाकेटीहरू जस्तै आज हाम्रो मानव समाज लड्दै छन् ।*

कोई कहे मेरा राम बडा है, कोई कहे खुदाई रे ।
कोई कहे हमारा इसामसीह बडा, बाटा रहे लगाई रे ।।

*जबकि हाम्रा सबै धार्मिक ग्रंथ र शास्त्रहरूमा उनै एक प्रभु/मालिक/रब /खुदा/अल्लाह/राम/साहेब/ गौड/परमेश्वरको प्रत्यक्ष नाम लेखेर महिमा गाएको छ कि उही एक मालिक/प्रभु कबीर साहेब हुन् जो सत्यलोकमा मानव सदृश्य स्वरूपका आकारमा बस्नु हुन्छ ।*

*वेद, गीता, कुरान र गुरू ग्रंथ साहेब यी सबै करीब करीब मिल्दो जुल्दै नै छन् । यजुर्वेद अ. ५ को श्लोक नं. ३२ मा, सामवेदको संख्या नं. १४००, ८२२ मा, अथर्वेदको काण्ड नं. ४ को अनुवाक १ को श्लोक नं. ७, ऋगवेदमो म. १ अ. १ को सुक्त ११ को श्लोक नं. ४ मा कबीर नाम लेखेर बताइएको छ कि पूर्णब्रम्ह कबीर हो जो सत्यलोकमा आकारमा बस्नु*

*हुन्छ । गीताजी चारै वेदको संक्षिप्त सार हो । गीताजीको अं १५ को श्लोक नं. १६–१७, अध्याय १८ को श्लोक नं. ४६, ६२, अ. ८ को श्लोक नं. ८ देखि १० सम्म र २२ मा, अ. १५ को श्लोक नं. १,२,४ मा उनै पूर्णपरमात्माको भक्ति गर्नु पर्ने इशारा गरिएको छ । श्री गुरू ग्रंथ साहेब पृष्ठ नं. २४ मा र पृष्ठ नं. ७२१ म नाम लेखेर कबीर साहेबको महिमा गाइएको छ, यस्तै कुरान र बाइवल दुवै एउटै शास्त्र हुन । दुवै लगभग एउटै सन्देश दिन्छन् कि उनै कबीर अल्लाहको महिमा बयान गर्नुहोस् जसको शक्तिले यो सम्पूर्ण सृष्टि चलायमान छ । कुरान शरीफ सुरत फुर्कानी नं. २५ को आयात नं. ५२ देखी ५९ सम्म कबीरन्, खबीरा, कबीरू आदि शब्द लेखेर उनै एक कबीर अल्लाहको पवित्र बयान गरिएको छ कि ऐ पैगम्बर ( मुहम्मद) उनै कबीर अल्लाहको पवित्र बयान गर जो छ दिनमा नै आफ्नो शक्तिद्वारा सृष्टि रचना गरी सातौं दिन तखतामा बिराजमान हुनु भयो अर्थात् सत्यलोकमा गई विश्राम गर्नु भयो । त्यो अल्लाह (प्रभु) कबीर हुन् । यसैको प्रमाण बाईवल भित्र उत्पति ग्रंथमा सृष्टि क्रममा बाईवलको प्रारम्भमा नै सात दिनको रचनामा १:२०–२:५ मा छ ।*

*सबै संत र ग्रंथहरूको सार यिनै हुन् कि पूर्णगुरू जोसँग तिनै नाम होस् र नामदान गर्ने अधिकार पनि होस् नाम उपदेश लिएर जीवलाई जन्म मृत्यु रोगबाट छुटकारा पाउनु पर्ने हो । हाम्रो उद्देश्य तपाईलाई कालको जालबाट (कारागारबाट) मुक्त गराई आफ्नो मूल मालिक कविर्देव (कबीर साहेब) को सत्यलोकलाई प्राप्त गराउनु हो । कविर्देवले आफ्नो वाणीमा भन्नु हुन्छ कि एउटा जीवलाई कालको साधनाबाट हटाएर पूर्णगुरूबाट सत्य उपदेश दिलाउन लगाउनुको पुण्य त्यति हुन्छ जति करोडौं गाई, बाख्रा आदिलाई कसाईको हातबाट छुटाउनु हो । किनकी यो अबोध मानव शरीरधारी प्राणी गलत गुरूहरूद्वारा बताइएको शास्त्र विरूद्व साधनाले कालको जालमा जेलिएर अनगिन्ती दुःखदायी चौरासी लाख योनीको दुःख भोगी रहन्छन् । जब यो जिवात्मा कविर्देवको शरणमा पूर्णसतगुरूको माध्यमबाट आईपुग्छ र नामसँग जोडिन्छ अनि मात्रै उसको जन्म, मृत्यु रूपी कष्ट सदाको लागी समाप्त हुन जान्छ र सत्यलोकमा वास्तविक परम शान्ति प्राप्त हुन्छ ।*

*अचेल गुरूहरू धेरै भन्दा धेरै चेला (शिष्य) बनाएर आफ्नो योग्यताको प्रमाण दिन्छन् अर्थात् हरेक जना दुई चार कथा सिकेर भन्छन् कि म पनि नाम दान गर्छु र सिधा साधा आत्मालाई कालको जालमा फसाई दिन्छन् । किन कि शास्त्र विरूद्व नाम उपदेश दिने र लिनेहरू सबै निश्चित नै नर्कको भागिदारी हुनेछन् । तिनीहरूलाई नर्कमा उल्टो झुण्ड्याइने छ । यो भनाई शास्त्रहरूले (गीता, वेद, ग्रंथ) नै भन्छन् । यसै कथनलाई सिद्व गर्न एउटा संक्षिप्त कथा भन्दछु –*

*एक समयको कुरा हो । सबैलाई थाहा भयो कि राजा परीक्षितलाई सातौं दिनका दिन सर्पले डसेर उनको मृत्यु हुनेछ । सबैको राय सल्लाहमा उक्त सात दिनसम्म राजा पर ीक्षितलाई भगवत कथा सुनाइयोस् जसले राजाको मोह यहाँबाट हटेर प्रभु चिन्तनमा लागोस् किन कि मर्ने बेलामा जसको जस्तो भावना हुन्छ त्यो उसैको प्राप्त हुन्छ । सबैको रायमा यो अति उत्तम विचार थियो । तर अब कथा कसले भन्ने ? यसमा प्रश्नवाचक चिन्ह लाग्यो ।*

*त्यस बेला त्यहाँ उपस्थित सबै महर्षीहरूका साथै श्रीमद्‌भगवत सुधा सागरको रचयिता महर्षी वेद व्यासजीले पनि आफूलाई सुयोग्य कथावाचक ठानेनन् । किनकि उनीहरूलाई थाहा थियो कि आफूहरूमा त्यति सामर्थता छैन भने किन एउटा जीवको जीवनलाई नष्ट गरी पापको भागीदार बनौं । किनकी सातौं दिनमा परिणाम निश्चित थियो । यसैले सात दिनसम्म कथा सुनाउने हिम्मत कसैले गरेनन् । किनकि सबैलाई आफ्नो सामर्थ्य थाहा हुन्छ । स्वर्गबाट सुकदेवजीलाई भगवत कथा सुनाउन बोलाइयो अनि मात्र राजा परीक्षितको मोह यहाँबाट हट्‌यो र स्वर्ग प्राप्ती भयो । स्वर्गमा सुख भोग गरे पछि नरकमा अनि फेरी चौरासी लाखमा चक्कर काट्‌ने छ । यो यहाँको अटल नियम छ । यो उपलब्धि पनि तीन लोकको पूर्णगुरू बिना प्राप्त हुन सक्तैन ।*

*ठीक त्यस्तै कुनै ठाउँमा प्रधानमन्त्रीको आगमन हुन्छ त्यसभन्दा अगाडी दुई चार राम्रो वक्ता /गायक र तबला बैंजु बजाउने वाला हुन्छन् जो धेरै सुरिलो आकर्षक आवाजमा दर्शकलाई प्रभावित पार्छन् । तर उनीहरूले भन्ने गरेको कुराहरू मध्ये एउटा पनि गर्न सक्षम छैनन् तर जब प्रधानमंत्री आउँछन् उनले थोरै शब्दमा भन्नु हुन्छ कि आगरामा इन्टरनेशनल कलेज बनाई देउ, चण्डीगढमा इन्टरनेशनल यूनिभर्सिटी बनाई देउ आदि, आदि । मात्र यति भनेर प्रधानमन्त्री साहेब गई दिनु हुन्छ र उनले भनेको भोलि पल्ट नै त्यो काम थालनी भै दिन्छ किनकि उनको वचनमा शक्ति छ । र त्यही कुरा म र तपाई या आम मानिसले भन्यो भने हाम्रो मूर्खता हुनेछ । किन कि हाम्रो बोलीमा त्यति शक्ति छैन । वब कि प्रधानमन्त्रीको लागी यो साधारण कुरा हो । यी तथ्यहरूलाई प्रमाणित गर्नको लागी केही निम्न लिखित वाणीहरू प्राप्त गर्नुहोस् ।*

कबीर, पंडित और मशालची, दोनों सूझैं नाहिं । औरों ने करैं चांदना, आप अंधेरे माहिं ।।
कबीर, करणी तज कथनी कथैं, अज्ञानी दिन रात । कुकर ज्यों भौंकत फिरैं, सुनी सुनाई बात ।।
गरीब, बीजक की बातां कहैं, बीजक नाहिं हाथ । पृथ्वी डोबन उतरे, कहै-कहै मीठी बात ।।
गरीब, बीजक की बातां कहैं, बीजक नाहिं पास । औरों को प्रमोध हीं, आपन चले निराश ।।
गरीब, कथनी के शूरे घने, कथैं अटम्बर ज्ञान । बाहर ज्वाब आवै नहीं, लीद करैं मैदान ।।

*कथा वाच्नु र नाम उपदेश दिनु केटाकेटीको खेल होइन कि पुस्तक लिएर कथा वाच्नु, रामायण पाठ गर्नु, गीताजी को पाठ गर्नु, ग्रन्थ साहेबको पाठ गर्नु अर्थात् सतसंग गर्नु र नाम पनि दिई हाल्नु आदि आदि । पूर्णसंतलाई नै कथा भन्ने र गर्ने अधिकार हुन्छ र कथाको समापन पनि उनैबाट हुन सक्छ । कारण पुर्ण संतको वचनमा शक्ति हुन्छ । जसर ी सुकदेवजीको शब्दमा शक्ति थियो । मानौं कोहि सतसंगमा आँपको महिमा बयान गरी भनोस् कि आँप धेरै गुलियो हुन्छ, फलको राजा हो, त्यसको रंग पहेंलो हुन्छ इत्यादि र कोही आएर भनोस् कि ल्याउनुहोस् आँप । अनि कथा वाचक सतसंगीले भनोस् कि मसँग आँप छैन । त्यसपछि लिने मानिसले भनोस् कि आँप कहाँ पाइन्छ ? त्यसलाई जवाफ दिइयोस् कि थाहा छैन, आँप त निराकार हो, त्यो देखिदैन । फेरि लिने मान्छेले भन्ला अरे मूर्ख, जब तँसँग आँप नै छैन र आँप कहाँ पाइएला यो पनि थाहा छैन, फेरि भन्छौ त्यो निराकार हो, अनि त*

*व्यर्थमा हल्ला गर्दै हिड्छौं । भन्नुको तात्पर्य के हो भने तत्त्वज्ञान रहित र विना अधिकारी कथा वाचक अनि त्यसको मुखबाट कथा सुन्ने मानिस सबै नरकको अधिकारी हुनेछन् ।*

*यदि कुनै मानिस आफू खुशी गुरू बनेर शिष्य बनाउने गर्छ भने संभन्नुहोस् उसले आफ्नो टाउकोमा अभ्र भार थप्दै जान्छ । किनकी परमेश्वरको नियम छ कि जबसम्म शिष्यको उद्धार हुँदैन तबसम्म गुरूले बारम्बार जन्म लिई रहनुपर्छ । पूर्णगुरू अधुरो शिष्यबाट छुट्टी पाउनलाई यस्तो लीला गरी रहनु हुन्छ जसले अज्ञानी शिष्यहरूलाई गुरू प्रति घृणा हुन जान्छ । जस्तो कबीर साहेब जब काशीमा प्रकट हुनु भयो त्यस बेला कबीर साहेबको चौसठ्ठी लाख शिष्य बन्न पुग्यो । तिनीहरूको परीक्षा लिनको निमित्त कबीर साहेबले काशी शहरकी एउटी प्रख्यात वेश्यालाई सतसंग ज्ञान संभाउनको लागि त्यसको घर जान थाल्नु भयो । जसलाई देखेर वा सुनेर शिष्यहरूको मनमा गुरू प्रति घृणा हुन थाल्यो र सबैको आफ्नो गुरू प्रति विश्वास हुन छोड्यो मात्र दुईलाई छोडेर सबै शिष्यहरू गुरू विहिन हुन गए । सतगुरू गरीबदासजी महाराजको वाणीमा प्रमाण छ :-*

गरीब, चंडाली के चौंक मे, सतगुरू बैठे जाय । चौसठ लाख गारत गए, दो रहे सतगुरू पाय ।।
भडवा भडवा सब कहैं, जानत नाहिं खोज । दास गरीब कबीर करम से, बांटत सिरका बोभ्र ।।

*हामी तपाईसँग यही प्रार्थना गर्छौं कि सोची विचारी सौदा गर्नुहोस् । सामवेदको श्लोक नं. ८२२ मा भनिएको छ कि जीवको मुक्ति तीन नामले हुनेछ । प्रथम ऊँ, दोस्रो सतनाम (तत्) र तेस्रो सारनाम (सत्) यिनै कुरा गीताजीले पनि प्रमाणित गर्छ कि ऊँ-तत्-सत् र श्री गुरू ग्रन्थ साहेब पनि यही सतनामजीने इशारा गर्दछ । सतनाम सतनाम कुनै जप गर्ने नाम होइन । यो त त्यस नाम तिर इशारा गर्दै छ जो एउटा साचो नाम हो । यसै गर ी सारनाम पनि । एक्लै ऊँ मंत्रको कुनै कामको छैन । यी तीनै नाम र नाम दिने आज्ञा मलाई मेरो गुरूदेव स्वामी रामदेवानन्दजी महाराजद्वारा बक्सिएको हो जुन कबीर साहेब देखि पुस्तौं पुस्ता चल्दै आएको छ । पहिला तपाई सतसंग सुन्नुहोस, सेवा गर्नुहोस् जसले तपाईको भक्तिरूपी खेत मलिलो हुन जान्छ ।*

कबीर, मानुष जन्म पाय कर, नही रटैं हरि नाम । जैसे कुआा जल बिना, खुदवाया किस काम ।।
कबीर, एक हरि के नाम बिना, ये राजा ऋषभ हो । माटी ढोवै कुम्हार की, घास न डालेको ।।

*त्यसपछि आफ्नो मलिनो खेतमा विउ छर्नु पर्छ । शास्त्रहरू (कबीर साहेबको वाणी) वेद, गीता, पुराण, कुराण, धर्मदास साहेब र अन्य संतहरूको वाणी) को अध्ययनले मुक्ति हुँदैन । यी सबै शास्त्रहरूको निचोड एउटै छकि पूर्णमुक्तिको लागि पूर्णपरमात्मा कबीर साहेबको प्रतिनिधि संत (जसलाई उनको गुरूबाट नाम दिने आज्ञा पनि होस्) बाट नाम उपदेश लिएर आत्म कल्याण गराउनु पर्ने हो । यदि नाम उपदेश दिइएन भने –*

नाम बिना सूना नगर, पडया सकल में शोर ।
लूट न लूटी बंदगी, हो गया हंसा भोर ।।
अदली आरती अदल अजुनी, नाम बिना है काया सूनी ।

झूठी काया खाल लुहारा, इंगला पिंगला सुषमन द्वारा ।
कृतध्नी भूले नर लोई, जा घट निश्चय नाम न होई ।
सो नर कीट पतंग भुजंगा, चौरासी में धर है अंगा ।

*यदि बिउ छरिएन भने आत्मरूपी खेत जोताउनु, मल हाल्नु बेकार हुन्छ । भन्नुको अर्थ यो छ कि यसले तपाईलाई ज्ञान हुन्छ जो आवश्यक छ । तर पूर्णगुरूद्वारा नाम उपदेश लिनु अर्थात् बिउ छर्नु पनि अति आवश्यक छ । नाम पनि त्यही नै जप गर्नु पर्छ जुन गुरू नानक साहेबजीले जपनु भएको थियो, गरीबदास साहेबलेजीनु भएको थियो, धर्मदास साहेब आदि संतहरूले जप्नु भएको थियो । यस बाहेक अन्य नामबाट जीवको मुक्ति हुँदैन ।*

*यसैले तपाई सबैले नाम उपदेश लिएर आफ्नो भक्तिरूपी धन जोड्न प्रारम्भ गर्नुहोस् र अरूलाई पनि भन्नुहोस् । छिटो भन्दा छिटो गर्नुहोस् । किनकी कहिले कुन बेला यस शरीरलाई त्याग्ने समय आई पुग्छ थाहा छैन । गुरू नानक देवजी पनि भन्नु हुन्छ कि -*

ना जाने ये काल की कर डारै, किस विधि ढल जा पासा वे ।
जिन्हादे सिर ते मौत खुडगदी, उन्हानूं केडा हांसा वे ।।

**कबीर साहेब भन्नु हुन्छ कि -**

कबीर, स्वांस-स्वांस मे नाम जपो, व्यर्था स्वांस मत खोए ।
न जाने इस स्वांस का, आवन हो के ना होए ।।
सतगुरु सोई जो सारनाम दृढावै, और गुरु कोई काम न आवै ।
'सार नाम बिन पुरुष (भगवान) द्रोही'

*अर्थात् जो गुरू सारनाम व सार शब्द दिदैंन अथवा त्यसलाई आफ्नो गुरूबाट नाम दिने अधिकार (आज्ञा) प्राप्त छैन अथवा शास्त्रहरूको अध्ययन गरी कोहि मनमुखी गुरू यी नाम दिए पनि त्यो गुरू र तिनका शिष्यहरूलाई नरकमा राखिने छ । त्यो गुरू भगवानको दुश्मन हो, द्रोही हो । त्यसलाई भगवानको दरवारमा उल्टो झुण्डाइने छ ।*

*अब भक्त समाजमा नक्कली गुरूहरूद्वारा गलत धारणा फिजाइएको छ कि एक पटक गुरू धारण गरे पछि अर्को गुरू बनाउनु हुँदैन । अलि विचार गरेर हेर्नुस् कि गुरू हाम्रो जन्म मृत्यु रूपी रोगलाई नाश गर्ने वैद्य हुनुहुन्छ । यदी एक वैद्यले हाम्रो रोग ठीक पार्न सक्तैन भने हामी अर्को राम्रो वैद्य (डाक्टर) को मा जान्छौं जसले हाम्रो ज्यान जाने रोग ठीक पार्न सक्तछ । जस्तै धर्मदास साहेबको पहिलो गुरू श्री रूपदासजी थिए । तर जब धर्मदासजीलाई थाहा भयो कि यो गुरू पूर्णमुक्ति दाता होइन भन्ने त्यसैबेला त्यसलाई त्यागेर पूर्णब्रह्म परमेश्वर सत्यपुरूष कबीर साहेबलाई आफ्नो गुरू बनाउनु भयो र पूर्णमोक्ष सत्यलोकमा प्राप्त गर्नुभयो । ठीक यसरी नै अपूर्ण गुरूलाई तुरून्तै त्याग्नु पर्दछ ।*

'झुठे गुरु के पक्ष को, तजत न कीजै वारि'

*(गुरू र नाम महिमाको वाणी)*

गरीब, बिन उपदेश अचंभ है, क्यो जीवत हैं प्राण । बिन भक्ति कहा ठौर है, नर नाहिं पाषाण ।।२।
गरीब, एक हरि के नाम बिना, नारि कुतिया हो । गली-२ भौंकत फिरै, टूक ना डालै को ।।३।
गरीब, बीबी पडदे रहैं थी, डयोढी लगती बार । गात उघाडे फिरती है, बन कुतिया बाजार ।।४।
गरीब, नकबेसर नक से बनी, पहरत हार हमेल । सुन्दरी से सुनही(कुत्तिया) बनी, सुन साहिब के खेल ।।५।
गरीब, हरि के नाम बिना, राजा रषभ होए । माटी लदै कुम्हार कै, घास ना डाले कोए । ।६।
गरीब, राम कृष्ण से कौन बडा, उन्हों भी गुरू किन्ह । तीन लोक के वे धनी, गुरू आगे आधिन । ।७।
गरीब, गर्भ योगेश्वर गुरू बिना, लागा हरि की सेव । कहैं कबीर स्वर्ग से, फेर दिया सुखदेव । ।८।
गरीब, राजा जनक से नाम ले, किन्ही हरी की सेव (पूजा) । कहै कबीर बैकुण्ठ मे उल्ट मिले सुखदेव ।।९।
गरीब, सतगुरू के उपदेश का लाया एक विचार । जै सतगुरू मिलते नही, जाता नरक द्धार ।।१०।
गरीब, नरक द्धार में दूत सब, करते खैंचा तान । उनतें कबहु ना छुटता, फिर फिरता चारों खान ।।११।
गरीब, चा खानी में भ्रमता, कबहु ना लगता पार । सो फेरा सब मिट गया, सतगुरू के उपकार ।।१२।
गरीब, सात समुन्द्र मसि करूं, लेखनी करूं बनराय । धरती का कागद करूं, गुरू गुण लिखा न जाए ।।१३।
गरीब, गुरू बडड़े गोविन्द से, मन में देख विचार । हरी सुमरे सो रह गए, गुरू भजे हुए पार ।।१४।
गरीब, गुरू गोविन्द दोऊ खडड़े काके लागुं पाय । बलिहारी गुरू आपने, जिन गोविन्द दिया मिलाय ।।१५।
गरीब, हरी के रूठतां, गुरू की शरण में जाय । कबीर गुरू जै रूठजां, हरी नही होत सहाय ।।१६।

## नाम कुन रामको जप्नु छ ?

गीताजीको अध्याय नं. १५ को श्लोक नं. १६

*द्वौ, इमौ, पुरूषौ, लोके, क्षरः, च, अक्षरः, एव, च, क्षरः, सर्वाणि, भूतानी, कूटस्थः, अक्षर ः, उच्यते ।।*

*अनुवाद : यस संसारमा दुई किसिमका भगवान छन् नाशवान र अविनाशी र सम्पूर्ण भूतप्राणीहरूको शरीर त नाशवान र जीवात्मा अविनाशी भनिन्छ ।*

गीताजीको अध्याय नं. १५ को श्लोक नं. १७

*उत्तमः, पुरूषः, तु, अन्यः, परमात्मा, इति, उदाहृतः, यः, लोकत्रयम् आविश्य, बिभर्ति, अव्ययः, ईश्वरः ।।*

*अनुवाद : उत्तम भगवान त अन्य नै हो जो तिनै लोकमा प्रवेश गरी सबैको धारण पोषण गर्दछ एवम् अविनाशी परमेश्वर परमात्मा यस प्रकार भनिएको छ ।*

कबीर, अक्षर पुरुष एक पेडड़ है, निरंजन बाकी डार ।
त्रिदेवा (बह्मा, विष्णु, शिव) शाखा भये, पात भया संसार ।।
कबीर, तीन देवको सब कोई ध्यावै, चौथा देवका मरम न पावै ।
चौथा छांडि पाचम ध्यावै, कहै कबीर सो हमरे आवै ।।
कबीर, तीन गुणन की भक्ति में, भूलि पर्‍यौ संसार ।
कहै कबीर निज नाम बिन, कैसे उतरै पार ।।
कबीर, ओंकार नाम ब्रह्म (काल) का, यह कर्ता मति जानी ।

सांचा शब्द कबीर का, परदा माहिं पहिचानी ।।
कबीर, तीन लोक सब रामजीत है, जान मुक्ति को धाम ।
रामचन्द्र वसिष्ठ गुरु किया, तिन कहि सुनायो नाम ।।
कबीर, राम कृष्ण अवतार है, इनका नाहीं संसार ।
जिन साहब संसार किया, सो किनहु न जनम्यां नारि ।।
कबीर, चार भुजाके भजनमें, भूलि परे सब संत ।
कबिरा सुमिरै तासु को, जाके भुजा अनन्त ।।
कबीर, वाशिष्ट मुनि से तत्वेता ज्ञानी, शोध कर लग्न धरै ।
सीता हरण मरण दशरथ को, बन बन राम फिरै ।।
कबीर, समुन्द्र पाटि लंका गये, सीता को भरतार ।
ताहि अगस्त मुनि पीय गयो, इनमें को करतार ।।
कबीर, गोवर्धन कृष्णजी उठाया, द्रोणागिरि हनुमंत ।
शेष नाग सब सृष्टी उठाई, इनमें को भगवंत ।।
कबीर, दुर्वासा कोपे तहा, समझ न आई नीच ।
छप्पन कोटि यादव कटे मची रुधिर की कीच ।।
कबीर, काटे बंधन विपति में, कठिन किया संग्राम ।
चीन्हो रे नर प्राणियां, गरुड बडो की राम ।।
कबीर, कह कबीर चित चेतहू, शब्द करौ निरुवार ।
श्री रामचन्द्र को कर्ता कहत है, भूलि पर्‍यो संसार ।।
कबीर, जिन राम कृष्ण निरंजन किया, सो तो करता न्यार ।
अंधा ज्ञान न बूझई, कहै कबीर बिचार ।।
कबीर, तीन गुणन (ब्रह्मा, विष्णु, शिव) की भक्ति में, भूल पडयो संसार ।
कहै कबीर निज नाम बिना, कैसे उतरो पार ।।

## ।।शब्द।। (संत रामपाल दास रचित)

युद्ध जीत कर पांडव, खुशी हुए अपार । इन्द्रप्रस्थ की गद्दी पर, युधिष्ठिर की सरकार ।।१।।
एक दिन अर्जुन पूछता, सुन कृष्ण भगवान । एक बार फिर सुना दियो, वो निर्मल गीता ज्ञान ।।२।।
घमासान युद्ध के कारण, भूल पडी है मोहें । ज्यों का त्यों कहना भगवन्, तनिक न अन्तर होए ।।३।।
ऋषि मुनि और देवता, सबको रहे तुम खाय । इनको भी नही छोडा आपने, रहे तुम्हारा ही गुण गाय ।।४।।
कृष्ण बोले अर्जुन से, यह गलती क्यों किन्ह । ऐसे निर्मल ज्ञान को भूल गया बुद्धिहीन ।।५।।
अब मुझे भी कुछ याद नही, भूल पडी नीदान । ज्यों का त्यों उस गीता का मैं, नही कर सकता गुणगान ।।६।।
स्वयं श्री कृष्णको याद नहीं और अर्जुनको धमकावे । बुद्धि काल के हाथ है, चाहे त्रिलोकी नाथ कहलावे ।।७।।
ज्ञान हीन प्रचारका, ज्ञान कथें दिन रात । जो सर्व को खाने वाला, कहें उसी की बात ।।८।।
सब कहें भगवान कृपालु है, कृपा करें दयाल । जिसकी सब पूजा करें, वह स्वयं कहै मैं काल ।।९।।
मारै खावै सबको, वह कैसा कृपाल । कुत्ते गधे सुअर बनावै है, फिर भी दीन दयाल ।।१०।।
बाईबल वेद कुरान है, जैसे चांद प्रकास । सूरज ज्ञान कबीर का, करै तिमर का नाश ।।११।।
रामपाल साची कहै, करो विवेक विचार । सतनाम व सारनाम, यही मन्त्र है सार ।।१२।।

कबीर हमारा राम है, वो है दीन दयाल । संकट मोचन कष्ट हरण, गुण गावै रामपाल ।।१३।।

## ।।शब्द।। (संत रामपाल दास रचित)

ब्रह्मा विष्णु शिव, हैं तीन लोक प्रधान । अष्टंगी इनकी माता है, और पिता काल भगवान ।।१।।
एक लाख को काल, नित खावै सीना ताण । ब्रह्मा बनावै विष्णु पालै, शिव करदे कल्याण ।।२।।
अर्जुन डर के पूछत है, यह कौन रुप भगवान । कहै निरंजन मैं काल हू, सबको आया खान ।।३।।
ब्रह्म नाम इसी का है, वेद करें गुणगान । जन्म मरण चौरासी, यह इसका संविधान ।।४।।
चार राम की भक्ति में, लग रहा संसार । पाचवें राम का ज्ञान नहीं, जो पार उतारनहार ।।५।।
ब्रह्मा-विष्णु-शिव तीनों गुण है दूसरा प्रकृति का जाल । लाख जीव नित भक्षण करें, राम तीसरा काल ।।६।।
अक्षर पुरुष है राम चौथा, जैसे चन्द्रमा जान । पाचवा राम कबीर है, जैसे उदय हुआ भान ।।७।।
रामदेवानन्द गुरुजी, कर गए नजर निहाल । सतनाम का दिया खजाना, बरतै रामपाल ।।८।।

## नाम लिने मानिसहरूको लागि आवश्यक जानकारी

*१. पूर्ण गुरूको पहिचान – आज कलियुगमा भक्त समाज सामू पूर्णगुरूको पहिचान गर्नु सबैभन्दा कठीन प्रश्न बनेको छ । तर यसको उत्तर सबभन्दा सानो र साधारण नै छ कि जो गुरू शास्त्र अनुसार भक्ति गर्छ र आफ्नो शिष्यहरूद्वारा गराउँदछ त्यही पूर्णसंत हो । भक्ति मार्गको संविधान धार्मिक शास्त्र जस्तै - कबीर साहेबको वाणी, नानक साहेबको वाणी, संत गरीबदासजी महाराजको वाणी, संत धर्मदासजी साहेबको वाणी, वेद, गीता, पुराण, कुरान, पवित्र बाईबल आदि छन् । जो कोही संत शास्त्र अनुसार भक्ति साधना भन्दछ र भक्त समाजलाई मार्ग दर्शन गराउँदछ भने ऊ पूर्णगुरू हो अन्यथा ऊ भक्त समाजको घोर शत्रु हो जसले शास्त्र विरूद्ध साधना गराइरहेको छ । यो अमूल्य मानव जन्मसँग हेलचेक्राई गरि रहेको छ । यस्तो गुरू वा संतलाई भगवानको दरबारमा घोर नर्कमा उल्टो झुण्डयाइने छ ।*

*उदाहरणको लागी कुनै शिक्षक सिलेबल्स (पाठयक्रम) भन्दा बाहिरको शिक्षा दिन्छ भने त्यो विद्यार्थीहरूको शत्रु हो ।*

*गीता अध्याय नं. ७ को श्लोक नं. १५*

*न, माम्, दुष्कृतिनः मूढाः, प्रपद्यन्ते, नराधमाः, मायया, अपहृतज्ञानाः, आसुरम्, भावम्, आश्रिताः ।।*

*अनुवाद : मायाले गर्दा जसको ज्ञान हरण भै सकेको छ त्यस्तो असुर स्वभाव धारण गरेको मनुष्य नीच दुषित कर्म गर्नेहरू मूर्खहरूले मलाई भज्दैनन् अर्थात् उनीहरू तीन गुण (रजोगुण-ब्रह्मा, सतोगुण-विष्णु, तमोगुण-शिव) हरूको नै साधना गरि रहने छन् ।*

*यर्जुवेद अध्याय नं. ४० श्लोक नं. १० (संत रामपाल दासद्वारा भाषा भाषीत)*

*अन्यदेवाहुःसम्भवादन्यदाहुरसम्भवात्, इति शुश्रुम धीराणं ये नस्तद्विचचक्षिरे ।।१०।।*

*नेपाली अनुवाद :- परमात्माको बारेमा सामान्यतया निराकार अर्थात् कहिले पनि न जन्मनेलाई भदन्छन् । अर्को आकारमा अर्थात् जन्म लिएर अवतार रूपमा आउनेवाला भन्दछन् । जो टिकाउ अर्थात् पूर्णज्ञानी राम्ररी सुनाउँछन् त्यसलाई यस प्रकार सही तवरमा*

*उही स्वरूप यथार्थ रूपमा भिन्न भिन्न रूपबाट प्रत्यक्ष ज्ञान गराउछन् ।*

*गीता अध्याय नं. ४ का श्लोक नं. ३४*

*तत्, विद्धि, प्रणिपातेन, परिप्रश्नेन, सेवया,*
*उपदेक्ष्यन्ति, ते, ज्ञानम्, ज्ञानिनः, तत्वदर्शिनः ।।*

*अनुवाद : उसलाई बुझ त्यो पूर्णपरमात्माको ज्ञान र समाधानलाई चिन्नेहरू संतहरूको भलीभाँति दण्डवत् प्रणाम गर्नाले तिनको सेवा गर्नाले र कपट छोडेर सरलतापूर्वक प्रश्न गर्नाले उनी परमात्म तत्त्वको भली भाँति जान्नेहरू ज्ञानी महात्मा तपाईलाई त्यो तत्त्वज्ञानको उपदेश गर्नु हुनेछ ।*

*२. नशालु पदार्थहरूको सेवन निषेध :- हुक्का, रक्सी, बीयर, सुर्ती, खैनी, बीडी, सिगरेट, हुलास सुँघने, गुटका, मासु, अण्डा, सुल्फा, अफीम, गाँजा र अन्य नशालु चीजहरूको सेवन त पर जाओस् कसैलाई नशालु वस्तु ल्याएर पनि दिने हैन । बन्दी छोड गरीबदासजी महाराज यी सबै नशालु वस्तुहरूलाई धेरै नराम्रो भन्नु हुँदै आफ्नो वाणीमा पनि भन्नु हुन्छ कि -*

सुरापान मद्य मांसाहारी, गमन करै भोगैं पर नारी । सतर जन्म कटत हैं शीशं, साक्षी साबिह है जगदीश ।।
पर द्वारा स्त्री का खोलै, सतर जन्म अंधा होवै डोलै । मदिरा पीवै कडवा पानी, सत्तर जन्म श्वान के जानी ।।
गरीब, हुक्का हरदम पिवते, लाल मिलावैं धूर । इसमें संशय है नहीं, जन्म पिछले सूर ।।१।।
गरीब, सो नारी जारी रै, सुरा पान सौ बार । एक चिलम हुक्का भरै, डुबै काली धार ।।२।।
गरीब, सूर गऊ कुं खात है, भक्ति बिहुनें राड । भांग तम्बाखु खा गए, सोचाबत हैं हाड ।।३।।
गरीब, भांग तम्बाखू पीव हीं, नास नाक में देत । गौस्त मट्टी खाये कर, जंगली बनें प्रेत ।।४।।
गरीब, पान तम्बाखु चाब हीं, नास नाक में देत । सो तो इरानै गए, ज्यूं भडभूजे का रेत ।।५।।
गरीब, भांग तम्बाखू पीव हीं, गोस्त गला कबाब । मोर मृग कूं भखत हैं, देगें कहां जवाब ।।६।।

*३. तीर्थ स्थानहरूमा जान निषेध :- कुनै किसिमको कुनै पनि व्रत राख्न हुदैन् । कुनै तीर्थ यात्रा नगर्ने, कुनै गंगा ननुहाउने आदि, कुनै अन्य धार्मिक स्थलमा नुहाउन वा दर्शन गर्न नजाने । यस मन्दिरमा भगवान छ भनेर कुनै पनि मन्दिर वा ईस्ट धाममा पूजा तथा भक्तिको भावले नजाने । भगवान कुनै पशु त होइन जसलाई पुजारीजीले मन्दिरमा बाँधेर राखेको हुन्छ । भगवान त कण कणमा ब्यापक छ । यो सबै साधनाहरू शास्त्रको विरूद्ध हो ।*

*अलिक विचार गरेर हेर्नुस् कि यो सबै तीर्थ स्थल (जस्तै जगन्नाथको मन्दिर, बद्रीनाथ, हरिद्वार, मक्का मदीना, अमरनाथ, वैष्णो देवी, वृन्दावन, मथुरा, बरसाना, अयोध्या राम मन्दिर , कांशी धाम, छुडानी धाम आदि), मन्दिर, मस्जिद, गुरूद्वारा, चर्च व ईष्ट धाम आदि यस्तो स्थल हो जहाँ कुनै संत बस्तथे । उहाँहरू त्यो ठाउँमा आफ्नो भक्ति साधना गरी भक्तिरूपी धन जम्मा गरेर आफ्नो शरीर त्यागी आफ्नै ईष्ट देवको लोकमा जानु भयो । पछि उहाँको संझनालाई प्रमाणित राख्नको लागि त्यस ठाउँमा कसैले मन्दिर, कसैले मस्जिद, कसैले गुरूद्वारा, कसैले चर्च अथवा कसैले धर्मशाला बनाई दिए जसले उनको याद रही रहोस् र*

*हामी जस्ता तुच्छ प्राणीहरूलाई प्रमाण भेटीरहोस् कि हामीले यस्तै कर्म गर्नु पर्दो रहेछ जस्तो यी महान आत्माहरूले गरेका छन् । यी सबै धार्मिक स्थलले हामी सबैलाई यही संदेश दिन्छन् कि जस्तो भक्ति साधना यी नामी संतहरूले गरेका छन् त्यस्तै हामी पनि गरौं । यसका लागि तपाईं यस्तै तरिकाले साधना गर्ने र गराउने संतहरूलाई खोज्नुहोस् र जस्तो भन्छन् त्यस्तै गर्नुहोस् । तर पछि यी स्थानहरूमा नै पूजा प्रारम्भ भयो जो कि एकदमै व्यर्थ हो र शास्त्रहरूको विरूद्ध हो ।*

*यी सबै स्थान त एउटा यस्तो स्थान जस्तै छ जहाँ कुनै हलुवाईले चुल्हो बनाई जुलेवी (जेरी), लड्डु आदि बनाएर आफुले खाएर र अरू आफ्नो इष्ट मित्रहरूलाई पनि ख्वाएर त्यहाँबाट गयो । त्यस पछि त्यस स्थानमा न त त्यो हलुवाई छ र, न त मिठाई नै । भने त्यहाँ केवल चुल्हो मात्रै छ । उसले न त हामीलाई मिठाई बनाउन सिकाउन सक्छ न त हाम्रो पेट भर्न सक्छ । अब कसैले भन्छ कि दाजु आउनुस् तपाईलाई त्यो चुल्हो देखाएर ल्याउँछु जहाँ एउटा हलुवाईले मिठाई बनाएको थियो । हिडौं जाउँ न त । त्यहाँ गएर त्यस चुल्होलाई हेरयो र सात चक्कर पनि मारेर आयो । के तपाईले मिठाई पाउनु भयो ? के तपाईलाई मिठाई बनाउने विधि भन्ने हलुवाईलाई भेट्नु भयो ? यसको लागि तपाईले त्यस्तै नै हलुवाई खोज्नु पर्छ जसले सबभन्दा पहिले तपाईलाई मिठाई खुवाओस् र बनाउने विधि पनि भनोस् । फेरी जस्तो उसले भन्छ त्यही गर्नु, अरू नगर्नु ।*

*ठीक यसै प्रकार तीर्थ स्थानहरूको पूजा नगरी त्यस्तै नै संतहरूको खोजी गर जसले शास्त्र अनुसार पूर्णपरमात्मा कबीर साहेबको भक्ति गर्ने र भन्ने गर्दछन् । त्यसपछि जस्तो उहाँले भन्नु हुन्छ त्यस्तै मात्र गर्नु, आफ्नो मनोमानी नगर्नु ।*

*सामवेद संख्या नं. १४00 उतार्चिक अध्याय नं. १२ खण्ड नं. ३ श्लोक नं. ५ ( संत रामपाल दासद्वारा भाषा भाषीत):-*

*भद्रा वस्त्रा समन्या३वसानो महान् कविर्निवचनानि शंसन् ।*

*आ वच्यस्व चम्वोः पूयमानो विचक्षणो जागृविर्देववीतौ ।।५।।*

*नेपाली– चलाख मानिसहरूले आफ्नो वचनद्वारा पूर्णपरमात्मा (पूर्णब्रह्म) को पूजाको सत्यमार्ग दर्शन नगरी अमृतको सट्टा अन्य उपासना -जस्तै भूत पूजा, पितृ पूजा, श्राद्ध गर्नु तिनै गुणहरूको पूजा (रजोगुण-ब्रह्म, सतोगुण-विष्णु, तमोगुण-शिव) र ब्रह्म-कालको पूजा मन्दिर, मस्जिद, गुरूद्वारा, चर्च अनि तीर्थ-उपवास सम्मको उपसना) रूपी पिलो र घाउबाट निस्केको पीपलाई आदर सहित आचमन गराई रहेका हुन्छन् । परम सुखदायक पूर्णब्रह्म कबीर सशरीर साधारण वेशभूषामा ("वस्त्रको अर्थ वेशभूषा-संत भाषामा यसलाई चोला पनि भन्छन् । जस्तै कुनै संत शरीर त्यागेर जान्छ भने भनिन्छ कि महात्माले त चोला छोडेर गएछन् ।")*

*सत्यलोकवाला शरीर जस्तै अर्को तेजपुंजको शरीर धारण गरेर साधारण मानिस सर ह जीवन चलाएर केहि दिन संसारमा बसेर आफ्नो शब्द सखाहरूको माध्यमबाट सत्यज्ञान, अज्ञानको वर्णन गरी पूर्णपरमात्माको ओझेल भएको वास्तविक सत्यज्ञान तथा भक्तिलाई*

*जागृत गर्नुहुन्छ ।*

*गीता अध्याय नं. १६ को श्लोक नं. २३*

यः, शास्त्रविधिम्, उत्सृज्य, वर्तते, कामकारतः, न, सः,
सिद्धिम्, अवाप्नोति, न, सुखम्, न, पराम्, गमि्, ।।

*अनुवाद : जो मानिस शास्त्र विधिलाई त्यागेर आफू खुशी मनलागी आचरण गर्दछ त्यो न सिद्धि नै प्राप्त गर्छ न परम गति र न त सुख नै ।*

*गीता अध्याय नं. ६ को श्लोक नं. १६*

न, अति, अश्नतः, तु, योगः, अस्ति, न, च, एकान्तम्,
अनश्नतः, न, च, अति, स्वप्नशीलस्य, जाग्रतः, न, एव, च, अर्जुन ।।

*अनुवाद : हे अर्जुन ! यो योग अर्थात् भक्ति न त धेरै खाने मानिस न बिल्कुलै न खाने मानिस, न एकान्तमा आसन लगाएर साधना गर्ने मानिस र न धेरै सुत्ने स्वभाव भएको र न सधैं जाग्ने मानिसलाई सिद्ध हुन्छ ।*

पूजैं देई धामको, शीश हलावै जो । गरीबदास साची कहैं, हद काफिर है सो ।।
कबीर, गंगा काठै घर करै, पीवै निर्मल नीर । मुक्ति नहीं हरि नाम बिन, सतगुरु कहैं कबीर ।।
कबीर, तीर्थ कर-कर नग मूवा, उडै पानी न्हाय । राम ही नाम नाजीा, काल घसिटे जाय ।।
गरीब, पीतल ही का थाल हैं, पीतल का लोटा । जड मूरत को पूजतें, आवैगा टोटा ।।
गरीब, पीतल चमच्चा पूजिये, जो थाल परोसै । जड मूरत किस काम की, मति रहो भरोसै ।।
कबीर, पर्वत पर्वत मैं फिर्या, कारण अपने राम । राम सरीखे जन मिले, जिन सारे सब काम ।।

*४. पितृ पूजा निषेध :– कुनै किसिमको पितृ पूजा, श्राद्ध आदि केही पनि नगर्ने । भगवान श्री कृष्णजीले पनि यी पितृहरू र भूतहरूको पूजा गर्न सख्त मनाही गर्नु भएको छ ।*

*गीताजीको अध्याय नं. ९ को श्लोक नं. २५ मा भनेको छ कि -*

*यान्ति, देवव्रताः, देवान्, पितृऋन्, यान्ति, पितृव्रताः । भूतानि, यान्ति, भूतेज्याः, मद्याजिनः, अपि, माम् ।*

*अनुवाद : देवताहरूलाई पूज्ने मानिसहरू देवताहरूलाई प्राप्त हुन्छन्, पितृहरू पूज्नेहरूलाई पितृहरू नै प्राप्त हुन्छन् भूत पूजा गर्ने मानिसहरूलाई भूतहरू नै प्राप्त हुन्छन् र मतानुसार पूजा गर्ने भक्तहरू मबाट नै लाभान्वित हुन्छन् ।*

*बन्दी छोड गरीबदासजी महाराज र कबीर साहिबजी महाराज पनि भन्नुहुन्छ -*

*'गरीब, भूत रमै सो भूत है, देव रमै सो देव । राम रमै सो राम है, सुनो सकल सुर भेव ।।'*

*यसैले त्यो (पूर्णपरमात्मा) परमेश्वरको भक्ति गरौं जसले पूर्णमुक्ति होस् । त्यो परमात्मा पूर्णब्रह्म सत्यपुरूष (सत्य कबीर) हो । यसैको प्रमाण गीताजीको अध्याय नं. १८ को श्लोक नं. ४६ मा छ ।*

यतः प्रवृत्तिर्भूतानां येन सर्वमिदं ततम् ।
स्वकर्मणा तमभ्यर्भ्य सिद्धिं विन्दति मानवः ।।४६।।

*अनुवाद : जुन परमेश्वरबाट सम्पूर्ण प्राणीहरूको उत्पत्ति भएको छ र जसबाट यो*

*समस्त जगत् व्याप्त छ, त्यस परमेश्वरको आफ्नो स्वभाविक कर्महरूद्वारा पूजा गरी मनुष्यलाई परमसिद्धि प्राप्त हुन्छ ।।६३।।*

*गीता अध्याय नं. १८ को श्लोक नं. ६२ :-*

तमेव शरणं गच्छ सर्वमिदं ततम् ।

तत्प्रसादात्परां शान्तिं स्थानं प्राप्स्यसि शाश्वतम् ।।६२।।

*अनुवाद : हे भरतवंशोभ्द्रव अर्जुन ! तँ सर्वभावले त्यस ईश्वर कै शरणमा जा । उसको कृपाले त परम शान्ति (संसारभन्दा सर्वथा उपरित) र अविनाशी परमपदलाई प्राप्त गर्नेछस् ।*

*सर्वभावको तात्पर्य यो हो कि कोही अन्यको पूजा नगरी मन-कर्म-वचनले एउटा परमेश्वर माथि आस्था राख्नु ।*

*गीता अध्याय नं. ८ को श्लोक नं.२२ :-*

पुरूषः स परः पार्थ भक्त्या लभ्यस्त्वनन्यया ।

यस्यान्तः स्थानि भूतानि येन सर्वमिदं ततम् ।।२२।।

*अनुवाद : हे पृथानन्दन अर्जुन ! सम्पूर्ण प्राणी जसको अन्तर्गत छ र जसले सम्पूर्ण संसार व्याप्त छ, त्यो परम पुरूष परमात्मा त अनन्य भक्तिबाट प्राप्त हुने योग्य छ ।*

*अनन्य भक्तिको तात्पर्य छ एउटा परमेश्वर (पूर्णब्रह्म) को भक्ति गर्नु, अरू देवी-देवताहरू अर्थात् तीनै गुण (रजोगुण-ब्रह्मा, सतोगुण-विष्णु, तमोगुण-शिव) हरूलाई होइन । गीताजी के अध्याय नं. १५ को श्लोक नं. १ देखी ४ :-*

*गीता अध्याय नं. १५ को श्लोक नं. १*

ऊर्ध्वमूलम्, अधःशाखम्, अश्वत्थम्, प्राहुः अव्ययम्,

छन्दांसि, यस्य, पर्णानि, यः, तम्, वेद, सः, वेदवित् ।।१।।

*अनुवाद : माथिको जरा र तल शाखा भएको अविनाशी विशाल विस्तृत वृक्ष (रूख) हो । घोडा जस्तो बलियो जसका साना साना भाग वा हाँगा पातहरू भनिएको छ, त्यस संसाररूपी वृक्षको जो यस प्रकार जान्दछ उ भक्त पूर्णज्ञानी हो ।*

अधः, च, ऊर्ध्वम्, प्रसृताः, तस्य, शाखाः, गुणप्रवृद्धाः, विषयप्रवालाः,

अधः, च, मूलानि, अनुसन्ततानि, कर्मानुबन्धीनि, मनुष्यलोके ।।२।।

*अनुवाद : त्यस वृक्ष (रूख) को तल र माथि तीनै गुण ब्रह्मा-रजोगुण, विष्णु-सतोगुण, शिव-तमोगुण) रूपी फिँजिएको विकार (काम, क्रोध, मोह, लोभ, अहंकार) रूपी कमलो हाँगा ब्रह्मा, विष्णु, शिव नै जीवहरूलाई कर्ममा बाँध्ने जरा अर्थात् मूल कारण हो तथा मनुष्यलोक, स्वर्ग लोक, नर्क लोक, पृथ्वीलोकमा तल (चौरासी लाख जुनिहरूमा) माथि व्यवस्थित गरिएको छ ।*

*गीता अध्याय नं. १५ को श्लोक नं. ३*

न, रूपम्, अस्य, इह, तथा, उपलभ्यते, न, अन्तः, न, च, आदिः, न, च,

सम्प्रतिष्ठा, अश्वत्थम्, एनम्, सुविरुढमूलम्, असङ्गशस्त्रेण, दृढेन, छित्वा ।।३।।

*अनुवाद : यस रचनाको न शुरूवात छ न अन्त छ न त्यस्तै स्वरूप पाइन्छ तथा यहाँ विकार कालमा अर्थात् मद्वारा दिन गई रहेको गीता ज्ञानमा पूर्णजानकारी मलाई पनि छैन किनकी सबै ब्रह्मण्डहरूको रचनाको राम्रोसँग स्थितिको मलाई पनि ज्ञान छैन यो राम्रोसँग स्थाई स्थितिवाला बलियो स्वरूपवालाहरू निर्लेप तत्त्वज्ञान रूपी दृढ शस्त्रले अर्थात् निर्मल तत्त्वज्ञानकोद्वारा काटेर अर्थात् निरंजनको भक्तिलाई क्षणिक जानेर ।*

*गीता अध्याय नं. १५ को श्लोक नं. ४*

ततः पदं तत्परिमार्गितव्यं यस्मिन्गता न निवर्तन्ति भूयः ।

तमेव चाद्यं पुरुषं प्रपद्ये यतः प्रवृत्ति प्रसृता पुराणी ।।४।।

*अनुवाद : त्यस पछि त्यो परमपद परमात्माको खोजी गर्नु पर्यो । जसलाई प्राप्त भएको मनुष्य फेरी फर्केर संसारमा आउदैनन र जसबाट अनादी कालदेखी चली आउने यो सृष्टी विस्तारलाई प्राप्त भएको छ, त्यस आदि पुरूष परमात्माको मात्र शरणमा म छु ।*

*यसरी स्वयं भगवान श्री कृष्णले इन्द्र (जो देवी-देवताहरूका राजा हुन्) को पूजा छाडेर त्यस परमात्माको भक्ति गर्नको लागी नै प्रेरणा दिएका थिए । जसका कारण उनले गोवर्धन पर्वतलाई उठाएर इन्द्रको कोपबाट ब्रज वासिहरूको रक्षा गर्नु भयो ।*

गरीब, इन्द्र चढा बृज डुबोवन, भीगा भीत न लेव ।

इन्द्र कढाई होत जगत में, पूजा खा गए देव ।।

कबीर, इस संसार को, समझाऊा कै बार ।

पूाछ जो पकडै भेढ की, उतरा चाहै पार ।।

*५. गुरू आज्ञाको पालन :—गुरूदेवजीको आज्ञा बिना घरमा कुनै प्रकारको पनि धार्मिक अनुष्ठान गराउने होइन । जस्तै बन्दी छोड आफ्नो वाणीमा भन्नु हुन्छ कि -*

'गुरू बिन यज्ञ हवन जो करहीं, मिथ्या जावे कबहु नही फलहीं ।'

कबीर, गुरू बिन माला फेरते, गुरू बिन देते दान ।

गुरू बिन दोनों निष्फल हैं, पूछो वेद पुराण ।।

*६. माता मसानी पूजा निषेध :— आफ्नो खेतम ाबनेको कुनै गहबर (मंढी) या कुनै डिही (खेडे) आदि या कुनै अन्य देवताको समाधिलाई नपुज्ने । समाधि कसैको भए पनि पूजा नगर्ने । अरू कुनै उपासना गर्नु हुदैन । यहाँ सम्म कि तीनै गुण (ब्रह्मा, विष्णु, शिव) को पूजा पनि नगर्ने । मात्र गुरूजीले भने अनुसार नै गर्ने ।*

*गीता अध्याय नं. ७ को श्लोक नं. १५*

न, माम्, दुष्कृतिनः, मूढाः, प्रपद्यन्ते, नराधमाः,

मायया, अपहृतज्ञानाः, आसुरम, भावम, आश्रिताः ।।

*अनुवाद :— मायाद्वारा जसको ज्ञान हरण भै सकेको छ यस्तो असुर स्वभावका धार ण गरेका मनुष्य नीच दुषित कर्म गर्ने मूर्खहरू मलाई भज्दैनन् अर्थात् उनीहरू तीन गुण (*

*रजोगुण- ब्रह्मा, सतोगुण-विष्णु, तमोगुण-शिव) को नै साधना गरिरहन्छन् ।*

कबीर, माई मसानी शेढ शीतला, भैरव भूत हनुमंत । परमात्मा उनसे दूर है, जो इनको पूजंत ।।
कबीर, सौ वर्ष तो गुरू की सेवा, एक दिन आन उपासी । वो अपराधी आत्मा, परै काल की फांसी ।।
गुरू को तजै भजै जो आना । ता पसुवा को फोकट ज्ञाना ।।

*७. संकट मोचन कबीर साहेब हुनु हुन्छ :– कर्म कष्ट (संकट) भएमा कुनै अन्य ईष्ट देवताको वा माता मसानी आदिको पूजा कहिल्यै नगर्ने । कुनै किसिमको भाकल नगर्ने । मात्र बन्दी छोड कबीर साहेबको पूजा गर्ने जो सबै दुःखहरूको हरण गर्ने संकट मोचन हुनुहुन्छ ।*

*सामवेद संख्या नं. ८२२ उतार्चिक अध्याय ३ खण्ड नं. ५ श्लोक नं. ८ (सन्तं रामपालद्वारा भाषा भाषित ) :-*

*मनीषिभिः पवते पूर्व्यः कविर्नृभिर्यतः परि कोशां असिष्यदत् ।*
*त्रितस्य नाम जनयन्मधु क्षरन्निन्द्रस्य वायुं सख्याय वर्धयन् ।।८।।*

*नेपाली :- सनातन अर्थात् अविनाशी कबीर परमेश्वर हृदय देखि चाहनेहरू श्रद्धाले भक्ति गर्ने भक्तात्माहरूलाई तीन मन्त्र उपदेश दिएर पवित्र गरेर जन्म-मृत्यु बाट रहित गर्नुहुनेछ तथा उसको प्राण अर्थात् जीवन-साँसंहरूको जो संस्कारवश आफ्नो मित्र अर्थात् भक्तमा गन्नको लागि राखेको हुन्छ लाई आफ्नो भण्डारबाट पूर्णरूपले बढाउनु हुनेछ । जस कार णले परमेश्वरको वास्तविक आनन्दलाई आफ्नो आशिर्वाद प्रसाद ले प्राप्त गराउनु हुनेछ ।*

कबीर, देवी देव ठाढे भये, हमको ठौर बताओ । जो मुझ (कबीर) को पूजैं नहीं, उनको लुटो खाओ ।।
कबीर, काल जो पीसै पीसना, जोरा है पनिहार । ये दो असल मजुर हैं, सतगुरू के दरबार ।।

*८. अनावश्यक दान निषेध :- कहीं पनि र कसैलाई पनि दान रूपमा केही पनि दिनु हुँदैन । न पैसा, न बिना सिएको कपडा आदि केही पनि दिनु हुदैन । यदि कोही दान रूपमा केही माग्न आए भने उसलाई खाना खान दिनु, चिया, दूध, लस्सी, पानी आदि खुवाई दिनु तर केही पनि नदिनु । के थाहा त्यो भिक्षुकले त्यस पैसाको दुरूपयोग गरिदेला । जस्तै एउटा मानिसले कुनै भिखारीलाई त्यसको झुट्टो कहानी जसमा उसले भनिरहेको थियो कि मेरो छोरा छोरी उपचार बिना छट्पट्टाई रहेका छन् केही पैसा दिने कृपा गरिदिनुस, भनेको सुनेर भावनावस भई १०० रूपैया दियो । त्यो भिखारी पहिले एक पाउ रक्सी पिउने गर्थो त्यस दिन उसले आधा बोतल रक्सी पिएर आफ्नै श्रीमतीलाई बेस्सरी कुटेछ त्यसपछी उसको श्रीमतीले बच्चाहरू सहित आत्महत्या गरिछिन् । तपाईद्वारा गरेको त्यो दान त्यस परिवारको नाशको कारण बन्यो । यदि तपाई यस्तो दुःखी ब्यक्तिलाई मद्दत गरूँ भन्ने चाहनु हुन्छ भने, त्यसको केटाकेटीलाई डाक्टरबाट दवाई उपलब्ध गराई दिनु, तर पैसा नदिनु ।*

कबीर, गुरू बिन माला फेरते, गुरू बिन देते दान । गुरू बिन दोनो निष्फल हैं, पूछो वेद पुरान ।।

*९. जुठो खान निषेध :– यस्तो ब्यक्तिको जुठो खानु हुदैन जो जाँड, रक्सी, बियर , तोङ्वा, माछा, मासु, अण्डा, सुर्ती, गाँजा, भाँङ्, अफीम आदि सेवन गर्छ ।*

*१०. स्वर्गवास (देहान्त) पछि क्रिया-कर्म निषेध :- यदि परिवारमा कसैको मृत्यु*

*हुन्छ भने चितामा अग्नी कसैले पनि दिन सक्छ, घरका या अन्यले तथा अग्नी प्रज्वलित गर्ने बेला मंगलाचरण बोल्नु होस् । त उसको फूल आदि केही पनि उठाउनु पर्दैन, यदि त्यस स्थानलाई सफा गर्न अनिवार्य छ भने ती अस्तु (अस्थियाँ) हरूलाई उठाएर आफैले कुनै स्थानमा बगीरहेको पानीमा बगाई दिनु । त्यस समयमा मंगलाचरण उच्चारण गर्नुहोस् । न पिण्ड आदि गराउने, हो न तेरहवीं, छः माही, वर्षी, पिण्ड पनि नदिने तथा श्राद्ध आदि केही पनि गर्ने होईन । कुनै अन्य व्यक्तिबाट हवन आदि गराउने होईन । सम्बन्धी तथा नातेदार हरू आदि जो शोक मनाउन आए उनीहरूलाई कुनै एक दिन नियुक्त गर्नु । त्यस दिन प्रतिदिन गर्ने नित्य नियम गर्नु, ज्योति जाग्रत गर्नु, अनि सबैलाई खाना ख्वाउनु । अगर तपाईले उसको (मर्ने वालाको) नाममा केही धर्म गर्नु छ भने आफ नो गुरूदेवजीको आज्ञा लिएर बन्दी छोड गरीबदासजी महाराजको अमृतमयी वाणीको अखण्ड पाठ गराउनु पर्दछ । यदि पाठ गराउने आज्ञा नभएमा परिवार कै उपदेशी भक्तले चार दिन या सात दिन घरमा एउटा अखण्ड ज्योति देशी घ्यूको बाल्ने तथा ब्रह्म गायत्री मन्त्र प्रतिदिन चार पटक गर्ने तथा तीन वा एक पटकको मन्त्रको दान संकल्प स्वर्गवासीलाई गर्ने । जस्तो उचित हुन्छ एक, दुई, तीन सम्म मन्त्रको जपको फल उसलाई दान गर्ने । प्रतिदिनको जस्तै ज्योति, आरती र नाम स्मरण गरी राख्नु पर्छ, यो याद राख्दै किः-*

कबीर, साथी हमारे चले गए, हम भी चालन हार । कोए कागज में बाकी रह रही, ताते लाग रही वार ।।

कबीर, देह पडी तो क्या हुआ, झूठा सभी पटीट । पंक्षी उडया आकाश कूं, चलता कर गया बीट ।।

## "कर्म काण्डको विषयमा सत्य कथा"

*मेरो (संत रामपाल दासको) पूज्य गुरूदेव स्वामी राम देवानन्दजी महाराजको सोलह वर्षको उमेरमा कुनै महात्माको सत्संग सुनेर वैराग उत्पन्न भएछ । एक दिन उनी खेतमा गएका थिए । नजिकै जंगल थियो । उनी जंगलमा गएर कुनै मरेको जनावरको हाडहरूको छेउमा आफ्नो कपडाहरू च्याती फ्याँकेर स्वयं महात्माजीसँगै जानु भएछ ।*

*जब उनको खोजी भयो उनको घरका मानिसहरूले हाडहरू भएको ठाउँमा उनको च्यातिएको कपडाहरू देखेर सोचे कि उनलाई कुनै जंगली जनावरले खाएछ । उनीहरूले कपडासँगै हाडहरू बोकेर घर ल्याई अन्तीम सँस्कार गरिदिएछन् । त्यसपछि तेरहवीं तथा छः माही गर्छन अनि फेरी श्राद्धहरू शुरू हुन्छन् ।*

*जब मेरो पूज्य गुरूदेव धेरै नै वृद्ध (बुढो) भै सकेको हुनुहुन्थ्यो तब एक पटक घर जानु भयो । त्यसबेला मात्र घरका मानिसहरूलाई थाहा भयो कि उँहा जीवित नै हुनुहुन्छ तथा घर छाडेर जानु भएको थियो । उनीहरूले भने कि जब उँहाले घर छोडेर जानु भएको थियो उँहाको खोजी गरियो । जंगलमा उँहाको कपडाहरू भेटियो । त्यहाँ नजिकै उँहाको केही हाडहरू थियो । अनि त हामीले सोच्यौं कि कुनै जंगली जनावरले उँहालाई*

*खाएछ र ती कपडाहरू तथा हाडहरूलाई घर ल्याएर अंतिम संस्कार गरीदियौं ।*

*फेरी मैले (संत रामपाल दासले) मेरो पूज्य गुरूदेवको सानो भाइको पत्नीलाई सोधे कि जब हाम्रो पूज्य गुरूदेव घर छोडेर गए पछि तिमीले त्यस पछि के गर्‍यौं ? तिनले भनिन कि जब म यस घरमा बिहे गरी आएको थिए त्यसबेला मलाई उँहाको श्राद्ध गर्ने गरेको थाहा भयो र मैले नै आफ्नै हातले झण्डैं ७० श्राद्ध गरिसकेको छु । तिनले भनिन कि जब घर मा कुनै नोक्सान हुन्थ्यो जस्तै कि भैंसीले दुध न दिनु,थुनमा खराबी आउनु, कुनै अरू नोक्सान हुनु आदि तब धामी झाँक्रीहरूलाई देखाउँदा उनीहरूले भन्थे कि तेरो खानदानमा कुनै अविवाहित मरेको छ जसले गर्दा तिमीहरूलाई दुःख दिने गरिरहन्छ । अनि हामी त्यसलाई उसको कपडा आदि दिन्छौं ।*

*अनि मैले भने कि उँहाले त दुनियाको उद्धार गर्नु हुँदैछ । कसैलाई दुःख दिनु भएको थिएन । उँहा त अब सुख दाता हुनुहुन्छ । फेरी मैले (संत रामपालजी महाराजले) त्यस वृद्धालाई भने कि अहिले उँहा तपाईकै अगाडी हुनुहुन्छ, अब त यो श्राद्ध गर्ने जस्तो ब्यर्थको साधनालाई बंद गरी देऊ । तब तिनले भनिन् कि यो त पुरानो रिवाज हो, यसलाई कसरी छोडनु ? अर्थात् हामी आफ्नो पुरानो रीति रिवाजहरूमा यति डुबेका छौं कि प्रत्यक्ष प्रमाण हुँदा पनि त्यो गलत कार्य गरिरहन्छन तर छोडन सक्तैनन्। यसबाट प्रमाणित हुन्छ कि श्राद्ध गर्नु, पितृ पूजा गर्नु आदि सबै ब्यर्थ छ ।*

*११. सन्तान जन्मे पछि शास्त्र विरूद्ध पूजा निषेधः— केटाकेटी जन्मेपछि कुनै छटी, न्वारान आदि नगराउने । सुतकले गर्दा प्रतिदिन गर्ने पूजा, भक्ति, आरती, ज्योति जागृत गर्ने आदि बन्द नगर्ने ।*

*यसै सन्दर्भमा एउटा सानो कथा भन्छु । एउटा मान्छेको बिहे भएको दस वर्ष पछि छोरा भएछ । छोरा जन्मको खुसीमा उसले धेरैं नै खुशी मनायो । बीस-पच्चिस गाउँका मानिसलाई भोजनको लागि आमन्त्रित गर्‍यो र धेरैं नै गाना बजाना गरी धेरैं पैसा खर्च गर्‍यो । अनि एक वर्ष पछि त्यो छोराको देहान्त हुन्छ । फेरी त्यही परिवार लडीबडी गर्दै रूवाबासी गर्छन् र आफ्नो दुर्भाग्यलाई सराप्छन् । यसैले कबीर साहेब हामीलाई भन्नु हुन्छ किः-*

कबीर, बेटा जाया खुशी हुई, बहुत बजाये थाल । आना जाना लग रहा, ज्यों कीडी का नाल ।।
कबीर, पतझड आवत देखकर, बन रोवै मन माहिं । ऊंची डाली पात थे, अब पीले हो हो जाहिं ।।
कबीर, पात झडंता यूं कहै, सुन भई तरूवर राय । अब के बिछुडे नहीं मिला, न जाने कहां गिरेंगे जाय ।
कबीर, तरूवर कहता पात से, सुनों पात एक बात । यहाा की रीति है, एक आवत एक जात ।।

*१२. देव धाममा गई कपाल काट्न निषेध :- केटाकेटीलाई कुनै देव (देवता) धाममा कपाल काट्न नलैजाने । जब कपाल ठूलो भयो, काटेर फ्याँकिदिने । एउटा मन्दिरमा देखे कि श्रद्धालु भक्त आफ्नो छोरा छोरीहरूको कपाल काट्न आए । त्यहाँ उपस्थित हजाम ( नाई) ले बाहिरको रेट भन्दा तीन गुना पैसा लियो अनि एक कैंची जती कपाल काटेर आमा-बाबुलाई दियो । उनीहरूले श्रद्धाले मन्दिरमा चढाए । पुजारीले त्यसलाई एउटा थैलोमा राखी*

*रात्री समयमा टाढा एकान्त ठाउँमा फालि दियो । यो मात्र नाटक बाजी हो । पहिले जस्तै स्वभाविक तरिकाले कपाल काट्न कि नलगाउने र बाहिर फाल्ने । परमात्मा नामले प्रसन्न हुनुहुन्छ पाखण्डले होइन ।*

*१३. नाम जप गर्नाले सुख :— नाम (उपदेश) लाई दुःख निवारणको दृष्टिकोणले मात्र नलिएर आत्म कल्याणको लागि लिनु पर्दछ । फेरी स्मरण गर्दै जाँदा सबै सुख आफै आउँछ ।*

'कबीर, सुमिरण से सुख होता है, सुमिरण से दुःख जाए ।
कहैं कबीर सुमिरण किए, सांई माहिं समाय ।।'

*१४. व्यभिचार निषेध :—अर्काकी स्त्रीलाई आमा-छोरी-बहिनीको जस्तै दृष्टिले हेर्नुपर्दछ । व्यभिचार महापाप हो । जस्तै :-*

गरीब, परद्वारा स्त्री का खोलै । सत्तर जन्म अन्ध हो डोलै ।।
सुरापान मद्य मांसाहारी । गवन करें भोगैं पर नारी ।।
सत्तर जन्म कटत हैं शीशं । साक्षी साबिह है जगदिशं ।।
पर नारी ना परसियों, मानो वचन हमार । भवन चर्तुदश तास सिर, त्रिलोकी का भार ।।
पर नारी ना परसियों, सुनो शब्द सलतंत । धर्मराय के खंभ से, अर्धमुखी लटकंत ।।

*१५. निन्दा सुन्नु वा गर्नु निषेध :— आफ्नो गुरूको निन्दा बिर्सेर पनि नगर्नु र नसुन्नु पनि । सुन्नुको अभिप्राय यदि कसैले तपाईंको गुरूको बारेमा झूटो कुरा गऱ्यो भने तपाईंले झगडा नगर्नु बरू यो सम्झनुस् कि त्यसले बिना सोचि भन्दैछ अर्थात् झुटो बोल्दै छ ।*

गुरू की निंदा सुनै जो काना । ताको निश्चय नरक निदाना ।।
अपने मुख निंदा जो करही । शुकर श्वान गर्भ में परही ।।

*निन्दा त न कसैको गर्नु न कसैको सुन्नु । चाहे त्यो सामान्य व्यक्ति नै किन नहोस् । कबीर साहेब भन्नु हुन्छ कि -*

'तिनका कबहू न निन्दीये, जो पांव तले हो । कबहु उठ आखिन पडे, पीर घनेरी हो ।।'

*१६. गुरू दर्शनको महिमा :— समय पाउने बित्तिकै सत्सङ्गमा आउने कोशिश गर्नुस् तथा सत्सङ्गमा मान-बडाई गर्न नआउनुस् । बरू आफूलाई एउटा रोगी सम्झेर आउनुहोस् । जस्तै बिमारी मान्छे चाहे जति सुकै धनी होस्, चाहे उच्च ओहदावाला होस् जब अस्पताल जान्छ त्यस बेला उसको उदेश्य मात्र रोग मुक्त हुनसँग रहन्छ । जहाँ डाक्टर सुत्न भन्छ त्यही सुत्छ, बस्नलाई भन्छ बस्छ, बाहिर जाने इशारा भए बाहिर जान्छ । फेरि भित्र आउनलाई आवाज आउँछ चुपचाप भित्र आउँछ । ठीक यसरी यदि तपाईं सत्सङ्गमा आउनु हुन्छ भने तपाईंलाई सत्सङ्को फाईदा (लाभ) हुन्छ अन्यथा निष्फल छ । सत्सङ्गमा जहाँ बस्ने ठाउँ छ त्यही बस्ने, जे खान पाईन्छ त्यो परमात्मा कबीर साहेबको कृपाले प्रसाद सम्झी खाएर प्रसन्न चित्त रहने ।*

कबीर, संत मिलन कूं चलिए, तज माया अभिमान । जो-कदम आगे रखे, वो ही यज्ञ समान ।।

कबीर, संत मिलन कूं जाईए, दिन में कई-कई बार । आसोज के मेह ज्यों, घना करे उपकार ।।
कबीर, दर्शन साधु का, परमात्मा आवै याद । लेखे में वोहे घडी, बाकी के दिन बाद ।।
कबीर, दर्शन साधु का, मुख पर बसै सुहाग । दर्श उन्हीं को होत हैं, जिनके पूर्णभाग ।।

*१७. गुरू महिमा :— यदि कहीं पाठ वा सत्सङ्ग चलीरहेको छ या त्यसै गुरूजीको दर्शनको लागि जानु हुन्छ भने सर्वप्रथम गुरूजी लाई दण्डवत् (लम्पसार भएर) गर्नु पर्दछ पछि सत ग्रन्थ साहिब वा फोटोहरू जस्तै साहिब कबीरको मूर्ति- गरीबदासजी स्वामी राम देवानन्दजी, गुरूजीको मूर्तिलाई प्रणाम गर्नु पर्दछ जस्ले मात्र भावना कायम रही रहन्छ । मूर्ति पूजा गर्नु हुँदैन । केवल प्रणाम गर्नु पूजा अन्तर्गत आउँदैन । यो त भक्तको श्रद्धा कायम राख्नलाई सहयोगी हुन्छ । पूजा त वक्त गुरू व नाम मन्त्रको गर्नुछ जसले पार लगाउने छ ।*

कबीर, गुरू गोविन्द दाऊको खडङ्रे, काके लागुं पाय ।
बलिहारी गुरू आपने, जिन गोविन्द दियो मिलाय ।।
कबीर, गुरू बडे हैं गोविन्द से, मन में देख विचार । हरि सुमरे सो रह गए, गुरू भजे होय पार ।।
कबीर, हरि के रूठतां, गुरू की शरण में जाय । कबीर गुरू जै रूठजां, हरि नहीं होत सहाय ।।
कबीर, सात समुन्द्र की मसि करूं, लेखनि करूं बनिराय ।
धरती का कागज करं, तो गुरू गुन लिखा न जाय ।।

*१८. मांस भक्षण निषेध :— अण्डा, मासु भक्षण र जीव हिंसा गर्नु हुँदैन । यो महापाप हुन्छ । जस्तै साहेब कबीरजी महाराज व गरीबदासजी महाराज भन्नु हुन्छ :-*

कबीर, जीव हने हिंसा करे, प्रकट पाप सिर होय । निगम पुनि ऐसे पाप तें, भिरत गया नहिं कोय ।।१।।
कबीर, तिलभर मछली खायके, कोटि गऊ दे दान । काशी करौंत ले मरे, तो भी नरक निदान ।।२।।
कबीर, बकरी पाती खात है, ताकी काढी खाल । जो बकरीको खात है, तिनका कौन हवाल ।।३।।
कबीर, गला काटि कलमा भरे, कीया कहै हलाल । साहब लेखा मांगसी, तबहोसी कौन हवाल ।।४।।
कबीर, दिनको रोजा रहत हैं, रात हनत हैं गाय । यह खून वह वंदगी, कहुं क्यों खुशी खुदाय ।।५।।
कबीर, कबिरा तेई पीर हैं, जो जानै पर पीर । जो पर पीर न जानि है, सो काफिर बेपीर ।।६।।
कबीर, खूब खाना है खीचडी, मांहीं परी टुक लौन । मांस पराया खायकै, गला कटावै कौन ।।७।।
कबीर, मुसलमान मारैं करदसो, हिंदू मारैं तरवार । कहै कबीर दोनूं मिलि, जैहैं यमके द्वार ।।८।।
कबीर, मांस अहारी मानव, प्रत्यक्ष राक्षस जानि । ताकी संगति मति करै, होई भक्ति मे हानि ।।९।।
कबीर, मांस खांय ते ढेड सब, मद पीवैं सो नीच । कुलकी दुरमति पर हरै, राम कहै सो ऊंच ।।१०।।
कबीर, मांस मछलिया खात हैं, सुरापान से हेत । ते नर नरकै जाहिंगे, माता पिता समेत ।।११।।
गरीब, जीव हिंसा जो करते हैं, या आगे क्या पाप । कंटक जुनी जिहान में, सिंह भेडिया और सांप ।।
झोटे बकरे मुरगे ताई । लेखा सब ही लेत गुसाई ।। मृग मोर मारे महमंता । अचरा चर हैं जीव अनंता ।।
जिह्वा स्वाद हिते प्राना । नीमा नाश गया हम जाना ।।
तीतर लवा बुटेरी चिडिया । खूनी मारे बडङ्रे अगडिया ।।
अदले बदले लेखे लेखा । समझ देख सुन ज्ञान विवेका ।।
गरीब, शब्द हमारा मानियो, और सुनते हो नर नारि ।

जीव दया बिन कुफुर है, चले जमाना हारि ।।

*अनजानमा भएको हिंसाको पाप लाग्दैन । बन्दी छोड कबीर साहेब भन्नु हुन्छ*

'इच्छा कर मारै नहीं, बिन इच्छा मर जाए । कहैं कबीरू तास का, पाप नहीं लगाए ।।'

*१९. गुरू द्रोहीको सम्पर्क निषेध :— यदि कुनै भक्त गुरूजीसँग विद्रोह (गुरूजी सँग वेमुख हुन जान्छ) गर्छ त्यो महापापको भागी हुन्छ । यदि कसैलाई यो मार्ग राम्रो लाग्दैन भने गुरू बदल्न सक्छ । यदि ऊ पूर्व गुरूसँग बैरभाव व निन्दा गर्छ भने त्यो गुरू द्रोही हुन जान्छ । यस्तो ब्यक्तिसँग भक्तिको चर्चा गर्दा उपदेशीलाई दोष लाग्दछ । त्यसको भक्ति समाप्त हुन जान्छ ।*

कबीर, गुरू द्रोही की पैड पर, जे पग आवै बीर । चौरासी निश्चय पडै, सतगुरू कहैं बकीर ।।

कबीर, जान बुझ साची तजै, करै झुठे से नेह । जाकी संगत हे प्रभु, स्वपन में भी ना देह ।।

*अर्थात् गुरू द्रोहीसँग लाग्ने मानिस भक्ति विहिन भएर नर्क व लाख चौरासी जुनीमा जानेछ ।*

*२०. जुवा निषेधः— जुवा-तास कहिले पनि खेल्नु हुँदैन ।*

कबीर, मांस भखै और मद पिये, धन वेश्या सों खाय । जूवा खेलि चोरी करै, अंत समूला जाय ।।

*२१. नाच-गान निषेधः-- कुनै प्रकारको खुशीको बेलामा नाच्न वा छाँडा (नराम्रा) गाना गाउन भक्ति भावको विरूद्ध हो । जस्तै एक समयमा एउटी विधुवा बहिनी कुनै खुशीको बेलामा आफ्नो नातेदारको घरमा गएकी थिइन । सबै जना खुशीसँग नाच्ने गाउने गरि रहेका थिए तर ती बहिनी एकातिर बसेर प्रभु चिंतनमा लागेकी थिइन । तिनको नातेदारले सोधे कि यसरी किन निराश बस्नु भएको ? तपाई पनि हामीले जस्तै नाच गान गरेर खुशी मनाउनुस् । यस कुरामा ति बहिनीले भनिन् म कसको खुशी मनाउँनु । म विधवाको एउटै मात्र छोरा थियो त्यो पनि भगवानको प्यारो भै दियो । अब के खुशी छ र मेरो लागी ? ठीक यसै प्रकार यस कालको लोकमा प्रत्येक ब्यक्तिको स्थिति छ । यहाँ गुरू नानक देवजीको वाणी छ कि :-*

ना जाने काल की कर डारै, किस विधि ढल पासा वे ।
जिन्हादे सिर ते मौत खुडगदी, उन्हानू केडा हांसा वे ।।
साध मिलें साडी शादी (खुशी) होंदी, बिछड दां दिल गिरि (दुःख) वे ।
अखदे नानक सुनो जिहाना, मुश्किल हाल फकीरी वे ।।

*कबीर साहेबजी महराज पनि भन्नु हुन्छ कि :-*

कबीर, झूठे सुख को सुख कहैं, मान रहा मन मोद ।
सकल चबीना काल का, कुछ मुखमें कुछ गोद ।।
कबीर, बेटा जाया खुशी हई, बहुत बजाये थाल ।
आवण जाणा लग रहा, ज्यों कीडी का नाल ।।

*विशेष :- स्त्री तथा पुरूष दुवै परमात्मा प्राप्तिका अधिकारी हुन् । स्त्रीहरूको मासिक*

*धर्म (Mainces) भएको दिनमा पनि आफ्नो दैनिक पूजा, ज्योति बाल्नु आदि बन्द गर्नु हुँदैन र कसैको देहान्त या जन्म दिनमा पनि दैनिक पूजा कर्म बन्द गर्नु हुँदैन ।*

*नोटः— जो भक्तजन यो एक्काइस सुत्रिय आदेशहरूको पालना गर्दैन त्यसको नाम समाप्त हुन जान्छ । यदि अनजानमा कोई गल्ती हुन्छ भने त्यो माफ हुन्छ र यदि जानी जानी कुनै गल्ती गरेको छ भने त्यो भक्त नाम विहिन हुन जान्छ । यसको समाधान यही हो कि गुरूदेवजी सँग क्षमा याचना गरेर पुनः नाम उपदेश लिनु पर्छ ।!*



# सृष्टी रचना

*(सुक्ष्म वेदको निष्कर्ष स्वरूप सृष्टी रचनाको वर्णन)*

*प्रभु प्रेमी आत्माहरू जब पहिलो पटक निम्न सृष्टि रचना पढछन् तब उनीहरूलाई यस्तो लाग्ने छ कि यो दन्त्य कथा हो । तर सबै पवित्र सद्ग्रन्थहरूको प्रमाणहरू पढे पछि अचम्मित हुनेछन् कि यो वास्तविक अमृत ज्ञान कहाँ लुकेको थियो । कृपया धैर्यसँग पढदै जानुस र यो अमृत ज्ञानलाई सुरक्षितसँग राख्नुस । तपाईको एक सय एक पुस्तासम्म काम लाग्ने छ । पवित्र आत्माहरू कृपया सत्यनारायण (अविनाशी प्रभु/सतपुरूष) द्वारा रचित सृष्टि रचनाको वास्तविक ज्ञान पढ्नुहोस् ।*

*१. पूर्णब्रह्म :- यस सृष्टी रचनामा सतपुरूष-सतलोकको स्वामी (प्रभु), अलख पुरूष-अलख लोकको स्वामी (प्रभु), अगम पुरूष-अगम लोकको स्वामी (प्रभु) तथा अनामी पुरूष-अनामी अकह लोकको स्वामी (प्रभु) एउटै पूर्णब्रह्म हुनुहुन्छ,,जो वास्तवमा अविनाशी प्रभु हुन् र भिन्न भिन्न रूप धारण गरी आफ्ना चारै लोकमा बस्नु हुन्छ । जस अन्तर्गत असंख्य ब्रह्माण्डहरू आउँछन् ।*

*२. परब्रह्म :- यो मात्र सात संख ब्रह्माण्डको स्वामी (प्रभु) हो । यसलाई अक्षर पुरूष पनि भनिन्छ । तर यो तथा यसको ब्रह्माण्ड पनि वास्तवमा अविनाशी छैन ।*

*३. ब्रह्म :- यो मात्र एक्काइस ब्रह्माण्डको स्वामी (प्रभु) हो । यसलाई क्षरपुरूष, ज्योति निरंजन, काल आदि उपमाले चिनिन्छ । यो र यसका सबै ब्रह्माण्डहरू नाशवान छन् ।*

*(उपरोक्त तिनै पुरूषहरू (प्रभुहरू) को प्रमाण पवित्र श्री मद्भगवत गीता अध्याय १५ श्लोक १६-१७ मा पनि छ ।)*

*४. ब्रह्मा :- ब्रह्मा यसै ब्रह्मको जेष्ठ पुत्र हुन्, विष्णु माईला पुत्र र शिव कान्छा पुत्र हुन् । यी तिनै ब्रह्मका पुत्र मात्र एउटा ब्रह्माण्डमा एक विभाग (गुण) को स्वामी (प्रभु) हुन् र नाशवान छन् । विस्तृत विवरणको लागि कृपया पढ्नुहोस् निम्न लिखित सृष्टी रचना :-*

*(कविर्देव (कबीर परमेश्वर) ले सुक्ष्म वेद अर्थात् कबिर्बाणीमा आफूद्वारा रचित सृष्टीको ज्ञान स्वयं आफूले नै बताउनु भएको छ जो निम्नलिखित छ )*

*सर्व प्रथम मात्र एक स्थान 'अनामी (अनामय)' लोक थियो । जसलाई अकह लोक पनि भनिन्छ, पूर्णपरमात्मा त्यस अनामी लोकमा एक्लै बस्नु हुन्थ्यो । त्यस परमात्माको वास्तविक नाम कविर्देव अर्थात् कबीर परमेश्वर हो । सबै आत्माहरू त्यस पूर्णधनीको शरीरमा रहेका थिए । यसै कविर्देवको उपमात्मक (पदवीको) नाम अनामी पुरूष हो (पुरूषको अर्थ प्रभु हुन्छ । प्रभुले मनुष्यलाई आफ्नै जस्तो स्वरूपमा बनाउनु भयो, यसैले मानवको नाम पनि पुरूष रहन गयो ।) अनामी पुरूषको एक रोम कूपको प्रकाश संख*

# परमेश्वर कबीर साहेब के असंख्य ब्रह्मण्डों का लघु चित्र

अनामी लोक : इस लोक में आत्मा और परमात्मा एक रूप होकर कबीर साहेब ही अनामी रूप में है। जैसे मिट्टी के ढले (छोटे-छोटे टुकड़े) हो जाते हैं। फिर वर्षा होने पर एक पृथ्वी बन जाती है, अलग अस्तित्व नहीं रहता।

अगम लोक : इस लोक में भी कबीर साहेब अगम पुरूष रूप में रहते हैं।

अलख लोक : इस लोक में भी कबीर साहेब अलख पुरूष रूप में रहते हैं।



*सूर्यहरूको उज्यालो भन्दा पनि धेरै छ ।*

*विशेष :- जस्तै कुनै देशको आदरणिय प्रधानमन्त्रीजीको शरीरको नाम त अन्य हुन्छ तर पद (ओहोदा) को उपमात्मक नाम प्रधानमन्त्री हुन्छ । अनेकौं पटक प्रधानमन्त्रीजी आफूसँग अनेकौं विभाग पनि राख्नु हुन्छ ।*

*अनामी लोक : यस लोकमा आत्मा परमात्मा एउटै रूप भएर कबीर साहेब नै अनामी रूपमा हुनुहुन्छ । जस्तै खेतमा माटोको स-साना डल्लाहरू हुन्छन् त्यसमा पानी पर ेपछि एउटा पृथ्वी बन्न जान्छ, अलग अस्तित्त्व रहदैन् ।*

*अगम लोक : यस लोकमा पनि कबीर साहेब अगम पुरूष रूपमा बस्नु हुन्छ ।*

*अलख लोक : यस लोकमा पनि कबीर साहेब अलख पुरूष रूपमा बस्नु हुन्छ ।*

*जब जुन विभागको कागजातहरूमा दस्तखत (हस्ताक्षर) गर्नुहुन्छ त्यसमा त्यही पद (ओहोदा) लेख्नु हुन्छ । जस्तै गृह मन्त्रालयको कागजातहरूमा दस्तखत गर्नुहुन्छ भने आफुलाई गृह मन्त्री लेख्नु हुन्छ । त्यहाँ त्यही ब्यक्तिको दस्तखतको शक्ति कम हुन जान्छ । यसै प्रकार कबीर परमेश्वर (कविर्देव) को प्रकाश (उज्याँलो)मा अंतर भिन्न भिन्न लोकहरूमा हुन जान्छ ।*

*ठीक यसरी नै पूर्णपरमात्मा कविर्देव (कबीर परमेश्वर) ले तलको तीन वटा अरू लोकहरू (अगम लोक, अलख लोक, सतलोकको रचना शब्द (वचन) ले गर्नु भयो । यही पूर्णब्रह्म परमात्मा कविर्देव (कबीर परमेश्वर) अगम लोकमा प्रकट हुनुभयो तथा कविर्देव ( कबीर परमेश्वर) अगम लोकको पनि स्वामी हुनुहुन्छ तथा त्यहाँ उँहाको उपमात्मक ( पदवीको) नाम अगम पुरूष अर्थात् अगम प्रभु हो । यही अगम प्रभुको मानव सदृश्य शर ीर धेरै तेजोमय छ जसको एक रोम कूपको उज्याँलो (प्रकाश) खरब सूर्यहरूको प्रकाश भन्दा धेरै छ ।*

*यही पूर्णपरमात्मा कविर्देव (कबिर देव कबीर परमेश्वर) अलख लोकमा प्रकट भए तथा स्वयं नै अलख लोकको पनि स्वामी हुनुहुन्छ तथा उपमात्मक (पदवीको) नाम अलख पुरूष पनि यसै परमेश्वरको हो र यस पूर्णप्रभुको मानव सदृश्य शर ीर तेजोमय (स्वर्ज्योति) स्वयं प्रकाशित छ । एक रोम कुपको प्रकाश अरब सूर्यहरूको प्रकाश भन्दा पनि ज्यादा छ ।*

*यही पूर्णप्रभु सतलोकमा प्रकट भए तथा सतलोकको पनि अधिपति उनै हुन्.। यसैले उनको उपमात्मक (पदवीको) नाम सतपुरूष (अविनाशी प्रभु) हो । उनकै नाम अकालमूर्ति - शब्द स्वरूपी राम - पूर्णब्रह्म - परम अक्षर ब्रह्म आदि छन् यही सतपुरूष कविर्देव (कबीर प्रभु) को मानव सदृश्य शरीर तेजोमय छ । जसको एक रोम कूपको प्रकाश करोड सूर्यहरू तथा यति नै चन्द्रमाहरूको प्रकाश भन्दा पनि धेरै छ ।*

*यही कविर्देव (कबीर प्रभु) ले सतपुरूष रूपमा प्रकट भै सतलोकमा विराजमान भएर प्रथम सतलोकमा अन्य रचना गर्नु भयो ।*

*एक शब्द (वचन) बाट सोरह द्वीपहरूको रचना गर्नु भयो । अनि*

*फेरी सोरह शब्दहरूले सोरह पुत्रहरूको उत्पत्ति गर्नु भयो । एउटा मानसरोवरको रचना गर्नुभयो जसलाई अमृतले भर्नु भयो । सोरह पुत्रहरूको नामः- (१) "कूर्म", (२) "ज्ञानी", (३) "विवेक", (४) "तेज", (५) "सहज", (६) "सन्तोष", (७) "सुरति", (८) "आनन्द", (९) "क्षमा", (१०) "निष्काम", (११) "जलरङ्गी", (१२) "अचिन्त", (१३) "प्रेम", (१४) "दयाल", (१५) "धैर्य", (१६) "योग संतायन" अर्थात् "योगजित" ।*

*सतपुरूष कविर्देवले आफ्नो पुत्र अचिन्तलाई सत्यलोकको अन्य रचनाको भार सुम्पेर शक्ति प्रदान गर्नु भयो । अचिन्तले अक्षर पुरूष (परब्रह्म) लाई शब्दले उत्पत्ति गरी भन्नु भयो कि मलाई मदत गर्नु । अक्षर पुरूष नुहाउन मानसरोवरमा गयो त्यहाँ आनन्द आयो अनि सुतेछ । लामो समय सम्म बाहिर आएन । तब अचिन्तको प्रार्थनामा अक्षर पुरूषको निन्द्रा ब्युँझाउन कविर्देव (कबीर परमेश्वर) ले त्यही मानसरोवरको अलिकति अमृत जल लिएर एउटा अण्डा बनाई त्यस अण्डामा एउटा आत्मा प्रवेश गराउनु भयो र अण्डालाई मानसरोवरको अमृत जलमा छोड्नुभयो । अण्डाको गडगडाहटले अक्षर पुरूषको निन्द्रा भङ्ग भयो । उसले अण्डालाई क्रोधले हेर्‍यो जसले गर्दा अण्डाको दुई भाग भयो । त्यसबाट ज्योति निरंजन (क्षरपुरूष) निस्के जो पछि गएर 'काल' भयो । यसको वास्तविक नाम "कैल" हो । अनि सतपुरूष (कर्विदेव) बाट आकाशवाणी भयो कि तपाई दुवै बाहिर आएर अचिन्तको द्वीपमा बस्नुहोस् । आज्ञा अनुसार अक्षर पुरूष र क्षरपुरूष (कैल) दुवै अचिन्तको द्वीपमा बस्न थाले । (केटाकेटीहरूको अबुझपना उनीहरूलाई नै देखाइयो कि काँही फेरी प्रभुत्वको छट्पट्टी न हुन जाओस, किनकी समर्थ बिना कार्य सफल हुँदैन) फेरी पूर्णधनी कविर्देवले सबै रचना आफै गर्नु भयो । आफ्नो शब्द शक्तिले एक राजेश्वरी (राष्ट्री) शक्ति उत्पन्न गरी सबै ब्रह्माण्डहरूलाई स्थापित गर्नुभयो । यसैलाई पराशक्ति परानन्दनी पनि भनिन्छ । पूर्णब्रह्मले सबै आत्माहरूलाई आफ्नै भित्रबाट वचन शक्तिले आफ्नै मानव शरीर सदृष्य उत्पन्न गर्नु भयो । प्रत्येक हंस आत्मालाई परमात्माको शरीर जस्तै बनाउनु भयो । जस्को तेज १६ (सोरह) सूर्यहरू जस्तै मानव सदृष्य नै छ । तर परमात्माको शरीरको एक रूम कुपको प्रकाश करोडौं सूर्यहरूको भन्दा पनि ज्यादा छ । धेरै समय उपरान्त क्षरपुरूष (ज्योति निरंजन) ले सोच्यो कि हामी तीनै जना (अचिन्त - अक्षर पुरूष - क्षरपुरूष) एउटै द्वीपमा बसेका छौं तर अरू एक-एक द्वीपमा बसेका छन् । म पनि साधना गरेर अलग द्वीप प्राप्त गर्नेछु । उसले यस्तो विचार गरेर एउटा खुट्टा उँभिएर सत्तरी (७०) युगसम्म तपस्या गर्‍यो ।*

## "आत्माहरू कालको जालमा कसरी फँसे ?"

*विशेष :- जब ब्रह्म (ज्योति निरंजन) तपस्या गर्दै थियो हामी सबै आत्माहरू, जो आज ज्योति निरंजनको एक्काइस (२१) ब्रह्माण्डमा बसेका छौं । यसको साधनामा आसक्त*

*भएर अर्न्तरात्मा देखि नै यसलाई चाहन थाल्यौं र आफ्नो सुखदायी प्रभु सत्य पुरूष देखि विमुख हुन गयौं । जस कारणले पतिव्रता पदबाट झऱ्यौं । पूर्णप्रभुले बारम्बार सावधान गराउँदा पनि हाम्रो आसक्ति क्षरपुरूषबाट हटेन् ।* (यही प्रभाव आज पनि काल सृष्टीमा विद्यमान छ । जस्तै तन्नेरी केटाकेटीहरू चलचित्र कलाकार (अभिनेता तथा अभिनेत्री ) हरूको भूमिका (एक्टीङ्ग) तथा आफ्नो रोजगारीको उदेश्यले गरेको भूमिका (एक्टीङ्ग) मा अति नै आसक्त हुन्छन् । जति रोके पनि रोकिदैनन् । यदि कुनै अभिनेता वा अभिनेत्री नजिकैको शहरमा आए भने पनि मात्र हेर्न कै लागि केटाकेटीहरूको अपार भीड ओइरिन्छ । रोजी र ोटी अभिनेताहरू कमाउँछन् जवान केटाकेटीहरू ठगिन्छन् । आमा बावुले जति सम्झाए पनि केटाकेटीहरू मान्दैनन् । आँखा छलेर कुनै न कुनै बेला गईहाल्छन् ।

*पूर्णब्रह्म कविर्देव (कबीर प्रभु) ले क्षरपुरूषलाई सोध्नु भयो कि भन के चाहन्छौ ? उसले भन्यो कि पिता श्री यो स्थान मेरो लागि थोरै छ, मलाई अलग्गै द्वीप प्रदान गर्नुहोस् । हक्का कबीर (सत् कबीर) ले उसलाई २१ (एक्काइस) ब्रह्माण्ड दिनु भयो । केही समय उपरान्त ज्योति निरंजनले सोच्यो कि यसमा केही रचना गर्नु पऱ्यो । खाली ब्रह्माण्ड (जग्गा) के कामको ? यो सोचेर पुनः ७० युग तपस्या गरी पूर्णपरमात्मा कविर्देव (कबीर प्रभु) सँग रचना सामाग्रीको याचना गऱ्यो । सतपुरूषले उसलाई तीन गुण तथा पाँच तत्त्व प्रदान गर्नु भयो, जसबाट ब्रह्म (ज्योति निरंजन) ले आफ्नो ब्रह्माण्डमा केही रचना गऱ्यो । फेरि सोच्यो कि यसमा जीव पनि हुनु पर्छ, एक्लै मन लाग्दैन । यो सोचेर ६४ (चौंसठ्ठी) युगसम्म फेरि तप गऱ्यो । पूर्णपरमात्मा कवीर् देवले सोधे पछि उस्ले भन्यो कि मलाई केही आत्मा दिनुस्, म एक्लैको मन लाग्दैन । सतपुरूष कवीरग्नि (कबीर परमेश्वर) ले भन्नु भयो कि हे ब्रह्म ! तिम्रो तपस्याको प्रतिफलमा म तिमीलाई अरू ब्रह्माण्ड दिन सक्छु तर मेरो आत्माहरूलाई कुनै जप-तप साधनाको फलस्वरूपमा दिन सक्तिन । अँ, यदि कुनै आत्मा स्वेच्छाले तिमीसँग जान चाहन्छ भने जान सक्छ । युवा कवीर् (समर्थ कबीर) को वचन सुनेर ज्योति निरजंन हाम्रो (आत्माको) नजिकै आयो । हामी सबै हंस आत्माहरू पहिले देखि नै उसँग आसक्त थियौं । हामीहरू उसलाई चारै तिरबाट घेरेर उभियौं । ज्योति निरंजनले भन्यो कि मैले पिताजी सँग अलग्गै २१ ब्रह्माण्ड प्राप्त गरेको छु । त्यहाँ नाना प्रकारको रमणीय स्थलहरू बनाएको छ । के तपाईहरू मसँग जानुहुन्छ ? हामी सबै हंसहरूले जो आज २१ ब्रह्माण्डमा दुःखित भएका छौं, भन्यौं कि यदि पिताजीले आज्ञा दिनु भयो भने हामी तयार छौं । तब क्षरपुरूष पूर्णब्रह्म महान् कवीर् (समर्थ कबीर प्रभु) कहाँ गएर सबै वार्ता सुनायो । अनि कवीरग्नि (कबीर परमेश्वर) ले भन्नु भयो कि मेरो सामु स्वीकृति दिनेलाई आज्ञा दिन्छु । क्षरपुरूष तथा परम अक्षर पुरूष (कवीरमितौजा) दुवै हामी सबै हंसात्माहरूको नजिक आउनु भयो । सत् कविर्देवले भन्नु भयो कि जो हंस आत्मा ब्रह्मसँग जान चाहन्छ हात उठाएर स्वीकृति देउ । आफ्नै पिताको सामु कसैको हिम्मत भएन । कसैले स्वीकृति दिएनन् । धेरै बेर सम्मको मौनता पछि एउटा हंस आत्माले साहस गऱ्यो र भन्यो कि पिताजी म जान चाहन्छु । अनि त उसको देखा-देखी (जो आज काल*

*(ब्रह्म) को एक्काइस ब्रह्माण्डहरूमा फँसेको छ) हामी सबै आत्माहरूले स्वीकृति दियौं । परमेश्वर कबीरजीले ज्योति निरंजनलाई भन्नु भयो कि तिमी आफ्नो स्थानमा जानुस् । ज-जसले तिमीसँग जाने स्वीकृति दिएको छ म तीसबै हंस आत्माहरू तिमीलाई पठाई दिन्छु । ज्योति निरंजन आफ्नो २१ ब्रह्माण्डमा गयो । त्यस समयसम्म यी ब्रह्माण्डहरू सतलोक मै थिए ।*

*तत् पश्चात पूर्णब्रह्मले सर्वप्रथम स्वीकृति दिने हंसलाई केटीको रूप दिनु भयो तर स्त्री इन्द्री बनाउनु भएन र सबै आत्माहरूलाई (जसले ज्योति निरंजन (ब्रह्म) सँग जाने सहमती दिएका थिए) त्यस केटीको शरीरमा प्रवेश गराई दिनु भयो । त्यसको नाम आष्ट्रा (आदि माया /प्रकृति देवी /दुर्गा) राखेर उहाँले भन्नु भयो कि छोरी मैले तलाई शब्द शक्ति प्रदान गरेको छु जति जीव ब्रह्मले भन्छन् तिमीले उत्पन्न गरिदिनु । पूर्णब्रह्म कर्विदेव (कबीर साहेब) आफ्नो छोरा सहज दासको मार्फत प्रकृतिलाई क्षरपुरूष कहाँ पठाई दिनु भयो । सहज दासजीले ज्योति निरंजनलाई भने कि पिताजीले यी बहिनीको शरीरमा ती सबै आत्माहरूलाई प्रवेश गराई दिनु भएको छ ज-जसले तपाईसँग जाने सहमति ब्यक्त गरेका थिए । तथा यसलाई वचन शक्ति प्रदान गर्नु भएको छ, तपाईजीत जीव चाहनु हुन्छ प्रकृतिले आफ्नो शब्दबाट उत्पन्न गर्नेछिन्। यति भनेर सहज दास आफ्नो द्वीपमा आए ।*

*तरूणी हुनाले केटीको रंग-रूप अति निखारिएको थियो । उसलाई देखेर ब्रह्मको मनमा विषय-वासना उत्पन्न हुन गयो र प्रकृति देवीसित अभद्र गति विधि शुरू गऱ्यो । अनि दुर्गाले भनिन् कि ज्योति निरंजन मसँग पिताजीले प्रदान गरेको शब्द शक्ति छ । तपाई जति प्राणी भन्नु हुन्छ म वचनले उत्पन्न गरिदिन्छु । तपाई मैथुन परम्परा शुरू न गर्नुस् । तपाई पनि उही पिताको शब्दले अण्डाबाट उत्पन्न हुनु भएको हो र म पनि उनै परमपिताको वचनबाट नै पछि उत्पन्न भएकी हुँ । तपाई मेरो दाजु हुनुहुन्छ । दाजु बहिनीको यो संयोग महापापको कारण बन्ने छ । तर ज्योति निरंजनले प्रकृति देवीको एउटा पनि प्रार्थना मानेन र आफ्नो शब्द शक्तिद्वारा नङले स्त्री इन्द्री (भग) प्रकृतिलाई लगाईदियो र बलत्कार गर्ने ठान्यो । त्यही समय दुर्गाले आफ्नो रक्षाको लागि कुनै उपाय नदेखेर सुक्ष्म (सानो) रूप बनाइन् र ज्योति निरंजनको खुला मुखबाट पेटमा प्रवेश गरि पूर्णब्रह्म कवीर देवसित आफ्नो रक्षाको लागि याचना गरिन् । त्यसै बेला कविर्देव (कवीर देव) आफ्नो पुत्र योग संतायन अर्थात् जोगजितको रूप बनाएर प्रकट हुनभयो अनि कन्यालाई ब्रह्मको पेटबाट बाहिर निकाल्नु भयो र भन्नु भयो कि ज्योति निरंजन आज देखि तेरो नाम 'काल' हुनेछ । तेरो जन्म-मृत्यु भई रहनेछ । यसैले तेरो नाम क्षरपुरूष हुनेछ तथा एक लाख मानव शरीर धारी प्राणीहरूलाई प्रति दिन खाने गर्नेछस् अनि सवा लाख उत्पन्न गर्ने गर्छस् । तपाई दुवैलाई २१ ब्रह्माण्ड सहित यहाँबाट निष्कासित गरिन्छ । यति भन्दै २१ ब्रह्माण्ड विमानको जसरी हिड्न थाले । सहज दासको द्वीपको छेउबाट हुँदै सतलोक भन्दा १६ संख कोस (एक कोस लगभग ३ कि.मी. को हुन्छ) टाँढा आएर रोकिए ।*

*विशेष विवरण - अहिले सम्म तीन शक्तिहरूको विवरण आएको छ ।*

# एक ब्रह्मण्ड का लघु चित्र



१. पूर्णब्रह्म जसलाई अन्य उपमात्मक नामहरूले पनि जानिन्छ । जस्तै सतपुरूष, अकालपुरूष, शब्द स्वरूपीराम, परम अक्षर ब्रह्म/पुरूष आदि । यही पूर्णब्रह्म असंख्य ब्रह्माण्डहरूको स्वामी हुनुहुन्छ तथा वास्तवमा अविनाशी हुनुहुन्छ ।

२. परब्रह्म जसलाई अक्षर पुरूष पनि भनिन्छ । यो वास्तवमा अविनाशी होइन । यो ७ शंख ब्रह्माण्डहरूको स्वामी हो ।

३. ब्रह्म जसलाई ज्योति निरंजन, काल, कैल, क्षरपुरूष तथा धर्मराय आदि नामले जानिन्छ, जो मात्र २१ ब्रह्माण्डको स्वामी हो । अब अगाडी यसै ब्रह्म (काल) को सृष्टीको एक ब्रह्माण्डको परिचय दिइनेछ जसमा अरू तीन नाम बारे पढ्नु हुनेछ - ब्रह्मा, विष्णु तथा शिव ।

ब्रह्म तथा ब्रह्मामा भेद - एउटा ब्रह्माण्डमा बनेको सर्वोपरि स्थानमा ब्रह्म (क्षर पुरूष) स्वयं तीन गुप्त स्थानहरूको रचना गरेर ब्रह्मा, विष्णु तथा शिव रूपमा रहन्छन् । साथै आफ्नो पत्नी प्रकृति (दुर्गा) को सहयोगमा तीन छोराहरूको उत्पत्ति गर्छन् । तिनको नाम पनि ब्रह्मा, विष्णु तथा शिव नै राख्छन् ।

जो ब्रह्मको छोरा ब्रह्मा छ त्यो एक ब्रह्माण्डमा मात्र तीन लोकहरू (पृथ्वी लोक, स्वर्ग लोक तथा पाताल लोक) मा एउटा रजोगुण विभागको मन्त्री (स्वामी) छ । यसलाई त्रिलोकीय ब्रह्मा भनिएको छ तथा ब्रह्म जो ब्रह्मलोकमा ब्रह्माको रूपमा रहेको छ उसलाई महाब्रह्मा वा ब्रह्मलोकीय ब्रह्मा भनिएको छ । यसै ब्रह्म(काल) लाई सदाशिव, महाशिव, महाविष्णु पनि भनिन्छ ।

श्री विष्णु पुराणमा प्रमाण :- चतुर्थ अंश अध्याय । पृष्ठ २३०-२३१ म श्री ब्रह्माजीले भन्नु हुन्छ :- त्यो अजन्मा, सर्वमय विधाता परमेश्वरको आदि, मध्य, अन्त, स्वरूप, स्वभाव र सार बारे हामी जान्न सक्दैनौं (श्लोक ८३)

जो मेरो रूप धारण गरी संसारको रचना गर्नु हुन्छ, स्थितिको समय जुन पुरूष रूप छ तथा जो रूद्र रूपले विश्वलाई ग्रास (विश्वलाई निल्छ) गर्छन । अनन्त रूपले सम्पूर्ण जगत्‌लाई धारण गर्दछन् । (श्लोक ८६)

## "श्री ब्रह्ममाजी, श्री विष्णुजी र श्री शिवजीको उत्पत्ति"

काल (ब्रह्म) ले प्रकृति (दुर्गा) सित भन्यो कि अब मेरो कसले के बिगार्न सक्छ ? आफ्नै मनोमानी गर्छु । प्रकृतिले फेरि प्रार्थना गरिन कि केही त लाज मानुहोस् । प्रथम तपाई मेरो दाजु हुनुहुन्छ किन कि उनै पूर्णपरमात्मा (कविर्देव) को वचन शक्तिले तपाईको (ब्रह्मको) अण्डाबाट उत्पत्ति भयो र तिनै परमेश्वरको वचनले पछि मेरो उत्पत्ति भयो । अर्को म तपाईको पेटबाट बाहिर निस्केकीले म तपाईको छोरी भए तथा तपाई मेरो पिताजी हुनुभयो । यो पवित्र नातालाई खराब गर्नु महापाप हुन्छ । मसँग पिताजीले दिएको शब्द शक्ति छ, जति

पनि प्राणी तपाईले भन्नु हुन्छ म वचनले उत्पन्न गरिदिन्छु । ज्योति निरजंनले दुर्गालि भनेको एउटा पनि सुनेन र भन्यो कि मैले जे सजाय पाउनु थियो त्यो पाई सके । मलाई सत्यलोकबाट निष्कासित गरियो । अब मनोमानी गर्छु । यति भनेर काल पुरूष (क्षरपुरूष) ले प्रकृतिसँग जबरजस्ती बिहे गऱ्यो र तीनजना छोराहरू (रजोगुण युक्त - ब्रह्माजी, सतोगुण युक्त - विष्णुजी तथा तामोगुण युक्त - शिव शंकरजी) को उत्पत्ति गर्नु भयो । छोराहरू युवा नहुन्जेल सम्म दुर्गाद्वारा अचेत गराई दिन्छ र युवा भएपछि श्री ब्रह्माजीलाई कमलको फूलमा, श्री विष्णुजी लाई शेष नागको शैऱ्यामा र श्री शिवजीलाई कैलाश पर्वतमा सचेत गराई एक ठाउँमा राखी प्रकृति (दुर्गा) द्वारा यी तीनैको विवाह गराई एक ब्रह्माण्डमा तीन लोकहरू ( स्वर्ग, पृथ्वी तथा पाताल लोक) मा एक-एक विभाग के मन्त्री (प्रभु) नियुक्त गरि दिन्छ । जस्तै श्री ब्रह्माजीको रजोगुण विभागको, विष्णुजीको सतोगुण विभागको र श्री शिव शंकर जीको तमोगुण विभागको तथा स्वयं (महाब्रह्मा -महाविष्णु - महाशिव) गुप्त रूपमा मुख्य मन्त्री पद सम्हाल्नु हुन्छ । एक ब्रह्माण्डमा एक ब्रह्मलोकको रचना गर्नु भएको छ जसमा तीन गुप्त स्थान बनाउनु भएको छ । एक रजोगुण प्रधान स्थान जहाँ यो (ब्रह्म) काल स्वयं महाब्रह्मा (मुख्य मन्त्री) रूपमा बस्नु हुन्छ र आफ्नी पत्नी दुर्गालाई महा सावित्री रूपमा र राख्नु हुन्छ । यी दुवैको संयोगले जुन छोरो यस स्थानमा उत्पन्न हुन्छ त्यो स्वतः रजोगुणी भई हाल्छ । दोस्रो स्थान सतोगुण प्रधान बनाइएको छ । त्यहाँ यो क्षरपुरूष स्वयं महाविष्णु रूप बनाएर बस्दछ तथा पत्नी दुर्गालाई महालक्ष्मी रूपमा राखेर जुन पुत्र गर्दछ त्यसको नाम नाम विष्णु राख्तछ । त्यो बालक सतोगुण युक्त हुन्छ । तेस्रो स्थान तमोगुण प्रधान हुन्छ जहाँ स्वयं काल सदाशिव रूपमा बसी आफ्नी पत्नी प्रकृतिलाई महापार्वती रूपमा राख्नु हुन्छ । यी दुवैको पति-पत्नी ब्यवहारबाट जुन पुत्र उत्पन्न हुन्छ त्यसको नाम शिव राखिन्छ जो तमोगुण युक्त हुन जान्छ । (प्रमाणको लागि हेर्नुस् पवित्र श्री शिव महापुराण, विद्यवेश्वर संहिता पृष्ठ २४-२६ मा जसमा ब्रह्मा, विष्णु, रूद्र तथा महेश्वरमा अन्य सदाशिव हुन्छ तथा रूद्र संहिता अध्याय ६ तथा ७, ९ पृष्ठ नं.१०० देखि १०५ र ११० मा अनुवाद कर्ता श्री हनुमान प्रसाद पोद्दार, गीता प्रेस गोर खपुरबाट प्रकाशित तथा पवित्र श्रीमद्देवीमहापुराण तेस्रो स्कंध पृष्ठ नं. ११४ देखि १२३ सम्म, गीता प्रेस गोरखपुरबाट प्रकाशित, जसको अनुवाद कर्ता हनुमान प्रसाद पोद्दार र चिमन लाल गोस्वामी हुन ) फेरि यिनीहरूलाई भुक्याएर आफैले खानको लागि जीवहरूको उत्पत्ति श्री ब्रह्माजीद्वारा तथास्थिति ( एक अर्कालाई मोह जालमा पारेर काल जालमा फासाउनु) श्री विष्णुजीद्वारा एवं संहार (किनभने काल पुरूषले श्रापमा परेर एक लाख मानव शरीर धारी प्राणीहरूको सूक्ष्म शरीरबाट मैला निकालेरखानु पर्ने हुन्छ त्यसको लागि एक्काइसौं ब्रह्माण्डमा एउटा तप्तशिला छ जो स्वतः तातो नै रहन्छ, त्यसमा तताएर मैला पगालेर खान्छ । जीवहरू मर्दैनन् तर कष्ट असहनीय हुन्छ । फेरि प्राणीहरूको कर्म आधारमा अन्य शरीर प्रदान गर्दछ) शिवजीद्वारा गराउँदछ । जस्तै कुनै घरमा तीन वटा कोठा बनेको होस् । एउटा कोठामा अश्लील (छाँडा) फोटो टाँगेको होस् । त्यस कोठामा जाने बित्तिकै मनमा त्यस्तै मलिन विचार उत्पन्न हुन जान्छ । अर्को कोठामा साधु-संतहरू, भक्तहरूको चित्र लागेको छ भने मनमा राम्रा विचार, परमात्माको चिन्तन आईरहन्छ । तेस्रो कोठामा देश

भक्तहरू वा शहीदहरूको चित्र लागेको छ भने त्यस्तै नै जोशीलो विचार उत्पन्न हुन जान्छ । ठीक यसै प्रकार ब्रह्म (काल) ले आफ्नो सुझ-बुझबाट उपरोक्त तीनै गुण प्रधान स्थानहरूको रचना गरेको छ ।

## "तीनै गुण के हो ? प्रमाण सहित"

"तीनै गुण अर्थात् रजोगुण ब्रह्माजी, सतोगुण विष्णुजी, तमोगुण शिवजी हुन् । यी तीनै ब्रह्म (काल) तथा प्रकृति (दुर्गा) बाट उत्पन्न भएका हुन् र नाशवान छन्"

प्रमाण : गीता प्रेस गोरखपुरबाट प्रकाशित श्री शिव महापुराण जसको सम्पादक छ श्री हनुमान प्रसाद पोद्दार पृष्ठ सं. २४ देखि २६ विद्यवेश्वर संहिता तथा पृष्ठ ११० अध्याय ९ रूद्र संहिता "यस प्रकार ब्रह्मा-विष्णु तथा शिव तीनै देवताहरूमा गुण छ तर शिव (ब्रह्म-काल) गुणातीत भनिएको छ ।

दोस्रो प्रमाण :- गीता प्रेस गोरखपुरबाट प्रकाशित श्री मद् देवीभागवत पुराण जसको सम्पादक छ श्री हनुमान प्रसाद पोद्दार चिमन लाल गोस्वामी, तेस्रो स्कंध, अध्याय ५ पृष्ठ १२३:- भगवान विष्णुले दुर्गाको स्तुति गनु भयो : भन्नु भयो कि म (विष्णु) ब्रह्मा तथा शंकर तपाई कै कृपाले विद्यमान छौं । हाम्रो त आविर्भाव (जन्म) तथा तिरोभाव (मृत्यु) हुन्छन् । हामी नित्य (अविनाशी) छैनौं । तपाई नै नित्य, जगत् जननी, प्रकृति र सनातनी देवी हुनुहुन्छ । भगवान शंकरले भन्नुभयो : यदि भगवान ब्रह्मा तथा भगवान विष्णु तिमीबाट नै उत्पन्न भएका छन् भने म तमोगुणी लीला गर्ने शंकर के तपाईको संतान भइन र ? अर्थात् मलाई पनि उत्पन्न तिमीले नै गरेकी हौं । यस संसारको सृष्टी-स्तिथि र संहारमा तपाईको गुण सदा सर्वदा छ । यही तीन गुणहरूबाट उत्पन्न हामी ब्रह्मा, विष्णु तथा शंकर नियमानुसार कार्यमा तत्पर रहन्छौं ।

उपरोक्त यो विवरण मात्र हिन्दीमा अनुवादित श्री देवीमहापुराणबाट लिइएको हो जसमा केही तथ्यहरू लुकाइएका छन् । यसैले यही प्रमाण हेरौं कि श्री मद्देवीभागवत महापुराण सभाषटिकम् समहात्यम्, खेमराज श्री कृष्ण दास प्रकाशन मुम्बइ, यसमा संस्कृत समेत शिन्दी अनुवाद गरिएको छ । तेस्रो स्कंध अध्याय ४ पृष्ठ १०, श्लोक ४२ :-

ब्रह्मा - अहम् ईश्वरः फिल ते प्रभावात्सर्वे वयं जनि युवा न यदा तू नित्याः, के अन्य सूराः शतमख प्रमुखाः च नित्या नित्या त्वमेव जननी प्रकृतिः पुराण (४२) ।

नेपाली अनुवाद : हे माता! म, बिष्णु र शिव तपाईकै प्रभावले जन्मवान छौं, नित्य छैनौं अर्थात् हामी अविनाशी छैनौं, फेरि अन्य इन्द्रादि अरू देवता कुन किसिमले नित्य हुन सक्छन् । तिमी नै अविनाशी हौ, प्रकृति तथा सनातनी देवी हौं । (४२)

पृष्ठ ११-१२, अध्याय ५, श्लोक ८ : यदि दयार्द्रमना न सदांऽबिके कथमहं विहितः च तमोगुणः कमलजश्च रजोगुणसंभवः सुविहितः किमु सत्वगुणों हरिः । (८)

अनुवाद : भगवान शंकरले भन्नु भयो :- हे माता! गदि हामी माथि दयायुक्त

*हुनुहुन्छ भने मलाई तमोगुण किन बनाउनु भयो, कमलबाट उत्पन्न ब्रह्मालाई रजोगुण किन बनाउनु भएको र विष्णुलाई सतोगुण किन बनाउनु भएको? अर्थात् जीवहरूको जन्म-मृत्यु रूपी दुष्कर्ममा किन लगाउनु भयो ?*

*श्लोक १२ :- रमयसे स्वपतिं पुरूषं सदा तव गतिं न हि विह विद्म शिवे (१२)*

*अनुवाद - आफ्नो पति पुरूष अर्थात् काल भगवानसँग सधैं भोग-विलासमा र हन्छ्यौं । तपाईको गति कसैले जान्दैन ।*

*निष्कर्ष :- उपरोक्त प्रमाणहरूबाट प्रमाणित भयो कि रजोगुण - ब्रह्म, सतोगुण विष्णु तथा तमोगुण शिवजी हुन् यी तीनै नाशवान छन् । दुर्गाको पति ब्रह्म (काल) हो र यो उ सित भोग विलास गर्छ ।*

## ब्रह्म (काल) को अव्यक्त रहने प्रतिज्ञा
## सुक्ष्म वेदबाट शेष सृष्टी रचना—

*तीनै पुत्रहरूको उत्पत्ति पछि ब्रह्मले आफ्नी पत्नी दुर्गा (प्रकृति) लाई भन्नु भयो म प्रतिज्ञा गर्छु कि भविष्यमा म कसैलाई आफ्नो वास्तविक रूपमा दर्शन दिने छैन । जसले गर्दा म अव्यक्त मानिने छु । दुर्गासँग भन्नु भयो कि तपाई मेरो भेद कसैलाई नभन्नु । म गुप्त रहने छु । दुर्गाले सोधिन् के तपाई आफ्नो छोराहरूलाई पनि दर्शन दिनुहुन्न ? ब्रह्मले भन्नु भयो म आफ्नो छोराहरू र अन्य कसैलाई कुनै पनि साधनाले दर्शन दिने छैन । यो मेरो अटल नियम रहने छ । दुर्गाले भनिन् यो त तपाईको उत्तम नियम होइन जो तपाई आफ्नो संतानसित पनि लुकेर बस्नु हुनेछ । तब कालले भन्नु भयो - दुर्गा! यो मेरो विवशता हो । मलाई प्रतिदिन एकलाख मानव शरीर धारी प्राणीहरूको आहार गर्ने श्राप लागेको छ । यदि मेरो छोराहरू (ब्रह्मा, विष्णु, महेश) लाई थाहा भयो भने उनीहरूले उत्पत्ति, स्थिति, र संहार को कार्य गर्ने छैनन् । यसैले मेरो यो अनुत्तम नियम सदा रहनेछ । जब यी तीनै छोराहरू अलिक ठूला भएपछि यीनलाई अचेत पारिदिनु । मेरो विषयमा केही नभन्नु, नत्र म तिमीलाई पनि दण्ड दिनेछु । दुर्गा यस डरले वास्तविकता भन्दिनन् । यसैले गीता अध्याय ७ श्लोक २४ मा भनिएको छ कि यो बुद्धिहीन जन समुदाय मेरो अनुत्तम नियम देखि अपरिचित छन् म कहिले पनि कसै सामु प्रकट हुन्न आफ्नो योग मायाले लुकेको हुन्छु । त्यसैले म अव्यक्तलाई मनुष्य रूपमा आएको अर्थात् कृष्ण मान्दछन् ।*

(अबुद्धयः) बुद्धि हीन (मम्) मेरो (अनुत्तमम्) अनुत्तम अर्थात् घटिया (अव्ययम्) अविनाशी ( परम् भावम्) विशेष भावलाई (अजानन्तः) नजानिकन (माम् अव्यक्तम्) म अव्यक्तलाई (व्यक्तिम्) मनुष्य रुपमा (आपन्नम) आएको (मन्यन्ते) मान्छन् अर्थात् म कृष्ण होइन । (गीता अध्याय ७ श्लोक २४)

*गीता अध्याय ११ श्लोक ४७/४८ मा भनिएको छ कि यो मेरो वास्तविक काल रूप हो । यसको दर्शन अर्थात् ब्रह्म प्राप्ति न त वेदहरूमा वर्णित विधिले, न जपले, न तपले*

*र न कुनै क्रियाबाट हुन सक्छ ।*

*जब तीनै छोराहरू युवावस्थाका भए तब आमा भवानी (प्रकृति, अष्टंङ्गी) ले भन्नु भयो कि तिमीहरू सागर मन्थन गर । प्रथम पटक सागर मन्थन हुँदा (ज्योति निरंजनले आफ्नो श्वाँस (साँस) बाट चार वेद उत्पन्न गरे । उनलाई गुप्त वाणीद्वारा आज्ञा भयो कि सागरमा निवास गर्नु) चारै वेद निस्के । तिनलाई लिएर आमा कहाँ आउँदा आमाले भन्नु भयो कि चार ँ वेद ब्रह्माले राखोस् र पढोस् ।*

*नोट :- वास्तवमा पूर्णब्रह्मले ब्रह्म अर्थात् काललाई पाँच वेद प्रदान गर्नु भएको थियो तर बह्माले मात्र चार वेद प्रकट गरे । पाचौं वेद लुकाएर राखे । जसलाई पूर्णपरमात्मा स्वयं प्रकट भएर कविर्गिर्भीः अर्थात् कर्विवाणी (कबीर वाणी) द्वारा लोकोक्तिहरू ब दोहाहर को माध्यमबाट प्रकट गर्नु भएको छ ।*

*दोस्रो पटक सागर मंथन हुँदा तीन कन्याहरू भेटिए । आमाले तीनै छोराहरूलाई बाँडी दिनु भयो । प्रकृति (दुर्गा) ले आफ्नै अर्को तीन रूप (सावित्री, लक्ष्मी, र पार्वती) धारण गरि समुन्द्रमा लुकाई दिइन् । समुन्द्र मन्थनको बेला बाहिर आइन् । उही प्रकृतिको तीन रूप भएर भगवान ब्रह्मालाई सावित्री, भगवान विष्णुलाई लक्ष्मी, भगवान शंकर लाई पार्वती पत्नीको रूपमा दिइन् । तीनै जनाहरूले भोग विलास गरे । सुर तथा असुर दुवैको जन्म भयो ।*

*{जब तेस्रो पटक सागर मन्थन हुँदा चौंदह रत्न ब्रह्मालाई, अमृत विष्णु र देवताहरूलाई, मद्य (रक्सी) असुरहरूलाई तथा विष परमार्थ शिवले आफ्नो कण्ठमा राख्नु भयो । यो त धेरै पछाडिको कुरा हो ।} जब ब्रह्मा वेद पढ्न लागे अनि थाहा भयो कि सर्व ब्रह्माण्डहरूको रचना गर्ने सबै कुलको मालिक पुरूष (प्रभु) कोही अरू नै छ । तब ब्रह्माजीले विष्णुजी र शंकरजीलाई भन्नु भयो कि वेदहरूमा वर्णन छ कि सृजनहार कोही अरू नै प्रभु छ तर वेदले भन्छन् कि भेद हामी पनि जान्दैनौं, त्यसको लागि संकेत छ कि कुनै तत्त्वदर्शि संतसित सोध । अनि ब्रह्मा आएर आमालाई सबै वृतान्त सुनाये । आमाले भन्ने गर्थिन कि म बाहेक अरू कोही छैन् । म नै कर्ता हूँ, म नै सर्वशक्तिमान हूँ तर ब्रह्माले भने कि वेद ईश्वर कृत छ यो झुटो हुन सक्तैन । दुर्गाले भनिन् तिम्रो पिताले तिमीलाई दर्शन दिदैनन्, उनले प्रतिज्ञा गर्नु भएको छ । तब ब्रह्माले भने कि आमा अब तपाईको कुर ामा मलाई विश्वास छैन । म त्यस पुरूष (प्रभु) लाई पत्ता लगाएरै छाड्छु । दुर्गाले भनिन् कि यदि उनले तिमीलाई दर्शन दिएनन् भने तिमी के गर्ने छौ । ब्रह्माले भने कि म तपाईलाई आफ्नो अनुहार नै देखाउदिन । अर्को तिर ज्योति निरंजनले प्रतिज्ञा गरेको छ कि म कसैलाई दर्शन दिने छैन अर्थात् २१ ब्रह्माण्डमा कहिले पनि आफ्नो वास्तविक काल रूपमा आकार मा आउँदिन ।*

गीता अध्याय नं. ७ श्लोक नं. २४

अव्यक्तम, व्यक्तिम, आपन्नम्, मन्यन्ते, माम्, अबुद्धयः ।
परम्, भावम्, अजानन्तः, मम, अव्ययम्, अनुत्तमम् ।।

अनुवाद : (अबुद्धयः) बुद्धिहीन मानिस (मम्) मेरो (अनुत्तम्) अश्रेष्ठ (अव्ययम्) अटल (परम्) परम (भावम्) भावलाई (अजानन्तः) नजानीकन (अव्यक्तम्) अदृश्यमान (माम्) म काललाई (व्यक्तिम्) आकारमा कृष्ण अवतार (आप□म्) प्राप्त भएको (मन्यन्ते) मान्छन् ।

गीता अध्याय नं. ७ को श्लोक नं. २५

न, अहम्, प्रकाशः, सर्वस्य, योगमायासमावृतः ।

मूढः, अयम्, न, अभिजानाति, लोकः, माम्, अजम्, अव्ययम् ।।२५।।

अनुवाद : (अहम्) म (योगमाया समावृतः) योगमायाले लुकेको (सर्वस्य) सबैको (प्रकाशः) प्रत्यक्ष (न) हुँदैन अर्थात् अदृश्य रहन्छु यसैले (अजम्) जन्म नलिने (अव्ययम्) अविनाशी अटल भावलाई(अयम्) यो (मूढः) अज्ञानी (लोकः) जन समुदाय संसार (माम्) मलाई (न अभिजानाति) जान्दैनन् अर्थात् मलाई अवतार रूपमा आएको मान्छन् किन कि ब्रह्म आफ्नो शब्द शक्तिले आफ्नो अनेक रूप बनाउँछन् । यो दुर्गाको पति हो यसैले यस मन्त्रमा भनिरहेको छ कि म श्री कृष्ण आदिको जस्तै दुर्गाबाट जन्म लिए ।

## "आफ्नो पिता ब्रह्म प्राप्तिको लागि ब्रह्माको प्रयत्न"

*तब दुर्गाले ब्रह्माजीलाई भन्नु भयो कि अलख निरंजन तिम्रो पिता हो तर उहाँले तिमीलाई दर्शन दिनु हुने छैन । ब्रह्माले भन्यो कि म दर्शन गरेरै आउँछु । माताले सोध्नु भयो कि यदि तिमीलाई दर्शन भएन भने के गर्छौ ? ब्रह्माले भने म प्रतिज्ञा गर्छु कि यदि पिताको दर्शन भएन भने म तपाईको अगाडी आउँदिन । यति भनेर ब्रह्माजी व्याकुल भै उत्तर दिशा तर्फ लागे जहाँ अध्याँरो नै अध्याँरो थियो । त्यहाँ ब्रह्माले चार युग सम्म ध्यान लगाए तर केही पनि प्राप्त भएन । कालले आकाशवाणी गर्‍यो कि दुर्गा सृष्टि रचना किन गरिनौं ? भवानीले भनिन कि तपाईको जेष्ठ पुत्र ब्रह्मा जिद्दी गरेर तपाई कै खोजीमा गएको छ । ब्रह्म (काल) ले भन्यो उसलाई तुरून्त बोलाउ, उसलाई म दर्शन दिने छैन । ब्रह्मा बिना जीव उत्पत्तिको कार्य असम्भव छ । अनि दुर्गा (प्रकृति) ले आफ्नो शब्द शक्तिले गायत्री नामकी युवती उत्पन्न गरिन तथा बह्मालाई लिएर आउन् भनिन् । गायत्री ब्रह्माजी भएको ठाउँमा गइन् तर ब्रह्माजी समाधि लगाई बसेका थिए । उनलाई थाहै भएन कि कोही आएको छ । तब आदि कुमारी (प्रकृति) ले गायत्रीलाई ध्यानद्धारा आदेश दिइन कि यिनलाई चरण स्पर्श गर । तब गायत्रीले त्यसै गरिन । ब्रह्माजीको ध्यान भङ्ग भयो । उनले क्रोधित भई भने कि को पापिनी हो जसले मेरो ध्यान भङ्ग गर्‍यो ? म तलाई श्राप दिन्छु । गायत्री भन्न थालिन कि मेरो दोष छैन् । पहिला मेरो कुरा सुन्नुस अनि मलाई श्राप दिनु होला । मलाई आमाले तिमीलाई फर्काएर ल्याउन भनेको छ, किन कि तपाई बिना जीव उत्पत्ति हुन सक्तैन । ब्रह्माले भन्यो म कसरी जाउँ ? पिताजीको दर्शन त भएन, त्यसै जाँदा मेरो उपहास हुनेछ । यदि तिमी माताजी समक्ष यो भन् कि ब्रह्मालाई पिता (ज्योति निरंजन) को दर्शन भएको छ, मैले आफ्नै आँखाले देखेको हो अनि म तिमीसँग जान्छु । तब गायत्रीले भनिन् कि तपाई मसँग संभोग (सेक्स) गर्नु हुन्छ भने म तपाईको झुट्टो साक्षी (गवाही) दिन्छु । ब्रह्माले सोचे*

कि पिताजीको दर्शन भएन, यसै जाउँ त माताजीको अगाडी शरम लाग्नेछ अरू उपाय नदेखेर गायत्रीसँग संभोग (रति क्रिया) गऱ्यो ।

त्यसपछि गायत्रीले भनिन् कि एउटा अर्को साक्षी किन न तयार गर्ने । ब्रह्माको स्वीकृति लिएर गायत्रीले शब्द शक्तिबाट एउटा युवती (पुहुपवती नामकी) गरिन् र दुवैले उसलाई भने कि तिमीले गवाही दिनु पर्छ कि ब्रह्माले पिताजीको दर्शन पाएका छन् । तब पुहुपवतीले भनिन् कि म झुट्टो गवाही किन दिने ? हो, यदि ब्रह्मा मसँग रति क्रिया (संभोग) गर्छन् भने गवाही दिन सक्छु । गायत्रीले ब्रह्मालाई सम्झाइन् (उक्साइन्) कि अरू कुनै उपाय छैन् अनि ब्रह्माले पुहुपवति सित संभोग गऱ्यो अनि तीनै जना आदि माया (प्रकृति) कहाँ आए । दुवै देवीहरूले उपरोक्त शर्त यसैका लागि राखेका थिए कि यदि ब्रह्माले मातासँग हाम्रो झुट्टो गवाहीको पोल खोली दियो भने माताले हामीलाई श्राप दिनेछिन् । त्यसैले उसलाई पनि दोषी बनाइएको ।

(यहाँ महाराज गरीबदासजी भन्नु हुन्छ कि- 'दास गरीब यह चुक धुरों धुर')

## "माता (दुर्गा) द्वारा ब्रह्मालाई श्राप दिनु"

तब माताले ब्रह्मालाई सोध्नु भयो - के तिमीलाई आफ्नो पिताको दर्शन भयो ? ब्रह्माले भने हो मलाई पिताजीको दर्शन भयो । दुर्गाले भनिन् साक्षी बताउ । ब्रह्माले भने यी दुवैको समक्ष साक्षात्कार भएको छ । तब दुवैले भने कि हो हामीले आफ्नै आँखाले देखेका छौं । फेरि भवानीलाई शंका भयो कि ब्रह्मले मलाई भनेको थियो कि म कसैलाई दर्शन दिने छैन तर यिनीहरू भन्छन् दर्शन भएको हो । अनि अष्टङ्गीले ध्यान लगाएर काल (ज्योति निर ंजन) लाई सोधिन् कि यो के कहानी हो ? ज्योति निरंजनजीले भने कि यी तीनै झुट्टो बोल्दै छन् । अनि माताले भनिन् तिमी झुट्टो बोल्दैछु । आकाशवाणी भएको छ कि यिनलाई कुनै दर्शन भएको छैन् । यो कुरा सुनेर ब्रह्माले भने कि माताजी म कसम खाएर पिताजीको खोजीमा गएको थिए । तर पिताजी (ब्रह्म) को दर्शन भएन । तपाईको सामु आउनलाई लाज लागेको थियो । यसैले हामीले झुट्टो बोल्यौं । तब माता(दुर्गा) ले भनिन् कि अब म तिमीलाई श्राप दिनेछु ।

ब्रह्मालाई श्राप :-- तेरो पूजा संसारमा हुने छैन् । पछाडी आउने तेरो वंशज पाखण्डी हुनेछन् । झुट्टो कुरा गरेर संसारलाई ठग्ने छन् । बाहिरबाट कर्म काण्ड गर्दै गरेको देखिन्छ भने भित्रबाट विकार गर्नेछन् । कथा पुराणहरू पढेर अरूलाई सुनाउने गर्छन्, तर स्वयंलाई ज्ञान हुँदैन कि सद्ग्रन्थहरूमा वास्तविकता के छ ? र पनि मान वश तथा धन प्राप्तिको लागि गुरू बनेर अनुयायीहरूलाई लोकवेद (शास्त्र विरूद्व दन्त्य कथा) सुनाउदै रहन्छन् । देवी -देवताहरूको पूजा गरेर तथा गराएर, अरूको निन्दा गरी कष्ट माथि कष्ट उठाउनेछन् । जो उनका अनुयाई हुनेछन तिनलाई परमार्थ बताउन छैनन् । दक्षिणाको लागि जगतलाई गलत बाटो देखाई रहनेछन् । आफूलाई सर्व श्रेष्ठ मान्ने छन्, अरूलाई

*होचा सम्झने छन् । माताजीको मुखबाट यो सुने पछि ब्रह्मा मुर्छित भै भुईमा लड्यो । धेर ै समय पछाडी होशमा आयो ।*

*गायत्रीलाई श्राप :- तँ मृतलोकमा गाई बन्ने छेस् र तेरा अनेक साँढे पति हुनेछन् ।*

*पुहुपवतीलाई श्राप :— तेरो ठाउँ फोहोर मैलामा हुनेछ । तेरो फूललाई कसैले पनि पूजामा लाने छैनन् । यस झुट्टो गवाही (साक्षी) को कारण तलाई यो नर्कवास भोग्नु पर्नेछ । तेरो नाम केवडा केतकी हुनेछ । (हरियाणामा कुसोंधी भनिन्छ । यो फोहोर ठाउँमा हुन्छ ।)*

*यसरी तीनै जनालाई श्राप दिएपछि माता भवानी धरै पछुताईन् । (यस प्रकार पहिले तजीव बिना सोची मन (काल निरंजन) को प्रभावले गलत कार्य गर्दछ तर जब आत्मा (सतपुरूष अंश) को प्रभावले उसलाई ज्ञान हुन्छ अनि पछुतो गर्न थाल्छ । जसरी माता-पिता आफ्नो केटाकेटीको सानो गल्तीको कारणमा हप्काउँछन् या कुट्छन् (क्रोधवशमा) तर पछाडी धेरै पछुतो गर्छन् । यस्तै प्रक्रिया मन (काल निरंजन) को प्रभावले सबैजीवहरूमा क्रियाशिल भई रहेको छ ।) हो, यहाँ एउटा कुरा छ कि निरंजन (काल ब्रह्म) ले पनि आफ्नो कानून बनाएको छ कि यदि कुनै जीव कुनै दुर्बल जीवलाई सताउछ भने उसलाई त्यसको बदला दिनु पर्छ । जब आदि भवानी (प्रकृति, अष्टङ्गी) ले ब्रह्मा, गायत्री र पुहुपवतीलाई श्राप दिइन तब अलख निरंजन(ब्रह्म-काल) ले भन्यो कि हे भवानी(प्रकृति/अष्टङ्गी) यो तिमीले राम्रो गरिनौं । अब म (निरंजन) तिमीलाई श्राप दिन्छु कि द्वापर युगमा तेरो पनि पाँच पति हुनेछन् । (द्रोपदी नै आदिमायाको अवतार हो) जब यो आकाश वाणी सुनिन् तब आदि मायाले भनिन् कि हे ज्योति निरंजन (काल) म तेरो वशमा छु जे मन लाग्छ गर ।*

## "आफ्नो पिता प्राप्तिको लागि विष्णुको प्रस्थान र माताजीबाट आशिर्वाद पाउनु"

*यसपछि विष्णुसित प्रकृतिले भनिन् कि पुत्र तिमी पनि आफ्नो पिताको पत्ता लगाउँ । तब विष्णु आफ्नो पिताजी काल (ब्रह्म) को खाजीमा पाताल लोकमा गए, जहाँ शेषनाग थियो । उसले विष्णुलाई आफ्नो सीमामा प्रवेश गरेको देखेर क्रोधित भै विषले भरिएको फुँकार गर्न थाल्यो । उसको विषको प्रभावले विष्णुजीको रङ्ग साँवला हुन गयो, जस्तै स्प्रे पेंट हुन्छ । तब विष्णुले त्यो नागलाई सजाय दिन लाग्नु भयो तब ज्योति निरंजन (काल) ले देख्यो कि अब विष्णुलाई शान्त गर्नु पर्‍यो भने आकाशवाणी गरायो कि हे विष्णु अब तिमी आफ्नो माताजी कहाँ जाउँ र सत्य-सत्य सबै विवरण भनिदिनु तथा जो कष्ण तिमीलाई शेषनागबाट भएको छ, यसको प्रतिशोध द्वापर युगमा लिनु । द्वापर युगमा तिमी (विष्णु) त कृष्ण अवतार धारण गर्नेछौं र कालीदहमा कालिन्द्री नामक नाग, शेष नागको अवतार हुनेछ ।*

ऊँच होई के नीच सतावै, ताकर ओएल (बदला) मोही सों पावैं ।
जो जीव देई पीर पुनी काँहु, हम पुनि ओएल दिवावें ताहूँ ।।

*त्यसपछि विष्णुजीले माताजी नजीक आएर सत्य-सत्य कुरा भने कि मलाई*

*पिताजीको दर्शन भएन् । यस कुराले माता (प्रकृति) धेरै खुशी भईन् र भनिन् कि पुत्र तिमी सत्यवादी छौ । अब म आफ्नो शक्तिले तिम्रो पितासँग भेट गराउँछु साथै तिम्रो मनको संशय हटाउँछु ।*

कबीर देख पुत्र तोहि पिता भीटाऊँ, तौरे मन का धोखा मिटाऊँ ।
मन स्वरूप कर्ता कह जानों, मन ते दूजा और न मानो ।
स्वर्ग पाताल दौर मन केरा, मन अस्थीर मन अहै अनेरा ।
निंरकार मन ही को कहिए, मन कीआस निश दिन रहिए ।
देख हूँ पलटि सुन्य मह ज्योति, जहाँ पर झिलमिल झालर हाती ।।

*यसरी माता (अष्टङ्गी) ले विष्णुलाई भनिन् कि मन नै जगतको कर्ता हो र त्यही ज्योति निरंजन हो । ध्यानमा जुन एक हजार ज्योतिहरू देखिन्छन् त्यही उसको रूप हो । जो शंख, नगारा, घण्टी, आदि बाजा सुनिन्छ ती महास्वर्गमा निरंजन कै बज्दछन् । तब माता (प्रकृति, अष्टङ्गी) ले भनिन् कि पुत्र तिमी सबै देवका मुकुट हौ र तिम्रो हरेक कामना र कार्य म पूरा गर्ने छु । तिम्रो पूजा सर्वत्र हुनेछ । तिमीले साँचो कुरा गर्‍यौ । कालको २१ ब्रह्माण्डको प्राणीहरूको विशेष आदत छ कि उ आफ्नो व्यर्थ महिमा बनाउँछन् । जस्तै दुर्गाजी श्री विष्णुजीलाई भन्छिन् कि तिम्रो पूजा जगतमा हुनेछ । मैले तिमीलाई तिम्रो पिताको दर्शन गराई दिए । दुर्गाले मात्र प्रकाश देखाएर श्री विष्णुलाई भ्रमित पारिन् । श्री विष्णुजीले पनि आफ्नो अनुयायीहरूलाई प्रभुको यस्तै स्थिति हो भनेर संझाउन थाले कि परमात्माको मात्र प्रकाश देखिन्छ, परमात्मा निराकार छ । त्यसपछि आदि भवानी रूद्र (महेशजी) कहाँ गई र भनिन् कि महेश तिमी पनि आफ्नो पिताको खोजी गर । तिम्रो दुवै दाजुलाई त पिताको दर्शन हुन सकेन उनीहरूलाई जे दिनु पर्ने थियो त्यो दिए अब तिमी माँग जे माँग्नु छ । तब महेशजीले भने कि हे जननी ! मेरा दुवै दाजुहरूलाई पिताको दर्शन भएन भने प्रयत्न गर्नु बेकार छ । कृपा गरी मलाई यस्तो वरदार दिनुहोस् कि म अमर भई जाउँ । तब माताले भनिन् म यस्तो गर्न सक्दिन, बरू म युक्ति बताउन सक्छु कि तिम्रो आयु सबैभन्दा बढी होस् । त्यो विधि योग समाधि हो (यसैले महादेवजी बढी समाधि मै रहनु हुन्छ) । यस प्रकार माता (अष्टङ्गी, प्रकृति) ले तीनै पुत्रहरूलाई विभाग बाँडि दिनु भयो :—*

*भगवान ब्रह्माजीलाई काल लोकमा चौरासी लाख चोला (शरीर) हरू रच्ने (बनाउने) अर्थात् रजोगुण प्रभावित गरी सन्तान उत्पत्तिको लागि प्रेरित गरी जीव उत्पत्ति गर ाउने विभाग ।*

*भगवान विष्णुजीलाई ती जीवहरूको पालनपोषण (कर्मानुसार) गर्ने तथा माया-मोह उत्पन्न गराई स्थिति बनाई राख्ने विभाग ।*

**"भगवान शिव शंकर (महादेव) लाई संहार गर्ने विभाग ।"**

*किनकि यिनीहरूका पिता निरंजनले एक लाख मानव शरीर धारी जीव प्रतिदिन*

*खानु पर्ने हुन्छ । यहाँ मनमा एउटा प्रश्न उत्पन्न हुन सक्छ कि ब्रह्मा, विष्णु र शंकरजीबाट उत्पत्ति, स्थिति र संहार कसरी हुन्छ ? यी तीनै आ-आफ्नै लोकमा बस्नु हुन्छ । जस्तै अचेल संचार प्रणाली चलाउनका लागि उपग्रहहरूलाई माथि आकाशमा छोडिन्छ र ती उपग्रहहरू तल पृथ्वीमा संचार प्रणालीलाई चलाउछन् । ठीक यसरी नै यी तीनै देवहरू जहाँ बसे पनि यिनका शरीरबाट निस्किने सुक्ष्म गुणका तरङ्गहरूले तीनै लोकहरूमा आफ से आफ हरेक प्राणी माथि प्रभाव बनाई राख्न् ।*

*उपरोक्त विवरण एक ब्रह्माण्डमा ब्रह्म (काल) को रचनाको छ । यस्ता क्षरपुरूष (काल) को एक्काइस ब्रह्माण्ड छन् ।*

*तर क्षरपुरूष (काल) स्वयं व्यक्त अर्थात् वास्तविक शरीर रूपमा सबै समक्ष आँउदैन । त्यसैलाई प्राप्त गर्न तीनवटै देव (ब्रह्माजी, विष्णुजी र शिवजी) लाई वेदहरूमा वर्णित विधि अनुसार भरसक साधना गर्दा पनि ब्रह्म (काल) को दर्शन भएन । पछि ऋषिहरूले वेद पढे । त्यसमा लेखिएको छ कि 'अग्नेः तनूर् असि' (पवित्र यजुर्वेद अ. १ मन्त्र १५) परमेश्वर सशरीर छन् तथा पवित्र यजुर्वेद अध्याय ५ मन्त्र १ मा लेखिएको कि 'अग्नेः तनूर असि विष्णवे त्वा सोमस्य तनूर् असि' । यस मन्त्रमा दुई पटक वेद गवाही दिन्छ कि सर्व व्यापक, सर्व पालन कर्ता सतपुरूष सशरीर छन् । पवित्र यजुर्वेद अध्याय ४० मन्त्र ८ मा भनिएको छ कि (कवीर् मनिषी) जुन परमेश्वरको चाहना सबैले गर्छ त्यो कवीर् अर्थात् कबीर हुन् । उनको शरीर विना नाडी (अस्नाविरम्) को छ, (शुक्रम्) वीर्यबाट बनेको पाँच तत्त्वले निर्मित भौतिक (अकायम्) काया रहित छ । त्यो सबैका मालिक सर्वोपरि सत्यलोकमा विराजमान छन् । त्यो परमेश्वरको स्वयं प्रकाशित तेजपुंजको शरीर हो जो शब्द रूप अर्थात् अविनाशी छ । उही कविर्देव (कबीर परमेश्वर) हो जो सर्व ब्रह्माण्डहरूको रचनागर्ने (विधाता) सबै ब्रंहाण्डहरूको रचनहार (स्वयम्भूः)स्वयं प्रकट हुने (यथा तथ्य अर्थान्) वास्तवमा (शाश्वत्) अविनाशी छ (गीता अध्याय १५ श्लोक १७ मा पनि प्रमाण छ ।) भावार्थ छ कि पूर्णब्रह्मको शरीरको नाम कबीर (कवीर देव) हो । त्यस परमेश्वरको शरीर नूर तत्त्वले बनेको छ । पर मात्माको शरीर अति सूक्ष्म छ जो त्यो साधकलाई देखिन्छ जसको दिव्य दृष्टि खुलि सकेको छ । यस प्रकार जीवको पनि सूक्ष्म शरीर छ जसमाथि पाँच तत्त्वको खोल (कभर) अर्थात् पाँच तत्त्वको काया चढेको हुन्छ जो माता-पिताको संयोगले (शुक्रम) अर्थात् वीर्यबाट बनेको हुन्छ । शरीर त्यागे पछि पनि जीवको सूक्ष्म शरीर साथै रहन्छ । त्यो शरीर त्यहि साधकले देख्न सक्छ जसको दिव्य दृष्टि खुलिसकेको छ । यसरी नै परमात्मा र जीवको स्थिति सम्झौं । वेदहरूमा ॐ नामको स्मरणको प्रमाण छ जो मात्र ब्रह्म साधना हो । यस उदेश्यबाट ॐ नामको जपलाई पूर्णब्रह्मको जप ठानेर ऋषिहरूले पनि हजारौं वर्ष हठयोग (समाधि लगाएर) गरेर प्रभु प्राप्तिको प्रयास गरे तर प्रभुको दर्शन भएन, सिद्धिहरू प्राप्त भए । तिनै सिद्धिरूपी खेलौनाहरूबाट खेलेर ऋषिहरू पनि जन्म-मृत्युको चक्रमा नै अल्झिए र आफ्नो अनुभवको शास्त्रमा परमात्मालाई निराकार भनेर लेखे । ब्रह्म (काल) ले कसम खाएको छ कि म आफ्नो वास्तविक रूपमा कसैलाई दर्शन दिने छैन् । मलाई अव्यक्त ठा*

*छन् । भावार्थ छ कि कोही आकारमा छन् तर व्यक्तिगत रूपले स्थूल रूपमा दर्शन दिदैंन । जसरी आकाशमा बादल लागेमा दिनको समयमा सूर्य अदृश्य हुन जान्छ, त्या देखिदैंन तर वास्तवमा बादल पारी सूर्य जस्ता को त्येस्तै छ । यस्तो अवस्थालाई अव्उक्त भनिन्छ । ( प्रमाणको लागि गीता अध्याय ७ श्लोक २४, २५ अध्याय ११ श्लोक ४८ तथा ३२)*

*पवित्र गीताजी भन्ने ब्रह्म (काल) श्री कृष्णजीको शरीरमा प्रेत भैं प्रवेश गरी भन्दैछ कि अर्जुन म बढेको काल हूँ र सबैलाई खानको लागि आएको हूँ । (गीता अध्याय ११ को श्लोक नं.३२) यो मेरो वास्तविक रूप हो । यसलाई तिमी बाहेक न त कसैले पहिले देख्न सक्यो न पछि देख्न सक्नेछन् अर्थात् वेहरूमा वर्णित यज्ञ-जप-तप तथा ॐ नाम आदिको विधिबाट मेरो यस वास्तविक स्वरूपको दर्शन हुन सक्तैन । (गीता अध्याय ११ श्लोक नं.४८) म कृष्ण होइन, यी मूर्ख मानिसहरू कृष्ण रूपमा म अव्यक्तलाई व्यक्त (मनुष्य रूप) ठान्दछन् । किन कि यिनीहरू मेरो घटिया नियमसित अपरिचित छन् कि म कहिले वास्तविक यस काल रूपमा सबै समक्ष आउँदिन । आफ्नो योग मायाले लुकेको हुन्छु (गीता अध्याय ७ श्लोक नं.२४-२५) विचार गर्नुहोस् :आफ्नो लुकि रहने विधानलाई स्वयं अश्रेष्ठ( अनुत्तम) किन भन्नु हुन्छ?*

*यदि पिता आफ्नो सन्तानलाई पनि दर्शन दिदैंन भने उसमा केहि दोष छ जसले गर्दा लुकेको छ र सुविधाहरू पनि प्रदान गरी रहेको छ । काल (ब्रह्म) लाई श्रापवश एक लाख मानव शरीर धारी प्राणीहरूको आहार गर्नु पर्ने हुन्छ तथा २५ प्रतिशत जुन ज्यादा उत्पन्न हुन्छ तिनलाई व्यवस्थित गर्न र कर्म भोगको दण्ड दिनको लागि चैरासी लाख योनिहरूको रचना गरिएको छ । यदि सबैको समक्ष बसेर कसैको छोरी, कसैको पत्नी, कसैको पुत्र, माता-पितालाई खायो भने सबैलाई ब्रह्म देखि घृणा हुन जानेछ र जहिले पनि पूर्णपर मात्मा कवीरग्नि (कबीर परमेश्वर) स्वयं आए वा आफ्नो कोई संदेश वाहक (दूत) पठाए भने सबै प्राणी सत्यभक्ति गरेर कालको जालबाट निक्लेर जानेछन् । यसैले धोका दिएर राख्छ । तथा पवित्र गीता अध्याय श्लोक १८, २४, २५ मा आफ्नो साधनाले हुने मुक्ति (गीता) लाई पनि (अनुत्तम) अश्रेष्ठ भनेको छ ।*

*प्रत्येक ब्रह्माण्डमा बनेको ब्रह्मलोकमा एउटा एउटा महास्वर्ग बनाइएको छ । महास्वर्गमा एक ठाउँमा नक्कली सतलोक - नक्कली अलख लोक - नक्कली अगम लोक तथा नक्कली अनामी लोकको रचना प्राणीहरूलाई भुक्याउनको लागि प्रकृति (दुर्गा/आदि माया) द्वारा गराई राखेको छ । कबीर साहेबको एउटा शब्द छ "कर नैनों दीदार महल में प्यारा है" मा वाणी छ कि 'काया भेद किया निरवारा' यो सबै रचना पिण्ड मंझारा है । आदि माया किन्ही चतुराई, झुठी बाजी पिण्ड दिखाई, अविगत रचना रचि अण्ड माहि वाका प्रतिविम्ब डारा है ।'*

*एक ब्रह्माण्डमा अन्य लोकको पनि रचना छ जस्तै ब्रह्मजीको लोक, श्री विष्णुजीको लोक, श्री शिवजीको लोक । जहाँ बसेर तीन वटै प्रभु तलका तीनलोक (स्वर्गलोक- अर्थात् इन्द्रको लोक- पृथ्वी लोक र पाताल लोक) माथि एक एक विभागको*

# ब्रह्म लोक का लघु चित्र



# ज्योति निरंजन (काल) ब्रह्म के लोक (21 ब्रह्मण्ड) का लघु चित्र



*मालिक भएर प्रभुत्ता गर्नु हुन्छ र आफ्नो पिता कालको भोजनका लागि प्राणिहरूको उत्पत्ति, स्थिति र संहारको कार्य गर्नु हुन्छ । तीन वटै प्रभुको पनि जन्म मृत्यु हुन्छ । तब कालले यिनलाई पनि खान्छ । (यसै ब्रह्माण्ड (यसलाई अण्ड पनि भनिन्छ किन कि ब्रह्माण्डको बनावट अण्डाकार छ । यसलाई पिण्ड पनि भनिन्छ किन कि शरीर (पिण्ड) मा एक ब्रह्माण्डको रचना कमलहरूमा टी. भी. जस्तै देख्न सकिन्छ) मा एक मान सारोवर तथा धर्मराय (न्यायधिश) को पनि लोक छ र एक गुप्त स्थानमा पूर्णपरमात्मा अन्य रूप धारण गरी बस्नु हुन्छ । जसर ी प्रत्येक देशको राजदूत भवन हुन्छ । त्यहाँ कोही जान सक्तैन । त्यहाँ ती आत्माहरू वास गर्छन् जसको सतलोकको भक्ति अधुरो रहन्छ । जब भक्ति युग आउँछ त्यस वेला यी पूण्यात्माहरूलाई पृथ्वीमा मानव शरीर प्राप्त हुन्छ र तिनीहरू चाँडै नै सत भक्तिमा लाग्छन् र पूर्णमोक्ष प्राप्त गर्छन् । त्यस स्थानमा बस्ने हंस आत्माहरूको नीजि भक्ति कमाई खर्च हुँदैन । परमात्माको भण्डारबाट सबै सुविधाहरू उपलब्ध हुन जान्छ । ब्रह्म (काल) को उपासकहरूको भक्ति कमाई स्वर्ग-महा स्वर्गमा समाप्त हुन जान्छ किन कि यस काल लोक (ब्रह्म लोक) तथा परब्रह्म लोकमा प्राणिहरूले गरेको आफ्नो कर्मफल नै प्राप्त हुन्छ ।*

*क्षरपुरूष (ब्रह्म) ले आफ्नो २० ब्रह्माण्डहरूलाई चार महा ब्रह्माण्डहरूमा विभाजित गर्नु भएको छ । एक महा ब्रह्माण्डमा पाँच ब्रह्माण्डहरूको समूह बनाइएको छ तथा चारै तिरबाट अण्डाकार गोलाई (परिधि) मा रोकिएको छ । त्यस्तै चारै महा ब्रह्माण्डहरूलाई पनि फेरि अण्डाकार गोलाई (परिधि) मा रोकिएको छ । एक्काइसौं ब्रह्माण्डको रचना एक महाब्रह्माण्ड जति स्थान लिएर गरेको छ । एक्काइसौं ब्रह्माण्डमा प्रवेश हुने बित्तिकै तीनवटा बाटो बनाई राखेको छ । एक्काइसौं ब्रह्माण्डमा पनि बायाँ तिर नक्कली सतलोक, नक्कली अलख लोक, नक्कली अगम लोक, नक्कली अनामी लोकको रचना प्राणिहरूलाई झुक्याउनको लागि आदि माया (दुर्गा) बाट गराएको छ तथा दायाँ तिर १२ सर्व सर्वश्रेष्ठ ब्रह्म साधकहरू (भक्तहरू) लाई राखेको छ । फेरि प्रत्येक युगमा उनीहरूलाई आफ्नो संदेश वाहक (सन्त सतगुरू) बनाएर पृथ्वीमा पठाउँछ जो शास्त्र विधि रहित साधना व ज्ञान बताउँछन् र स्वयं पनि भक्तिहीन हुन्छन तथा अनुयायीहरूलाई पनि काल जालमा फसाई दिन्छ । फेरि ती गुरूजी तथा अनुयाई दुवै नर्कमा जान्छन् । अनि फेरि सामु एउटा ताला (कुलुफ) लगाई राखेको छ । त्यो बाटो बह्म (काल) को निजलोकमा जान्छ । जहाँ ब्रह्म (काल) आफ्नो वास्तविक मानव सदृश्य काल रूपमा रहन्छ । त्यसै स्थानमा एउटा ढुङ्गाको टुक्रा तावा (रोटी पकाउने फलामको गोलो प्लेट) आकारको जो हमेशा आफै तातो रहन्छ । जस माथि एक लाख मानव शरीर धारी प्राणीहरूको सूक्ष्म शरीरलाई भुटेर त्यसबाट फोहोर निकालेर खान्छ । त्यस बेला सबै प्राणीहरू अत्यधिक पीडा अनुभव गर्छन् तथा हाहाकार मच्चिएर जान्छ । फेरि केहि समय उपरान्त उनीहरू बेहोस हुन जान्छन् । जीव मर्दैन। फेरि धर्मरायको लोकमा गई कर्माधारले अन्य जन्म प्राप्त गर्छन् । यसरी जन्म मृत्युको चक्र चली रहन्छ । उपरोक्त सामु लागेको ताला ब्रह्म (काल) ले आफ्नो आहारको लागि आएका प्राणीहरूका लागि मात्र केहि क्षणको लागि खोल्दछ । पूर्णपर*

*मात्माको सत्यनाम र सारनामबाट यो ताला स्वयं खुल्छ । यस्तो कालको जाल बारे पूर्णपर मात्मा कविर्देव (कबीर साहेब) ले स्वय. नै आफ्नो निजी भक्त धर्मदासलाई संझाउनु भयो ।*

## "परब्रह्मका सात संख ब्रह्माण्डहरूको स्थापना"

*कबीर परमेश्वर (कविर्देव) ले पहिले भनिसक्नु भएको छ कि परब्रह्म (अक्षर पुरूष) ले आफ्नो कार्यमा लापरवाही गऱ्यो किन कि उ मानसरोवरमा सुत्यो (निदायो) अनि जब परमेश्वर (मैले अर्थात् कबीर साहेबले) त्यस मान सरोवरमा फुल (अण्डा) छोड्नु भयो तब अक्षर पुरूष (परब्रह्म) ले त्यसलाई क्रोधले हेऱ्यो । यो दुइटा अपराध गरेको कारणले यसलाई पनि सात संख ब्रह्माण्डहरू समेत सतलोकबाट निष्कासित गरिदिनु भयो । अर्को कारण अक्षर पुरूष (परब्रह्म) आफ्नो साथी ब्रह्म (क्षरपुरूष) व्याकुल भएर परमपिता कविर्देव (कबीर परमेश्वर) लाई बिर्सेर उसैलाई याद गर्न थाल्यो र सोच्न थाल्यो कि क्षरपुरूष (ब्रह्म) त निकै आनन्द मनाउँदै होला, म नै पछाडी परें तथा अन्य केही आत्माहरू जो परब्रह्मसँग सातसंख ब्रह्माण्डहरूमा जन्म-मृत्युको कर्मदण्ड भोग गर्दैछन् ती हंसात्माहरूको बिदाइको यादमा डुबे जो ब्रह्म (काल) सँग एक्काइस ब्रह्माण्डमा फँसेका छन् र पूर्णपरमात्मा सुखदायी कविर्देवको याद बिर्सियो । परमेश्वर कवीर् देवले पटक पटक सम्झाउँदा पनि आस्था कम भएन । परब्रह्म (अक्षर पुरूष) ले सोच्यो कि मैले पनि आफ्नो अलग स्थान पाएँ भने र म्रो हुनेछ । यो सोचेर राज्य प्राप्तिको इच्छाले सारनामको जप प्रारम्भ गऱ्यो । यसै प्रकार अन्य आत्माहरूले (जो परब्रह्मको सात संख ब्रह्माण्डहरूमा फँसेका छन्) सोचे कि ती जो ब्रह्मसँग आत्माहरू गएका छन् उनीहरू त त्याँहा रमाइलो गर्दै होलान् हामी पछाडी पऱ्यौं । परब्रह्मको मनमा यो धारणा बन्यो कि क्षरपुरूष अलग्गै भएर निकै खुशी होला । यो सोचेर अर्न्तरात्मा देखि अलग्गै स्थान प्राप्ति गर्ने निश्चयमा पुग्यो । परब्रह्म (अक्षर पुरूष) ले हठयोग गरेनन् तर मात्र अलग राज्य प्राप्तिको लागि सहज ध्यान योग विशेष रूचिका साथ गर्न थाल्यो । अलग स्थान प्राप्त गर्नको लागि पागल जस्तै विचरण गर्न थाल्यो । खान पान समेत त्याग्यो । अन्य केहि आत्माहरू उसको वैराग्य प्रति आसक्त भएर उसलाई चाहन थाले । पूर्णप्रभुले सोध्नु हुँदा परब्रह्मले अलग स्थान माग्यो तथा केहि हंसात्माहरूको लागि पनि याचना गऱ्यो । तब कविर्देवले भन्नु भयो कि जो आत्मा तिमीसँग स्वेच्छाले जान चाहन्छ, तिनलाई पठाई दिनेछु । पूर्णप्रभुले सोध्नु भयो कि कुन हंसात्मा परब्रह्मसँग जान चाहन्छ, सहमति व्यक्त गरोस । धैरै समय पछि एक हंसात्माले स्वीकृति दियो । फेरि देखा-देखी ती सबै आत्माहरूले पनि सहमति व्यक्त गरे । सर्वप्रथम स्वीकृति दिने हंसलाई स्त्री रूप बनाउनु भयो, उसको नाम ईश्वरी माया (प्रकृति सुरति) राख्नु भयो र अन्य आत्माहरूलाई त्यस ईश्वरी मायामा प्रवेश गराई अचिन्तद्वारा अक्षर पुरूष (परब्रह्म) कहाँ पठाई दिनु भयो । (पतिव्रता पदबाट तल झर्नेको सजाय पायो) अनेकौं युगसम्म दुवै सात संख ब्रह्माण्डहरूमा बसे तर परब्रह्मले दुर्व्यवहार गरेनन् । ईश्वरी मायालाई स्वेच्छाले*

*अंगीकार गरी आफ्नो शब्द शक्तिद्वारा नंग्राले स्त्री इन्द्री (योनी) बनायो । ईश्वरी देवीको सहमतिले संतान उत्पन्न गरे । यसैले परब्रह्मको लोक (सात संख ब्रह्माण्ड) मा प्राणीहरूलाई तप्तशिलाको कष्ट छैन र त्यहाँ पशु-पक्षी पनि ब्रह्म लोकका देवहरू भन्दा राम्रो चरित्र युक्त छन् । आयु पनि धेरै लामो छ, तर जन्म-मृत्यु कर्माधारमा कर्मदण्ड र परिश्रम गरेर नै उदर पूर्ति हुन्छ । स्वर्ग तथा नर्क पनि यस्तै नै बनेका छन् । परब्रह्म (अक्षर पुरूष) लाई उसको इच्छा इच्छारूपी भक्ति ध्यान अर्थात् सजिलो समाधि विधिद्वारा गरिएको कमाईको प्रतिफलमा प्रदान गरे तथा सत्यलोक देखि अलग स्थानमा गोलाकार परिधिमा बन्द गरी सात संख ब्रह्माण्डहरू सहित अक्षर ब्रह्म र ईश्वरी मायालाई निष्कासित गरियो ।*

*पूर्णब्रह्म (सत पुरूष) असंख्य ब्रह्माण्डहरू जो सत्यलोक आदिमा छन् साथै ब्रह्मको एक्काइस ब्रह्माण्डहरू र परब्रह्मको सात संख ब्रह्माण्डहरूको पनि प्रभु (मालिक) हुन् अर्थात् परमेश्वर कविर्देव कुलको मालिक हुन् ।*

*श्री ब्रह्माजी, श्री विष्णुजी तथा श्री शिवजी आदिको चार-चार हात र १६ कला छन् तथा प्रकृति देवी (दुर्गा) को ८ हात र ६४ कला छन् । ब्रह्म (क्षरपुरूष) को एक हजार हात र एक हजार कला छन् तथा एक्काइस ब्रह्माण्डका मालिक छन् । परब्रह्म (अक्षर पुरूष) का दस हजार हात र दस हजार कला छन् । उनी सात संख ब्रह्माण्डहरूका मालिक (प्रभु) हुन् । पूर्णब्रह्म (परम अक्षर पुरूष अर्थात् सतपुरूष) का असंख्य हातहरू र असंख्य कलाहरू छन् तथा ब्रह्मको एक्काइस ब्रह्माण्ड र परब्रह्मको सात संख ब्रह्माण्डहरू सहित असंख्य ब्रह्माण्डहरूका प्रभु हुन् । प्रत्येक प्रभु आफ्ना सबै हातहरूलाई समेटेर मात्र दुई हात पनि राख्न सक्नु हुन्छ र जुन बेला मन लाग्यो सबै हातहरूलाई प्रकट गर्न सक्नु हुन्छ । पूर्णपरमात्मा परब्रह्मको हरेक ब्रह्माण्डमा पनि अलग्गै स्थान बनाएर अन्य रूपमा गुप्त बस्नु हुन्छ । यसरी बुझौं जसरी एउटा घुम्ने खालको क्यामेरा बाहिर फीट गरी भित्र टी.भी. मा बाहिरका सबै दृष्य देखिन्छ र अर्को टी.भी. बाहिर राखेर भित्रको क्यामेरा स्थाई गरी राखेमा त्यसमा मात्र भित्र बसेको प्रबन्धक (मेनेजर) को चित्र (फोटो) देखिन्छ जसले गर्दा सबै कर्मचारी सावधान रहन्छन् ।*

*यस प्रकार पूर्णपरमात्माले आफ्नो सतलोकमा बसेर सबैलाई नियंत्रित गर्नु भएको छ तथा प्रत्येक ब्रह्माण्डमा पनि सतगुरू कविर्देव विद्यमान रहनु हुन्छ जसरी सूर्य टाढा भएर पनि आफ्नो प्रभाव सबै लोकहरूमा बनाएर राखेको हुन्छ ।*

## "पवित्र अथर्ववेदमा सृष्टी रचनाको प्रमाण"

**काण्ड नं. ४ अनुवाक नं. १ मन्त्र नं. १ :–**

ब्रह्म जज्ञानं प्रथम पुरस्ताद् वि सीमतः सुरुचो वेन आवः ।

स बुध्न्या उपमा अस्य विष्ठाः सतश्च योनिमसतश्च वि वः ।।

**ब्रह्म–ज–ज्ञानम्–प्रथमम्–पुरस्तात्–विसिमतः–सुरूचः–वेनः–आवः–सः–**

रवनपुरी एक चक्र है, तहा धनजय बाय । गरीबदास जीते जन्म, याकू लेत समाय ।।५३०।।
आसन पदम लगायकर, भिरंग नाद को खैंचि । गरीबदास अचवन करै, देवदत्त को ऐचि ।।५३१।।
काली ऊन कुलीन रंग, जाकै दो फुन धार । गरीबदास कुरंभ शिर, तास करे उद्‌गार ।।५३२।।
चिश्मैं लाल गुलाल रंग, तीनि गिरह नभ पेंच । गरीबदास वह नागनी कूँ, हैने न देवे रेच ।।५३३।।
कूंभक रेचक सब करै, ऊन करत उदगार । गरीबदास उस नागनी कू, जीतै कोई खिलार ।।५३४।।
कूंभ भरै रेचक करै, फिर टुटत है पौन । गरीबदास गगन मण्डल, नही होत है रौन ।।५३५।।
आगे घाटी बंद है, ईग्ला–पिंगला दाय । गरीबदास सुषमन खुले, तास मिलावा होय ।।५३६।।
ज्यूंका त्यूंही बैठि रहो, तजि आसन सब जोग । गरीबदास पल बीच पद, सर्व सैल सब भोग ।।५४७।।
कोटि कोटि बैकुंठ हैं, कोटि कोटि शिव शेष । गरीबदास उस धाममैं, ब्रह्मा कोटि नरेश ।।५५३।।
अवादान अमानपुर, चलि स्वामी तहां चाल । गरीबदास परलो अनंत, बौहरि न झंपै काल ।।५५४।।
अमर चीर तहा पहरि है, अमर हंस सुख धाम । गरीबदास भोजन अजर, चल स्वामी निजधाम ।।५५५।।
बोलत रामानंदजी, सुन कबीर करतार । गरीबदास सब रूपमैं, तुमहीं बोलन हार ।।५५६।।
तुम साबिह तुम संत हौ, तुम सतगुरु तुम हंस । गरीबदास तुम रुप बिन और न दूजा अंस ।।५५७।।
मैं भगता मुक्ता भया, किया कर्म कुन्द नाश । गरीबदास अविगत मिले, मेटी मन की बास ।।५५८।।
दोहूँ ठौर है एक तूं, भया एक से दोय । गरीबदास हम कारणैं, उतरे हैं मघ जोय ।।५५९।।
गोष्टी रामानंदसैं, कांशी नगर मंझार । गरीबदास जिंद पीरके, हम पाये दीदार ।।५६२।।
बोलै रामानंदजी, सुनौं कबीर सुभांन । गरीबदास मुक्ता भये, उधरे पिंड अरु प्राण ।।५६७।।

**कबीर साहेब (कविर्देव) ले स्वामी रामानन्दजीलाई सोध्नु भयो कि स्वामीजी तपाई कसरी पूजा गर्नु हुन्छ ? स्वामीजीले भन्नु भयो कि वेदहरू र गीताजी अनुसार साधना गर्छु । कबीर साहेबले सोध्नु भयो कि यसरी साधना गर्नाले कुन लोकमा पुग्नु हुनेछ ? रामानन्दजीले भन्नु भयो स्वर्गमा जानेछु । कबीर परमेश्वरले सोध्नु भयो स्वर्गमा के गर्नु हुनेछ दाता ? रामानन्दजीले भन्नु भयो कि त्यहाँ धेरै प्यारो भगवान विष्णुजी बस्नु हुन्छ । उनको दर्शन गरि रहन्छु र त्यहाँ दूँधै दूँधको नदी छ, त्यहाँ कुनै चिन्ता छैन, निस्फिक्रीका साथ म त्यहाँ आनन्द पूर्वक बस्ने छु । कबीर परमेश्वरले सोध्नु भयो कि स्वामीजी कति दिन बस्नु हुन्छ स्वर्गमा ? (विद्वान पुरूष थिए, उनलाई ज्ञान थियो, दुई मिनट मैं सबै कुरा बुझ्नु भयो)**

**स्वामीजीले भन्नु भयो मेरो भक्तिको कमाई जब सम्म रहन्छ तब सम्म रहूँला । कबीर साहेबले भन्नु भयो फेरि कहाँ जानु हुनेछ ? रामानन्दजीले भन्नु भयो कि थाहा छैन कर्माधारको हिसाबले कहाँ र कुन योनिमा जन्म हुनेछ ? कबीर साहेबले सम्झाउनु भयो कि स्वामीजी ! यो साधना तपाईले असंख्यौं पटक गर्नु भएको छ । यसले जीव मुक्त हुन सक्तैन । तपाई श्री विष्णुजीको साधना गरी स्वर्ग लोकमा जान चाहनु हुन्छ । जो साधक ब्रह्म साधना गरेर ब्रह्मलोकमा जान्छन् त्यो पनि जन्म मृत्युको चक्रमा नै रहन्छ किन कि एक दिन महास्वर्ग जो ब्रह्मलोकमा बनाईएको छ त्यो पनि नष्ट हुन जानेछ । गीताजी अध्याय ८ को श्लोक १६ भन्छन् । स्वामी रामानन्दजी तो विद्वान पुरूष हुनुहुन्थ्यो उहाँलाई श्लोकहरू कण्ठस्त थिए । स्वामीजीले भन्नु भयो तपाई ठीक भन्नु हुन्छ, यस्तै लेखिएको छ । कबीर साहेबले सोध्नु भयो कि भन्नुस फेरि कहाँ बस्नु हुनेछ ? तपाईको कृष्ण मुरारि**

पनि रहने छैन । यो ब्रह्मालोक, विष्णुलोक आदि का सबै प्राणीहरू तथा श्री विष्णुजी आदि तीन वटै देवताहरू पनि नष्ट हुनेछ । फेरि तपाई कहाँ बस्नु हुन्छ गुरूदेव ? रामानन्दजी विचार गर्न विवश हुनुभयो । परमेश्वर कबीर साहेबजीले जवाफ दिनु भयो । श्री कृष्णजीले । परमेश्वर कबीर साहेबले भन्नु भयो स्वामीजी संक्षिप्त महाभारत द्वितीय खण्ड (पृष्ट नं. १५३१ पुरानो तथा ६६७ नयाँ) मा लेखिएको छ कि श्री कृष्णजी त भन्नु हुन्छ कि हे अर्जुन मलाई अब त्यो गीता वाला ज्ञान याद छैन, म फेरि उही ज्ञान सुनाउन सक्तिन । परमेश्वर कबीर साहेबजीले सबै प्रमाण बताउनु भयो

*गीता अध्याय ८ श्लोक १३ मा गीता ज्ञान दाता (ब्रह्म) भन्दै छ कि -*

ओम् इति एकाक्षरम् ब्रह्म, व्याहरन् माम् अनुस्मरन्,
यः प्रयाति त्यजन् देहम् सः याति परमाम् गतिम् ।।१३।।

*यसको शब्दार्थ छ कि गीता ज्ञान बोल्ने वाला ब्रह्म अर्थात् काल भन्दैछ कि -माम् ब्रह्म) म ब्रह्मलाई त (इति) यो (ओम् एकाक्षरम्) ओम्/ॐ एक अक्षर छ (व्याहरन्) उच्चारण गरी (अनुस्मरन्) स्मरण गर्ने (यः) जो साधक (त्यजन् देहम्) शरीर त्यागे सम्म अर्थात् अंतीम स्वांस सम्म (प्रयाति) स्मरण साधना गर्छ (सः) त्यो साधक नै मेरो वाला (परमाम् गतिम्) परम गतिको (याति) प्राप्त हुन्छ ।*

*भावार्थ छ कि श्री कृष्णजीको शरीरमा प्रेतवत प्रवेश गरी ब्रह्म अर्थात् हजार भूजा वाला ज्योति निरंजन काल भन्दै छ कि म ब्रह्मको साधना मात्र एक (ॐ) नामले मृत्यु पर्यन्तगर्ने साधकलाई म बाट दिइने लाभ प्राप्त हुन्छ । अन्ण कुनै मंत्र मेरो भक्तिका लागि छै ।*

*गीता अध्याय ८ श्लोक ५, ७ तथा १३ मा गीता ज्ञान दाताले आफ्नो विषयमा साधना गर्नका निमित्त भनेको छ कि जो मेरो साधना ओम् (ॐ) नामको स्मरण अंतीम स्वांस सम्म गर्छ, त्यो मलाई नै प्राप्त हुन्छ । यसैले तँ युद्ध पनि गर र मेरो ॐ नामको स्मरण पनि गर किन कि युद्ध हल्ला/ठूलो आवाजको हल्ला गरेर गरिन्छ, यसैले भनिएको छ कि ओम् (ॐ) नाम को उच्चारण (ठूलो स्वरले) गर्दै स्मरण पनि गर तथा युद्ध पनि गर ।*

*फेरि गीता अध्याय ८ श्लोक ६ मा भनिएको छ कि यो विधान छ कि जो जुन प्रभुको अंत समयमा स्मरण गर्दै शरीर त्याग गर्छ त्यो उसैलाई प्राप्त हुन्छ । गीता ज्ञान दाता प्रभु गीता अध्याय ८ श्लोक ८ देखि १० सम्म तीन वटै श्लोकमा ब्रह्म देखि भिन्न पूर्णपरमात्मा (परम दिव्य पुश्रष परमेश्वर अर्थात् पूर्णब्रह्म) को विषयमा भन्दै छ कि यदि कोहि उसको साधना गर्दै शरीर त्याग गर्छ त त्यही पूर्णपरमात्मा (परमेश्वर) लाई नै प्राप्त गर्छ । उनैबाट पूर्णमोक्ष तथा सत्यलोक प्राप्ति र परम शान्ति प्राप्त हुनछ । यसैले त्यस परमेश्वरको शरणमा जाउ ।*

*(गीता अध्याय १८ श्लोक ६२-६६ तथा अध्याय १५ श्लोक ४) म (गीता ज्ञान दाता ब्रह्म) पनि उसैको शरण छु ।*

*रामानन्दजीले सबै प्रमाणहरू आफ्नै आँखाले देखेर आश्चर्यचकित हुनु भयो र सत्यलाई स्वीकार गर्नु भयो । भन्नु भयो कि बालक शास्त्रहरूका कुरा तिमी ठीक भनिरहेका*

*छौं जो सत्य छ । हामीलाई कसैले यस्तो ज्ञानै दिएन, हामी के गरौं ? कबीर साहेबले बताउनु भयो कि पवित्र गीताजी मै लेखिएको छ । अध्याय ८ को ८, ९ र १० श्लोक तथा अध्याय १८ को श्लोक ६२ पढेर हेर्नुहोस् ।*

*पवित्र गीताजी व पवित्र वेदहरू भन्ने वाला ब्रह्म (काल) भन्दै छ कि त्यस पर मात्माको शरणमा जाउ अर्जुन तेरो फेरि मरण हुने छैन । त्यसका लागि (गीता अध्याय ४ श्लोक ३४) त्यस संतलाई खोज जो त्यस परमात्माको परम तत्त्वको जानकारी राखेको छ । उनलाई दण्डवत प्रणाम गरी विनम्र एवं निष्पक्ष भावले सत्कार गर । जब त्यो तत्त्वदर्शी संत प्रसन्न भइ जाओस् अनि उहाँबाट दीक्षा (नाम) ग्रहण गर । फेरि तेरो पुनर्जन्म र मृत्यु हुने छैन । पवित्र गीता अध्याय १५ मंत्र १ देखि ४ सम्ममा भनिएको छ कि यो उल्टो झुण्डिएको संसाररूपी वृक्ष हो । माथिको मूल (जरो) त आदि पुरूष अर्थात् सनातन् परमात्मा छ, तलको तीनवटै गुण(रजगुण-ब्रह्मा, सतगुण-विष्णु, तमगुण-शिव) रूपी शाखाहरू छन् । यो पूर्णसंसार रुपी वृक्ष अर्थात् पूर्णसृष्टी रचनालाई म (ब्रह्म, काल) जान्दिन । यहाँ विचारकालमा अर्थात् गीताजीको ज्ञानमा तपाईलाई म पूर्णज्ञान दिन सक्तिन । यसका लागि कुनै तत्त्वदर्शी संतको खोजी गर (गीता अध्याय ४ मंत्र ३४) अनि त्यो संत तिमीलाई सबै सृष्टी रचनाको ज्ञान र सबै प्रभुहरूको वास्तविक स्थिति बताई दिने छन् । त्यस पछि त्यो परम पद परमेश्वरको खोजी गर्नु पर्ने हो जसमा गएका साधकको फेरि जन्म मृत्यु हुदैन अर्थात् पूर्णमोक्ष हुन जान्छ । जुन परमेश्वरले संसाररूपी वृक्ष अर्थात् सबै ब्रह्माण्डहरूको रचना गर्नु भएको छ, म (ब्रह्म, काल) पनि त्यसै परमेश्वरको शरणमा छु, यसैले त्यस परमेश्वरको पूजा गर । स्वामी रामानन्दजी भन्नु हुन्छ कि लेखेको त यस्तै नै छ तर यो सतलोक न त कसैबाट सुनेको छु जसले गर्दा अब मेरो मनल विश्वास गर्दैन कि यो सत्य होला । कबीर साहेबले सोध्नु भयो कि तिमी कसर ी साधना गर्छौ ? स्वामी रामानन्दजीले भन्नु भयो कि मैले आफ्नो सम्पूर्ण शरीरलाई साधेको छु । योग अभ्यासद्वारा म भित्र कमलहरू हुँदै त्रिकुटी (त्रिवेणी) सम्म पुग्छु । कबीर साहेबले भन्नु भयो कि तपाई एक पटक त्रिवेणी सम्म पुग्नुस् । जब रामानन्दजी समाधिस्थ हुनु भयो (किन कि उनको प्रतिदिनको अभ्यास थियो) त्रिवेणीमा गए पछि तीन बाटो हुन जान्छ । प्रत्येक ब्रह्माण्डमा बनेको ब्रह्मलोकमा प्रवेश गर्ने बित्तिकै तीनवटा बाटो हुन जान्छन् । यसर ी नै बीस ब्रह्माण्ड पारी एक्काइस ब्रह्माण्डमा पनि यस्तै ब्यवस्था छ । एउटा बाटो सामुन्ने ब्रह्मलोकमा बनेको तीन गुप्त स्थान तिर जान्छ जहाँ ज्योति निरंजन तीन रूप बनाएर बस्छ । सामुन्नेको ब्रह्मरंध तिम्रो यस नामले खुल्दैन । यो ब्रह्मरंध पनि सतनामले खुल्नेछ । कबीर साहेबले आफ्नो स्वासद्वारा सतनामको उच्चारण गर्नु भयो, सामुन्नेको द्वार खुल्यो । कबीर साहेबले भन्नु भयो कि अब तपाईलाई काल भगवान देखाउँछु जसलाई तपाई निर ाकार भन्नु हुन्छ । जो गीतामा भन्नु हुन्छ कि म सबैलाई खान्छु । अर्जुन ! म कहिल्यै कसैलाई पनि दर्शन दिन्न, म कहिल्यै कसैको सामुन्ने प्रत्यक्ष हुन्न । कबीर साहेबले भन्नु भयो कि अब म तपाईको समक्ष त्यस काललाई देखाउँछु । पहिला त एक ब्रह्माण्डमा बनेको ब्रह्मलोकमा गुप्त स्थानहरूमा देखाउनु भयो ब्रह्म-विष्णु व शिव रूप धारण गरेका थिए ।*

*फेरि ब्रह्मलोक पार गर्ने द्वारबाट निस्केर एक्काइसौं ब्रह्माण्डमा लग्नु भयो । ब्रह्मलोक देखि अगाडि जाने बाटोलाई पनि जो जटा कुण्डली सरोवर माथि छ, आफ्नो आँखा अगाडी राख्तछ कि कोही जान नपाओस् । एक्काइस ब्रह्माण्डको जो अंतिम लोक छ त्यो काल ब्रह्म (क्षर पुरूष) को आफ्नो स्थान छ । त्यहाँ उ त्यस्तै भयङ्कर रूपमा बसेको छ, जो उसको वास्तविक श्रप छ । कबीर साहेबले भन्नु भयो कि हेर त्यो बसेको तिम्रो निराकार भगवान, जसलाई तिमी निराकार भन्छौं (किन कि योगीहरूले वेदको आधारमा ॐ नामले साधना गरे, परमात्मा त भेटिएन, सिद्धीहरू आउ, स्वर्ग गए, महा स्वर्ग गए, फेरि पशु बने । यसैले प्रभुलाई सबैले निराकार मान्न थाले कि त्यो देखिदैन र वेदहरूमा लेखिएको छ कि भगवान आकारमा हुनु हुन्छ ।) जब कालको नजिक पुगे तब साहेबले अपनो सारनामसँग सतनाम उच्चारण गर्नु भयो । त्यसै बेला कालको टाउको तल झुक्यो । कालको टाउको माथि त्यो द्वार छ जहाँबाट सतलोक गइन्छ तथा परब्रह्मको लोकमा प्रवेश हुन्छ । त्यस पछि एउटा भँवर गुफा शुरू हुन्छ । (एउटा भँवर गुफा कालको लोकमा पनि छ) कालको टाउकोमा टेकेर कबीर साहेबको हंस (निर्विकारी साधक) माथि जान्छन् । यो काल उनको सिढीको काम गर्छ । परब्रह्मको लोकलाई पार गरेर कबीर साहेब श्री रामानन्दजीको आत्मालाई सतलोक लानु भयो । (त्यहाँ पनि एउटा भँवर गुफा छ) । सतलोकमा श्री रामानन्दजीले देख्नु भयो कि कबीर साहेब (कर्विर्देव) आफ्नो वास्तविक रूपमा बस्नु भएको छ । त्यहाँ कबीर साहेबको यति तेज (प्रकाश) छ कि एक रोम कूपमा जस्तो करोडौं सूर्य र करोडौं चन्द्रमाको जो संयुक्त प्रकाश (तर गर्मी नभएको) भन्दा पनि अधिक छ । कबीर साहेब त्यहाँ गएर आफ्नै अर्को स्वरूप माथि चँवर गर्न थाल्नु भयो । श्री रामानन्दजीले सोच्नु भयो कि भगवान त यी हुन जो सिंहासनमा विराजमान छन् र यो कबीरर यहाँको कुनै सेवक (गण) होला, तर यो लोक भने सबैभन्दा उत्तम छ । परमात्माको धेरै तेज छ । यस्तो सोच्दै थिए त्यत्तिकैमा परमात्माको तेजोमय रूप सिंहासनबाट उठेर पाँच वर्षिय बालकको रूपमा पर मेश्वर कबीरजी तख्त (गद्दी) मा विराजमान हुनु भयो । परमेश्वरको जो वास्तविक तेजोमय रूप देखिन्थ्यो त्यो बालक रूप कबीर साहेबलाई चँवर गर्न थाल्यो । त्यस पछि कबीर साहेबको दोस्रो तेजोमय रूप बालक वाला रूप कबीर साहेबमा समायो र एक्लै पाँच वर्षको बालक रूपमा परमेश्वर कबीर साहेब तख्त माथि विराजमान हुनु भएको थियो । चँवर स्वयं चलि रहेको थियो । यतिमै रामानन्दजीको आत्मालाई शरीरमा फर्काइयो । उनको समाधि टुट्यो । सामुन्ने कबीर साहेब पाँच वर्षको बालक रूपमा बसी रहनु भएको छ । अनि र ामानन्द ले भन्नु भयो कि :-*

तहं वहाँ चित चक्रित भया, देखि फजल दरबार । गरीबलास सिजदा किया, हम पाये दीदार ।।५२३।।
तुम स्वामी मैं बाल बुद्धि, भर्म कर्म किये नाश । गरीबदास निज ब्रह्म तुम, हमरै दृढ विश्वास ।।५२४।।
सुन्न-बेसुन्न सैं तुम परै, उरैं से हमरै तीर । गरीबदास सरबंगमें, अविगत पुरूष कबीर ।।५२५।।
कोटि कोटि सिजदे करैं, कोटि काटि प्रणाम । गरीबदास अनहद अधर, हम परसैं तुम धाम ।।५२६।।
बोलत रामानंदजी, सुन कबीर करतार । गरीबदास सब रूपमें, तुमहीं बोलन हार ।।५५६।।

तुम साहिब तुम संत हौ, तुम सतगुरु तुम हंस । गरीबदास तुम रूप बिन और न दुजा अंस ।।५५७।।
मैं भगता मुक्ता भया, किया कर्म कुन्द नाश । गरीबदास अविगत मिले, मेटी मन की बास ।।५५८।।
दोहू ठौर है एक तूं, भया एक से दोय । गरीबदास हम कारणैं, उतरे हैं मघ जोय ।।५५९।।
बोलत रामानन्दजी, सुन कबीर करतार । गरीबदास सब रूप में, तू ही बोलनहार ।।
दहू ठोड है एक तूं, भया एक से दो । गरीबदास हम कारणे, आए हो मग जो ।।

*हे परमेश्वर कबीर ! हजुर नै दुवै ठाउँ सत्यलोकमा तथा मेरो समक्ष हजुर नै हुनु हुन्छ । साथै एक बाट दुई रूप बनाएर हामी तुच्छ जीवहरूको लागि यहाँ आउनु भएको छ ।*

मैं भक्ता मुक्ता भया, कर्म कुण्द भये नाश । गरीबदास अविगत मिले, मिट गई मन कि बांस ।।

*रामानन्दजी १०४ वर्षिय महापुरुष र पाँच वर्षीय कबीर परमेश्वरलाई भन्दै हुनु हुन्छ कि म हजुरको दास मुक्त भई हालें र मनको भ्रम तथा भटकाव मेटियो । मलाई पर मात्माको वास्तविक स्वरूपको दर्शन भयो । हे पूर्णपरमात्मा कबीर साहेब (कविर्देव) ! चार वेदहरू र पवित्र गीताजी तपाई कै गुणगान गर्दै छन् । स्वयं कविर्देव (कबीर परमेश्वर) ले पनि भन्नु भएको छ :-*

बेद हमारा भेद है, मै ना बेदन के माहीं । जिस बेद से मैं मिलूं, बेद जानते नाहीं ।

*भावार्थ छ कि चारै पवित्र वेदहरूमा ज्ञान पूर्णपरमात्मा कै छ तर पूजा विधि मात्र ब्रह्म (ज्योति निरंजन) सम्म कै छ । परमेश्वर कबीर (कविर्देव) को पूजा विधिको ज्ञान व तत्त्वज्ञानको लागि पवित्र वेदहरूमा तथा पवित्र गीताजीमा भनिएको छ कि त्यो कुनै तत्त्वदर्शी संत नै बताउन सक्छ । जो स्वयं नै परमेश्वर हुन्छ या कोही उनले नै पठाएको वास्तविक प्रतिनिधि हुन्छ । उहाँबाट उपदेश प्राप्त गरी पूर्णमोक्ष र परम शान्ति प्राप्त हुन्छ ।*

## पवित्र शास्त्र पनि कविर्देव (कबीर परमेश्वर) को साक्षी

*यसै प्रकार कबीर परमेश्वर (कविर्देव) ले मुस्लमानहरूलाई नराम्रो भनेको छैन, न त पवित्र कुर्आन शरीफलाई गलत भन्नु भएको छ, मात्र ती काजी (कुरान अनुसार फैसला गर्ने व्यक्ति) र मुल्ला (धर्म गुरु) हरूलाई झपाडी दिनु भएको छ जो सबै समाजलाई कुर्आन शरीफको वास्तविक ज्ञान विपरित मनमानी साधना गराउदै छन् ।*

*जस्तै पवित्र वेदहरू भन्ने ब्रह्म भन्दै छ कि पूर्णपरमात्मा कविर्देवको विषयमा कोहि जन्म लिएर अवतारको रूपमा मान्दछन् । कोहि कहिले पनि जन्म न लिने निराकार भन्छन् । त्यसको सही जानकारी त (धीराणाम्) तत्त्वदृष्टा संत नै बताउने छ । म (ब्रह्म) जान्दिन (यजुर्वेद अध्याय ४ श्लोक १०) यसैको प्रमाण पवित्र गीता अध्याय ४ श्लोक ३४ तथा अध्याय १५ श्लोक १ देखि ४ मा पनि छ । जब सम्म त्यो तत्त्वदर्शी संत भेट्ने छैन तब सम्म जीवको कल्याण असंभव छ । त्यो संत अब आइ सकेको छ, यो तत्त्वदर्शी संत रामपालजी लाई चिनौं ।*

### "पवित्र कुर्आन शरीफमा प्रमाण"

*यस्तै किसिमले पवित्र कुर्आन शरीफको अध्याय सूरत फूर्कानी सं २५, आयात ५२, ५८, ५९ मा भनिएको छ कि वास्तवमा (इबादइ कबीरा) पूजा योग्य कबीर अल्लाह छ । यो कबीर त्यही पूर्णपरमात्मा हो जसले छः दिनमा सृष्टी रचना गरी सातौं दिन तख्त माथि गई विर ाजमान हुनु भयो । त्यसको खबर (जानकारी) कुनै बाखबरसित सोधि हेर ।*

*पवित्र कुर्आन शरीफ बोल्ने वाला अल्लाह स्वयं कुनै अर्के कबीर नामको प्रभु तिर कंकेत गर्दै छ र भन्दै छ कि पूर्णपरमात्मा कबीरको विषयमा म पनि जान्दिन, उसको विषयमा कुनै तत्त्वदर्शी संत (बाखबर) सित सोध ।*

*कविर्देवले यही भन्नु भएको थियो कि म स्वयं पूर्णपरमात्मा (अल्लाह कबीर/ अकबिरु) हूँ, मलाई चिन । तर यस्तै आचार्यहरूले पहिले पनि परमेश्वरको वास्तविक ज्ञानलाई जनता समक्ष जान दिएनन् । भन्ने गर्थे कि कबीर त अशिक्षित छ, यो संस्कृत त जान्दै जान्दैन, हामी शिक्षित छौं ।*

*यस कुरामा पहिलेका भक्तजनहरू भ्रमित भएका थिए, तर अब सबै समाज शिक्षित छन्, यी मार्ग भ्रष्ट आचार्यहरूको दाल गली रहेको छैन, र गल्दैन पनि ।*

सल्लि अला :- ज-स-दि मुहम्मदिन फिल् अज्सादि अल्लाहुम म सल्लि अला कबिर् (कबीर) मुहम्मिद फिल् कुबूरि० फजाईले जिक्र

(٥) عَنْ اَبِیْ هُرَیْرَةَ رض قَالَ قَالَ رَسُوْلُ اللّٰهِ صَلَّی اللّٰهُ عَلَیْهِ وَسَلَّمَ مَا قَالَ عَبْدٌ لَآ اِلٰهَ اِلَّا اللّٰهُ اِلَّا فُتِحَتْ لَهٗ اَبْوَابُ السَّمَآءِ حَتّٰی یُفْضِیَ اِلَی الْعَرْشِ مَا اجْتُنِبَتِ الْکَبَآئِرُ۔ رواہ الترمذی وھکذا فی المشکوٰۃ لکن لیس فیھا حسن بل غریب فقط قال القاری و رواہ النسائی وابن حبان وعزاہ السیوطی فی الجامع الی الترمذی و رقم لہ بالحسن وحکاہ السیوطی فی الدر من طریق ابن مردویہ عن ابی ھریرۃ ولیس فیہ ما اجتنبت الکبائر وفی الجامع الصغیر بروایۃ الطبرانی عن معقل ابن یسار لکل شئ مفتاح ومفتاح السموات قول لآ الٰہ الا اللّٰہ ورقم لہ بالضعف۔

५. हुजूरे अक्दस सल्सल्लाहु अलैहि व सल्लम का इर्शाद है कि कोई बन्दा ऐसा नहीं कि 'लाइला-ह-इल्लल्लाहह' कहे और उसके लिए आसमानों के दरवाजें न खुल जायें, यहाँ तक कि यह कलिमा सीधा अर्श तक पहुँचता है, बशर्ते कि कबीरा गुनाहों से बचाता रहे ।

फ - कितनी बडी फूजीलत है और कुबूलियत की इन्तिहा है कि यह कलिमा बर ाहे रास्त अर्शे मुअल्ला तक पहुँचता है और यह अभी मालूम हो चुका है कि अगर कबीर ा गुनाहों के साथ भी कहा जाये, तो नाफा से उस वक्त भी खाली नहीं ।

मुल्ला अली कारी रह० फरमाते हैं कि कबाइर से बचने की शर्त कुबूल की जल्दी और आसमान के सब दरवाजे खुलने के एताबर से है, वरना सवाब और कूबूल से कबाइर (कबीर) के साथ भी खाली नहीं ।

बाज उलेमा ने इस हदीस का यह मतलब बयान फरमाया है कि ऐसे शख्स के वास्ते मरने के बाद उस की रूह के एजाज में आसमान के सब दरवाजे खुल जायेंगे ।

एक हदीस में आया है, दो कलिमे ऐसे हैं कि उनमें से एक के लिए अर्श के नीच कोई मुन्तहा नहीं । दूसरा आसमान और जमीन को (अपने नूर या अपने अज से) भर दे– एक 'लाइला-ह इल्लल्लाह' है, दूसरा 'अल्लाहु अकबर' (कबीर) है,

### "पवित्र वेदहरूमा प्रमाण"

*कविर्देव आफ्नो ज्ञानको दूत भएर स्वयं आउनु हुन्छ र आफ्नो स्वस्थ ज्ञान ( वास्तविक तत्त्वज्ञान) स्वयं नै गराउनु हुन्छ ।*

*स्वयं कविर्देव (कबीर परमेश्वर) जीले आफ्नो अमृत वाणीमा भनेको छ :-*

**शब्दः-** अविगत से चल आए, कोई मेरा भेद मर्म नहीं पाया । (टेक) न मेरा जन्म न गर्भ बसेरा, बालक हो दिखलाया । काशी नगर जल कमल पर डेरा, वहा जुलाहे ने पाया ।। माता-पिता मेर े कुछ नाहीं, ना मेरे घर दासी (पत्नी) । जुलहा का सुत आन कहाया, जगत करें मेरी हासी ।। पाँच तत्त्व का

धड नहीं मेरा, जानुं ज्ञान अपारा । सत्य स्वरुपी (वास्तविक) नाम साहेब (पूर्णप्रभु) का सोई नाम हमारा ।। अधर द्वीप (ऊपर सत्यलोक में) गगन गुफा में तहाँ निज वस्तु सारा । ज्योत स्वरूपी अलख निरंजन (ब्रह्म) भी धरता ध्यान हमारा ।। हाड चाम लहु ना मेरे कोई जाने सत्यनाम उपासी । तारन तरन अभय पद दाता, मैं हू कबीर अविनाशी ।।

*उपरोक्त शब्दमा कबीर परमेश्वर भन्दै हुनु हुन्छ कि न त मेरी कोहि पत्नी छे, न मेरो पाँच तत्त्व (हाड-चाम, लहू अर्थात् नाडिहरूको जोड-जुगाड वाला काया) को शरीर छ, म स्वयंभू हूँ तथा काशीको लहरतारा नामक तालको जलमा कमलको फूल माथि स्वयं प्रकट भएर बालक रूप बनाएको थिएँ । त्यहाँबाट मलाई नीरू नाम भएका जुलाहाले उठाएर लगेको थियो । जो वास्तविक नाम परमेश्वरको छ (वेदहरूमा कविर्देव, गुरू ग्रंथ साहेबमा हक्का कबीर,कुर्आन शरीफमा अल्लाह कबीरन्) त्यही नाम मेरो हो, म माथि ऋतधाममा बस्छु तथा तपाईको भगवान ज्योति निरंजन (ब्रह्म) पनि मेरो पूजा गर्छ । यसैको प्रमाण सत्यार्थ प्रकाश सातौं समुल्लास (पृ. १५२-१५३, दीनानगर पंजाबबाट प्रकाशित) मा पनि छ । स्वामी दयानन्दजीले यजुर्वेद अध्याय १३ मन्त्र ४ तथा ऋग्वेद मण्डल १० सूक्त ४८ मन्त्र १ को अनुवाद गर्नु भएको छ । जसमा वेदहरूलाई भन्ने ब्रह्म भन्दै छ कि (५ = ऋग्वेद मं. १० सु. ४८ मं. १ तथा ६ = यजुर्वेद अध्याय १३ मं. ४ मा) - हे मनुष्यहरू हो ! जो सृष्टी भन्दा पूर्व सबैको उत्पति कर्ता र सबैका स्वामी थियो, छ, अगाडी पनि रही रहने छ त्यहि सर्व सृष्टीलाई रचना गरी धारण गर्दै छ । त्यस सुख स्वरुप परमात्माको भक्ति जसरी हामी ( ब्रह्म तथा अन्य देव पनि उसैको साधना) गर्दछौं त्यसरी नै तिमीहरू पनि गर ।*

*प्रमाण १. पवित्र यजुर्वेद अध्याय २८ मंत्र २५-*

समिद्धोऽद्य मनुषो दुरोणे देवो देवान्यजसि जातवेदः ।
आ च वह मित्रमहश्चिकित्वान्त्वं दूतः कवीरसि प्रचेताः ।।२५।।

समिद्धः–अद्य–मनुषः–दुरोणे–देवः–देवान्–यज्–असि–जात–वेदः–आ–च–वह–मित्रमहः–चिकित्वान्–त्वम्–दूतः–कवीर्–असि–प्रचेताः ।

अनुवाद – (अद्य) आज अर्थात् वर्तमानमा (दुरोणे) शरीर रूपी महलमा दराचार पूर्वक (मनुषः) झुट्टो पूजामा लीन मगनशील ब्यक्तिहरूलाई (समिद्धः) लगाइएको आगो अर्थात् शास्त्र विधि रहित वर्तमान पूजा जो हानिकारक हुन्छ, अग्नि जलाएर भस्म गरि दिन्छ त्यस्तै साधकको जीवन शास्त्रविरूद्ध साधना नष्ट गरि दिन्छ । त्यसको ठाउँमा (देवान्) देवताहरूका (देवः) देवता (जातवेदः) पूर्णपरमात्मा सतपुरूषको वास्तविक (यज्) पूजा (असि) हो । (आ) दयालु, (मित्रमहः) जीवका वास्तविक साथी पूर्णपरमात्माको (चिकित्वान्) स्वस्थ ज्ञान अर्थात् यथार्थ भक्तिलाई (दूतः) संदेशवाहक रूपमा (वह) लिएर आउने वाला (च) तथा (प्रचेताः) बोध गराउने वाला (त्वम्) तपाई (कविर्देव अर्थात् कबीर परमेश्वर) कबीर (असि) हो ।

*भावार्थ :- जुन बेला भक्त समाजबाट शास्त्र विधी रहित मनमाना आचरण (पूजा) गराउन लगाइएको हुन्छ । त्यस बेला कविर्देव (कबीर परमेश्वर) तत्त्वज्ञानलाई प्रकट गर्नु हुन्छ ।*

*प्रमाण २. पवित्र सामवेद संख्या १४०० मा*

*संख्या न. ३५९ सामवेद अध्याय न. ४ को खण्ड न. २५ को श्लोक न. ८ -*

पुरां भिन्दुर्युवा कवीरमितौजा अजायत । इन्द्रो विश्वास कर्मणे धर्ता वजी पुरुष्टुतः ।।४।।

पुराम्–भिन्दुः–युवा–कवीर्–अमित–औजा–अजायत–इन्द्रः–विश्वस्य–कर्मणः–धर्ता–वज्री–पुरूष्टतः ।

शब्दार्थः- (युवा) पूर्णसमर्थ (कवीर्) कविर्देव अर्थात् कबीर परमेश्वर (अमितऔजा) विशाल शक्ति युक्त अर्थात् सर्व शक्तिमान छ (अजायत) तेजपुंजको शरीर मायावयी बनाएर (धर्ता) प्रकट भएर अर्थात् अवतार धारण गरेर (वज्री) आफ्नो सत्यशब्द व सत्यनाम रूपी शस्त्रबाट (पुराम्) काल–ब्रह्मका पाप रूपी बन्धन रूपी किल्लालाई (भिन्दुः) तोड्ने वाला टुक्रा–टुक्रा गर्ने वाला (इन्द्रः) सबै सुखदायक परमेश्वर (विश्वस्य) सर्व जगतका सबै प्राणीहरूलाई (कर्मणः) मनसा वाचा कर्मणा अर्थात् पूर्णनिष्ठाको साथ अनन्य मनदेखि धार्मिक कर्मद्वारा सत्य भक्तिबाट (पुरूष्टुतः) स्तुति उपासना गर्ने योग्य छ ।

जसरी बालक र वृद्ध सबै काम गर्नमा समर्थ हुँदैन, युवा ब्यक्ति सबै काम गर्न सक्ने क्षमता राख्तछ । त्यसरी नै परब्रह्म-ब्रह्म व त्रिलोकीय ब्रह्मा–विष्णु–शिव तथा अन्य देवी देवताहरूलाई बालक र वृद्ध सम्झनु होस् । त्यसैले कबीर परमेश्वरलाई युवाको उपमा वेदमा दिइएको हो

भावार्थ :- जुन कविर्देव (कबीर परमेश्वर) तत्त्वज्ञान लिएर संसारमा आउनु हुन्छ त्यो सर्व शक्तिमान छ र काल (ब्रह्म) को कर्मरूपी किल्लालाई तोड्ने वाला छ । त्यो सर्व सुख दाता हो र सबैले पूजा गर्न योग्य छ ।

संख्या नं. १४०० सामवेद उतार्चिक अध्याय नं. १२ खण्ड नं. ३ श्लोक नं. ५

भद्र वस्त्र समन्या३वसानो महान् कविर्निवचनानि शंसन् ।

आ वच्यस्व चम्वोः पूयमानो विचक्षणो जागृविर्देववीतौ ।।५।।

भद्रा वस्त्र समन्या वसअनः महान् कवीर् निवचनानि शंसन् आवच्यस्व चम्वोः पूयमानः विचक्षणः जागृविः देव वीतौ

अनुवाद :– (विचक्षणः) चतुर ब्यक्तिहरूले (आवचयस्व) आफ्ना वचनहरूबाट पूर्णब्रह्मको पूजालाई न बताएर अन्य उपासनाको मार्ग दर्शन गरी अमृतको स्थानमा (पूयमानः) अन्य उपासना जस्तै भूत-प्रेत पूजा, पित्र पूजा, तीनै गुण(रजगुण-ब्रह्म, सतगुण-विष्णु, तमगुण-शिव शंकर) तथा ब्रह्म–काल सम्मको पूजा रूपी पीपलाई (चम्वोः) आदरपूर्वक आचमन गर ाई रहेको गलत ज्ञानलाई (भद्रा) परम सुखदायक (महान कवीर्) पूर्णपरमात्मा कबीर (वस्त्रा) सशरीर साधारण वेशभूषामा "अर्थात् वस्त्रको अर्थ हो वेशभूषा, संत भाषमा यसलाई चोला पनि भन्छन्, चोलाको अर्थ शरीर हुन्छ । यदि कुनै संतको देहान्त हुन जान्छ भने भन्छन कि चोला छोडेर जानु भयो" (समन्या) आफ्नो सत्यलोक वाला शरीर सदृश्य अन्य शरीर तेजपूंजको धारण गरी (वसानः) सामान्य मानिस जस्तै जीवन बिताएर केहि दिन सम्म संसार

**मा रहेर (निवचनानि) आफ्ना शब्दावली इत्यादिको माध्यमले सत्यज्ञान (शंसन्) वर्णन गरी ( देव) पूर्णपरमात्माको (वीतौ) लुकेको सर्गुण-निर्गुण ज्ञानलाई (जागृविः) जाग्रत गर्दछन् ।**

**भावार्थ :– शास्त्रविधी विरूद्ध साधनारूपी पीप अर्थात् घातक साधनामा आधारित भक्त समाजलाई कविर्देव (कबीर परमेश्वर) तत्त्वज्ञान सम्भाउन यहाँ संसारमा प्रकट हुन्छन् । त्यसबेला आफ्नो तेजोमय शरीर माथि अन्य शरीर रूपी वस्त्र(हलुका तेजको) लाएर आउँछन् । -किन कि परमेश्वरको वास्तविक तेजोमय शरीरलाई चर्म दृष्टिले देख्न सकिदैन) कृहि दिन सम्म सामान्य व्यक्ति सरह जीवन चलाएर लीला गर्नु हुन्छ तथा परमेश्वरलाई प्राप्त गर्ने ज्ञान लाई उजागर गर्नु हुन्छ ।**

**ऋग्वेद मण्डल ९ सूक्त ९६ मंत्र १७**

**शिशुं जज्ञानं हर्यतं मृजन्ति शुम्भन्ति वह्रिं मरूतो गणेन ।**
**कविर्गीर्भिः काव्येना कविः सन्त्सोमः पवित्रमत्येति रेभन् ।।१७।।**

शिशुं जज्ञानम् हर्य तम् मृजन्ति शुम्भन्ति वहिन मरुतः गणेन ।
कविर्गीर्भि काव्येना कवीर् सन्त् सोम्: पवित्रम् अत्येति रेभन् ।।

अनुवाद-पूर्णपरमात्मा (हर्य शिशुम्) विलक्षण मनुष्यको बालक रूपमा (जज्ञानम्) जानी जानी प्रकट हुन्छन् र आनो तत्त्वज्ञानलाई (तम्) त्यस बेला (मृजन्ति) निर्मलता सित (शुम्भन्ति) उच्चारण गर्नु हुन्छ । (वह्रिः) प्रभु प्राप्तिका लागि विरह अग्नि (मरुतः) भक्त (गणेन) समूहको लागि (काव्येना) कविताहरूद्वारा कवित्व भन्दा (पवित्रम् अत्यति) अत्यधिक वाणी निर्मलताको साथ (कवीर गीर्भि) कवीर वाणी अर्थात् कबीर वाणीद्वारा (रेभन्) ठूलो स्वरले सम्बोधन गरी बोल्छन्, (कवीर् सन्त् सोमः) वह अमर पुरुष अर्थात् सतपुरुष नै संत (ऋषि) रूपमा स्वयं कविर्देव नै हुन्छन् । तर त्यस परमात्मालाई पहचान न गरी कवि भन्न थाल्छन् तर त्यो पूर्णपरमात्मा नै हुन्छन् । त्यसको वास्तविक नाम कविर्देव हो ।

***भावार्थ - ऋग्वेद मण्डल ९ सुक्त नं. ९६ मंत्र १६ मा भनिएको छ कि आऔं पूर्णपर मात्माको वास्तविक नामलाई जानौं । यस मंत्र १७ मा त्यस परमात्माको नाम र परिपूर्ण परि चय दिइएको छ । वेद बोल्ने ब्रह्म भन्दैछ कि पूर्णपरमात्मा विलक्षण मानिसको बालक रूपमा प्रकट भएर कविर्देव आफ्नो वास्तविक ज्ञानलाई आफ्नो कबीर बाणीद्वारा निर्मल ज्ञान आफ्ना हंसात्माहरू अर्थात् पुण्यात्मा अनुयायीहरूलाई कविता र लोकोक्तिहरूद्वारा सम्बोधन गरी अर्थात् उच्चारण गरी वर्णन गर्नु हुन्छ । यस तत्त्वज्ञानको अभावले त्यस बेला प्रकट पर मात्मालाई पहिचान नगरी मात्र ऋषि, संत या कवि ठान्दछन् । त्यो परमात्मा स्वयं पनि भन्नु हुन्छ कि म पूर्णब्रह्म हूँ तर लोक वेदको आधारमा परमात्मालाई निराकार मान्ने प्रजाजन पहिचान गर्दैनन् जस्तैं गरीबदासजी महाराजले काशीमा प्रकट परमात्माको पहिचान गरी उनको महिमा बयान गर्नु भयो र त्यस परमात्माद्वारा जुन आफ्नो महिमा बताइएको थियो त्यसको यथावत् वर्णन आफ्नो वाणीमा गर्नु भयो***

गरीब, जाति हमारी जगत गुरु, परमेश्वर है पंथ । दासगरीब लिख पडे नाम निरंजन कंत ।।
गरीब, हम ही अलख अल्लाह है, कुतूब गोस और पीर । गरीबदास खालिख धनी हमरा नाम कबीर ।।
गरीब, ऐ स्वामी सृष्टा मै, सृष्टी हमरे तीर, दास गरीब अधर बसू । अविगत सत कबीर ।।

*यति स्पष्ट भन्दा भन्दै पनि उसलाई कवि वा संत, भक्त वा जुलाहा भन्छन् तर त्यो पूर्णब्रह्म नै हो जसको वास्तविक नाम कविर्देव हो । त्यो स्वयं सतपुरूष कबीर नै ऋषि वा संत रुपमा रहनु हुन्छ । तर तत्त्व ज्ञानहीन ऋषिहरू व संतहरूको अज्ञान सिद्धान्तमा आधारित प्रजाहरू त्यस बेला अतिथि रूपमा प्रकट परमात्मालाई चिन्दैनन् किन कि ती अज्ञानी ऋषि र संतहरू एवं गुरूहरूले परमात्मालाई निराकार भनेर बताएका हुन्छन् ।*

*ऋग्वेद मण्डल ९ सूक्त ९६ मंत्र १८*

ऋषिमना य ऋषिकृत्स्वर्षाः सहस्रणीथः पदवीः कवीनाम् ।
तृतीयं धाम महिषः सिषासन्त्सोमो विराजमनु राजति स्टुप् ।।१८।।

**ऋषिमना य ऋषिकृत् स्वर्षाः सहस्रणीथः पदवीः कवीनाम् । तृतीयम् धाम महिषः सिषा सन्त् सोमः विराजमानु राजति स्टुप् ।।**

अनुवाद-वेद बोल्ने वाला ब्रह्म भन्दै छ कि (य) जो पूर्णपरमात्मा विलक्षण बच्चाको रूपमा आएर (कवीनाम्) प्रसिद्ध कवीको (पदवीः) उपाधी प्राप्त गरी अर्थात् एउटा संत वा ऋषिको भूमिका गर्दछ त्यस (ऋषिकृत्) संत रूपमा प्रकट भएको प्रभुद्वारा रचना भएका (सहस्रणीथः) हजारौं वाणी (ऋषिमना) संत स्वभाव वाला व्यक्तिहरु अर्थात् भक्तहरुको लागि (स्वर्षाः) स्वर्ग तुल्य आनन्द दायक हुन्छ । (सोम) वह अमर पुरुष अर्थात् सतपुरुष (तृतीया) तीसरे (धाम) मुक्ति लोक अर्थात् सत्यलोकको (महिषः) सुदृढ पृथ्वीलाई (सिषा) स्थापित गरेर (अनु) पछि (संत) मानव सदृश संत रूपमा रहदै (स्टुप) गुम्बजमा अग्लो टुप्पा रुपी सिंहासन माथि (विराजमनु राजति) उज्जवल स्थुल आकारमा अर्थात् मानव सदृश तेजोमय शरीरमा विराजमान छ ।

*भावार्थ - मंध १७ मा भनिएको छ कि कविर्देव शिशु रूप धारण गर्नु हुन्छ । लीला गर्दै ठूलो हुन्छ । कविताहरूद्वारा तत्त्वज्ञान वर्णन गर्ने हुनाले कविको पदवी प्राप्त गर्नु हुन्छ हर्थात् उसलाई ऋषि, संत व कवि भन्न थाल्दछन्, वास्तवमा उनी पूर्णपरमात्मा कबीर नै हुनु हुन्छ । उहाँद्वारा रचीत अमृतवाणी कबीर वाणी (कविर्वाणी) भनिन्छ, जो भक्तहरूका लागि स्वर्ग तुल्य सुखदायी हुन्छ । त्यही परमात्मा तेस्रो मुक्तिधाम अर्थात् सत्यलोकको स्थापना गर ी एक गुम्बज (सर्वोच्च ठाउँ) मा सिंहासन माथि तेजोमय मानव सदृश शरीरमा आकारमा विर ाजमान छन् ।*

*यस मंत्रमा तेस्रो धाम सतलोकलाई भनिएको छ । जस्तै एक ब्रह्मको लोक जो एक्काइस ब्रह्मण्डको क्षेत्र हो, दोस्रो परब्रह्मको लोक जो सात संख ब्रह्मण्डको क्षेत्र हो, तेस्रो परम अक्षर ब्रह्म अर्थात् पूर्णब्रह्मको सतलोक छ किन कि पूर्णपरमात्माले सतलोकमा सत्यपुरूष रूपमा विराजमान भएर तलका लोक हरूको रचना गर्नु भयो त्यसैले तलका लोकहरूको गणना गरिएको छ ।*

*त्यही आफ्नै आँखाले देखेको प्रमाण संत गरीब दासजीले बताउनु भएको छ -* अर्स कुर्स पर सफेद गुम्बज है जहाा सतगुरू का डेरा । *भावार्थ यो छ कि माथि आकाशको माथिल्लो भागमा कबीर परमेश्वरजी एउटा सेतो गुम्बजमा बस्नु हुन्छ ।*

*ऋग्वेद मण्डल ९ सूक्त ९६ मंत्र १९*

**चमूषच्छयेनः शकुनो विभृत्वा गोविन्दुर्द्रप्स आयुधानि बिभ्रत् ।**
**अपामूर्भि सचमानाः समुद्रं तुरीयं धाम महिषो विवक्ति ।।१९।।**

चमूसत् श्येनः शकुनः विभृत्वा गोबिन्दुः द्रप्स आयुधानि बिभ्रत् ।
अपामूर्भिः सचमानः समुद्रम् तुरीयम् धाम महिषः विवक्ति ।।

अनुवाद - (चमूसत्) पवित्र (गोविन्दुः) कामधेनु रूपी सबै मनोकामना पूर्ण गर्न सक्ने पूर्णपरमात्मा कविर्देव (विभृत्वा) सबैको पालन गर्ने वाला हुन (श्येनः) सेतो रंग युक्त (शकुनः) शुभ लक्षण युक्त (चमूसत्) सर्व शक्तिमान छन् । (द्रप्सः) जस्तै दुधबाट दही बनाउने विधि हुन्छ यस्तै शास्त्रानुकूल साधनाबाट दही रूपी पूर्णमुक्ति दाता (आयुधानि) तत्त्व ज्ञान रूपी काल जाल विनाशक धनुष युक्त सारंगपाणी प्रभु हुन् । (सचमानः) वास्तविक (बिभ्रत्) सबैको पालन-पोषण गर्नु हुन्छ । (अपामूर्भिः) गहिरो जल युक्त (समुद्रम्) सागरको जस्तै गहिरो गम्भीर अर्थात् विशाल (तुरीयम्) चौथो (धाम) लोक अर्थात् अनामी लोकमा (महिषः) उज्जवल सुदृढ पृथ्वीमा (विवक्ति) अलग स्थानमा अलग्गै पनि बस्नु हुन्छ यो जानकारी कविर्देव स्वयं नै भिन्ना-भिन्नै गरेर विस्तार पूर्वक दिनु हुन्छ ।

*भावार्थ - मंत्र १८ मा भनिएको छ कि पूर्णपरमात्मा कविर्देव (कबीर परमेश्वर) तेस्रो मुक्ति धाम अर्थात् सतलोकमा एक गुम्बजमा बस्नु हुन्छ यो मंत्र १९ मा भनिएको छ कि अत्यधिक सेतो रंगको पूर्णप्रभु जो कामधेनु जस्तै सर्व मनोकामना पूर्ण गर्ने हुनु हुन्छ, त्यही वास्तवमा सबैको पालन कर्ता हुनु हुन्छ । त्यहि कविर्देव जो मृतलोकमा शिशु रूप धारण गरी आउनु हुन्छ, त्यहि जसरी दुधबाट दही बनाउने विधि हुन्छ त्यस्तै पूर्णमोक्ष प्राप्त गर्ने शास्त्रविधि अनुसार साधना बताएर पूर्णमोक्ष रूपी दही प्रदान गर्ने हुनु हुन्छ, तत्त्वज्ञान रूपी शस्त्र अर्थात् धनुष युक्त हुने हुनाले सारंगपाणी छ र जसरी समुद्र सबै जलको स्रोत हो त्यस्तै नै पूर्णपरमात्माबाट सबैको उत्पत्ति भएको हो । गीता अध्याय १५ श्लोक ३ मा भनिएको छ कि संसार रूपी वृक्षलाई तत्त्वज्ञान रूपी शस्त्रद्वारा काटेर अर्थात् तत्त्वज्ञानद्वारा संदेह समाप्त गरेर त्यस पछि त्यस परम पद परमेश्वरको खोज गर्नु पर्ने हो जहाँ गए पछि साधक फर्केर कहिले पनि संसारमा आउदैनन् अर्थात् पूर्ण हुन्छन् । जुन परमेश्वरबाट सबै ससार रूपी वृक्षको प्रवृति विस्तारलाई प्राप्त भएको छ त्यो पूर्णप्रभु चौथो धाम अर्थात् अनामी लोकमा बस्नु हुन्छ, जस्तै प्रथम सतलोक, दोस्रो अलख लोक, तेस्रो अगम लोक चौथो अनामी लोक छन् । यसैले यस मंत्र १९ मा स्पष्ट गरिएको छ कि कविर्देव (कबीर परमेश्वर) नै अनामी पुरूष रूपमा चौथो धाम अर्थात् अनामी लोकमा पनि अन्य तेजोमय रूप धारण गरी बस्नु हुन्छ ।*

**ऋग्वेद मण्डल ९ सूक्त ९६ मंत्र २०**

**मर्यो न शुभ्रस्तन्वं मृजानो ऽ त्यो न सृत्वा सनये धनानाम् ।**
**वृषेव यूथा परि कोशमर्षनकनिक्रदच्चम्बो३रा विवेश ।।२०।।**

मर्यः न शुभ्रस्तन्वम् मृजानः अत्यः न सृत्वा सनये धनानाम्
वृषेव यूथा परिकोशम् अर्षन् कनिक्रदत् चम्वोः इरा विवेश

अनुवाद-पूर्ण परमात्मा कविर्देव जो चौथो धाम अर्थात् अनामी लोकमा तथा तेस्रो धाम अर्थात् सत्यलोकमा बस्नु हुन्छ त्यहि परमात्मा (न मर्यः) मनुष्य जस्तै छ तर नाश रहित अर्थात् अमर (मृजनः)

निर्मल मुखमण्डल युक्त आकारमा (अत्यः) धेरै (शुभ्रस्तन्वम्) विशाल श्वेत शरीर धारण गर्दै माथिको लोकहरुमा विद्यमान छ तथा त्यहााबाट (सृत्वा) गति गरेर अर्थात् हिडेर जसको कसैलाई थाहा हुँदैन त्यहि समरुप परमात्मा (इरा) पृथ्वी माथि (विवेश) अन्य वेशभूषा अर्थात् भिन्न रूप (चम्वोः) धारण गरेर आउनु हुन्छ । सतलोक र पृथ्वी लोकमा लीला गर्नु हुन्छ । (यथा) धेरै ठूलो समूहको वास्तविक (सनये) सनातन पूजाको (वृषेव) वर्षा गरी (न धनानाम्) त्यो रामनामको कमाईको निर्धनहरुलाई (कनिक्रदत्) झिनो स्वरबाट अर्थात् स्वांस–उस्वांसबाट मन मनै उच्चारण गरेर पूजा गराउनु हुन्छ, जसले असंख्य अनुयायीहरुको पूरा संघ (परि कोशम्) पहिला वाला सुख सागर रुप अमृत खजाना अर्थात् सत्यलोकलाई (अर्षन्) पूजा गरेर प्राप्त गर्दछ ।

***भावार्थ - पूर्णपरमात्मा कविर्देव (कबीर परमेश्वर) माथि तेस्रो धाम अर्थात् सत्यलोकमा बस्नु हुन्छ तथा उही परमेश्वर अन्य मनुष्य रूप धारण गरेर चौथो धाम अर्थात् अनामी लोकमा बस्नु हुन्छ । उही परमात्मा त्यस्तै मनुष्य जस्तै समरूप राम्रो मुखमण्डल युक्त सेतो शरीर युक्त आकारमा यहाँ पृथ्वी लोकमा पनि आउनु हुन्छ तथा आफ्नो वास्तविक पूजा विधिको ज्ञान गराएर धेरै ठूलो समूह अर्थात् पूरै संघलाई सतभक्तिको धनी बनाउँनु हुन्छ । असंख्य अनुयायीहरूको पूरा संघ सत्य भक्तिको कमाईले पहिलेको सुखमय लोक पूर्णमुक्तिको खजाना अर्थात् सतलोकको साधना गरी प्राप्त गर्छ ।***

अथर्ववेद काण्ड नं.४ अनुवाक न.१, मन्त्र नं.७ **(संत रामपाल दास द्वारा भाषा भाष्य)**

:- योऽथर्वाणं पित्तरं देवबन्धुं बृहस्पतिं नमसाव च गच्छात् ।

त्वं विश्वेषां जनिता यथासः कविर्देवो न दभायत् स्वधावान् ।।७।।

**यः-अथर्वाणम्–पित्तरम्–देवबन्धुम्–बृहस्पतिम्–नमसा–अव–च–गच्छात्–त्वम्–विश्वेषाम्–जनिता–यथा–सः–न–दभायत्–स्वधावान्**

अनुवादः- (यः) जो (अथर्वाणम्) अचल अर्थात् अविनाशी (पित्तरम्) जगत पिता (देवबन्धुम्) भक्तहरुको वास्तविक साथी अर्थात् आत्माको आधार (बृहस्पतिम्) सबै भन्दा ठूलो स्वामी ज्ञान दाता जगतगुरू (च) तथा (नमसा) विनम्र पुजारी अर्थात् विधिवत् साधकलाई (अव) सुरक्षाको साथ (गच्छात्) जो सतलोक गई सकेका छन्, उनलाई सतलोक लग्ने (विश्वेषाम्) सबै ब्रह्मण्डहरुलाई ( जनिता) रच्ने वाला (न दभायत्) काल जस्तै धोखा नदिने वाला (स्वधावान्) स्वभाव अर्थात् गुण वाला ( यथा) जस्ताको जस्तै अर्थात् त्यस्तै नै (सः) त्यो (त्वम्) तपाई (कविर्देवः कवीर्/देवः) कबीर परमेश्वर अर्थात् कविर्देव हो ।

**भावार्थ :- जुन परमेश्वरको विषयमा भनिन्छ कि - त्वमेव माता च पिता त्वमेव, त्वमेव बन्धु च सखा त्वमेव, त्वमेव विद्या च द्रविणम्, त्वमेव सर्वम् मम् देव देव ।। त्यो जो अविनाशी सबैका माता पिता र दाजु व सखा र जगत गुरू रूपमा सबैलाई सत्य भक्ति प्रदान गरी सतलोक लगि दिने, काल जस्तै धोखा न दिने, सबै ब्रह्मण्डहरूको रचना गर्ने कविर्देव (कबीर परमेश्वर) हुन् ।**

## कबीर साहेब चारै युगमा आउनु हुन्छ

सतगुरू पुरुष कबीर हैं, चारों युग प्रवान ।
झूठे गुरूवा मर गए, हो गए भूत मसान ।।

## "सतयुगमा कविर्देव (कबीर साहेब) को सत्सुकृत नामबाट प्रकट हुनुभयो"

*तत्त्वज्ञानको अभावमा श्रद्धालु शंका व्यक्त गर्छन् कि जुलाहा रूपमा कबीरजी त वि.सं. १४५५ (सन् १३९८) मा काशीमा आउनु भएको हो । वेदहरूमा भनिएको कविर्देव यही काशीवाला जुलाहा (धाणक) कसरी पूर्णपरमात्मा हुन सक्छन् ?*

*यस विषयमा दास (सन्त रामपाल दास) को प्रार्थना छ कि त्यही पूर्णपरमात्मा कविर्देव (कबीर परमेश्वर) वेदहरूको ज्ञान भन्दा पनि अगाडि सत्यलोकमा विद्यमान थिए र आफ्नो वास्तविक ज्ञान (तत्त्वज्ञान) दिनको लागि चारै युगमा स्वयं प्रकट हुनु हुन्छ । सतयुगमा सतसुकृत नामले, त्रेतायुगमा मुनिन्द्र नामले, द्वापर युगमा करूणामय नामले तथा कलयुगमा वास्तविक कविर्देव (कबीर प्रभु) नामले प्रकट हुनु भएको छ । यस बाहेक अन्य रूप धारण गरी जहिले पनि प्रकट भएर आफ्नो लीला गरी अर्न्तध्यान भई जानु हुन्छ । त्यस बेला लीला गर्नका निमित्त आउनु भएको परमेश्वरलाई प्रभु चाहने वाला श्रद्धालु चिन्न सकेनन्, किन कि सबै महर्षिहरू तथा संत भनाउँदाहरूले प्रभुलाई निराकार बताएका छन् । वास्तवमा परमात्मा आकारमा हुनु हुन्छ । मनुष्य सदृश शरीर युक्त छन् । तर परमेश्वरको शरीर नाडीहरूको योगले बनेको पाँच तत्त्वको छैन । एक प्रकाश तत्त्वले बनेको छ । पूर्णपर मात्मा आफू इच्छा अनुसार जहाँ कहीं पनि प्रकट भई हाल्नु हुन्छ, उहाँ कहिल्यै आमाको कोखबाट जन्म दिनु हुन्न किन कि उहाँ सबैको उत्पत्ति कर्ता हुन् ।*

*पूर्णप्रभु कबीरजी (कविर्देव) सतयुगमा सतसुकृत नामले स्वयं प्रकट हुनु भएको थियो । त्यस बेला गुरुडजी, श्री ब्रह्माजी श्री विष्णुजी तथा श्री शिवजी आदिहरूलाई सतज्ञान संझाउनु भएको थियो । श्री मनु महर्षिजीलाई पनि तत्त्वज्ञान संझाउन चाहेका थिए तर श्री मनुजीले परमेश्वरको ज्ञानलाई सत्य नमानेर श्री ब्रह्माजीबाट सुनेको वेद ज्ञानमा आधारित भई तथा आफूद्वारा निकालेको वेदहरूको निष्कर्षमा नै अडि रहे । यसको उल्टो परमेश्वर सतसकृत्जीको उपहास गर्न थाले कि तपाई त सबै उल्टो ज्ञान नै भन्नु हुन्छ । यसैले पर मेश्वर सतसुकृतको उर्फ नाम वामदेव निकाले -वामको अर्थ हुन्छ उल्टो, विपरीत जस्तै बायां हातलाई वामा अर्थात् उल्टो हात पनि भन्छन् । जस्तै दायां हातलाई सीधा हात पनि भन्छन) ।*

*यसरी सतयुगमा परमेश्वर कबीर देवजी जो सतसुकृत नामले आउनु भएको थियो त्यस बेलाका ऋषिहरू एवं साधकहरूलाई वास्तविक ज्ञान संझाउनु हुन्थ्यो तर ऋषिहरूले स्वीकार गरेनन् । सतसुकृतको स्थानमा उहाँलाई "वामदेव" भन्न थाले ।*

*यसैले यजुर्वेद अध्याय १२ मंत्र ४ मा विवरण छ कि यजुर्वेदको वास्तविक ज्ञानलाई "वामदेव" ऋषिले सही जानेर अरूहरूलाई संझाउनु भयो । पवित्र वेदहरूको ज्ञानलाई बुझ्नको लागि कृपया विचार गर्नु होस् :- जस्तै यजुर्वेद एउटा पवित्र पुस्तक हो । यसको*

*बारेमा कहीं कतै संस्कृत भाषामा विवरण गरिएको छ जहाँ यजुः या यजुम् आदि शब्द लेखिएको भए पनि पवित्र पुस्तक यजुर्वेद कै बोध बुझिन्छ । यसै प्रकार पूर्णपरमात्माको वास्तविक नाम कविर्देव हो । यसैलाई भिन्दा भिन्दै भाषामा कबीर साहेब, कबीर परमेश्वर भन्न लागे । कति श्रद्धमलु शंका व्यक्त गर्छन् कि कवीर्लाई कबीर कसरी सिद्ध गऱ्यौ । व्याकरण दृष्टिकोणले कविः को अर्थ सर्वज्ञ हुन्छ । दासको प्रार्थना छ कि प्रत्येक शब्दको कुनै न कुनै अर्थ हुन्छ नै । रह्यो व्याकरणको कुरा । पहिले भाषा बन्यो र पछि व्याकरण किन कि वेद वाणी प्रभुबाट भनिएको छ, तथा व्याकरण पछिबाट ऋषिहरूद्वारा बनाइएको हो । यो त्रुटी युक्त हुन सक्छ । वेदको अनुवाद (भाषा-भाष्य) मा व्याकरण व्यतय हो अर्थात् असंगत तथा विरोद्ध भाव हो । किन कि वेद वाणी मंत्रहरूद्वारा पदहरूमा छन् । जस्तै पलवल शहरको छेउ-छाउका व्यक्ति पलवललाई परवर भन्छन् । यदि कसैले सोधे कि पलवललाई कसरी परवर सिद्ध गऱ्यौ । त्यही कवीरलाई कबीर कसरी सिद्ध गऱ्यौ सोध्नु मात्र हो । जस्तै क्षेत्रिय भाषामा पलवल शहरलाई परवर भन्छन् । यसै प्रकार कवीर् लाई कबीर भन्दछौं, प्रभु उही हो । महर्षि दयानन्दजीले "सत्यार्थ प्रकाश" समुल्लास ४ पृष्ट १०० मा दयानन्द मठ दीनानगर पंजाबबाट प्रकाशित मा) "देवृकामा" को अर्थ देवर को कामना गर्ने भनेको छ देवृलाई पूरा "र" लेखेर देवर गरेको छ । कवीर् लाई कवीर फेरि भाषा भिन्न कबीर लेख्ने वा बोल्नमा कुनै आपत्ति या व्याकरणको त्रुटि छैन । पूर्णपरमात्मा कविर्देव हुन् यो प्रमाण यजुर्वेद अध्याय २९ मंत्र २५ तथा सामवेद संख्या १४०० मा पनि छ जो निम्न छ :-*

यजुर्वेद को अध्याय न. २९ को श्लोक न. २५ (संत रामपाल दासद्वारा भाषा-भाष्य) :-

समिद्धोऽअद्य मनुषो दुरोणे देवो देवान्यजसि जातवेदः ।

आ च वह मित्रमहश्चिकित्वान्त्वं दूतः कवीरसि प्रचेताः ।।२५।।

समिद्धः-अद्य-मनुषः-दुरोणे-देवः-देवान्-यज्-असि-जातवेदः-आ-च-वह-मित्रमहः-चिकित्वान्-त्वम्-दूतः-कवीर्-असि-प्रचेताः

अनुवादः- (अद्य) आज अर्थात् वर्तमान समयमा (दुरोणे) शरीर रुप महलमा दुराचार पूर्वक ( मनुषः) झूठ्ठा पूजामा लीन मननशील व्यक्तिहरुबाट (समिद्धः) लगाइएको आगो अर्थात् शास्त्र विधि रहित वर्तमान पूजा जो हानीकारक हुन्छ त्यसको साटो (देवान्) देवताहरुको (देवः) देवता (जातवेदः) पूर्णपरमात्मा सतपुरूषको वास्तविक (यज्) पूजा (असि) छ । (आ) दयालु (मित्रमहः) जीवको वास्तविक साथी पूर्णपरमात्मा नै आफ्नो (चिकित्वान्) स्वस्थ ज्ञान अर्थात् यथार्थ भक्तिको (दूतः) सन्देश वाहक रूपमा (वह) लिएर आउने वाला (च) तथा (प्रचेता) बोध गराउने (त्वम्) तपाई (कवीरसि) कविर्देव अर्थात् कबीर परमेश्वर हुनु हुन्छ ।

*भावार्थ :– जुन बेला पूर्णपरमात्मा प्रकट हुनु हुन्छ त्यसबेला सबै ऋषिहरू र सन्तहरू शास्त्र विधि त्यागेर मनमाना आचरण अर्थात् मनलागी पूजाद्वारा सबै भक्त समाजको मार्ग दर्शन गर्दै रहन्छन् । अनि आफ्नो तत्त्वज्ञान अर्थात् स्वस्थ ज्ञानको संदेशवाहक बनेर स्वयं नै कविर्देव अर्थात् कबीर प्रभु नै आउनु हुन्छ ।*

**संख्या नं. १४०० सामवेद उतार्चिक अध्याय नं. १२ खण्ड नं. ३ श्लोक नं.५ (संत रामपाल दासद्वारा भाषा-भाष्य) :-**

भद्रा वस्त्रा समन्या ३ वसानो महान् कविर्निवचनानि शंसन् ।

आ वच्यस्व चम्वोः पूयमानो विचक्षणो जागृविर्देववीतौ ।।५।।

भद्रा-वस्त्रा-समन्या-वसानः-महान्-कवीर्-निवचनानि-शंसन्-आवच्यस्व-चम्वोः-पूयमानः-विचक्षणः-जागृविः-देव-वीतौ

अनुवाद :- (विचक्षणः) चतुर व्यक्तिहरूले (आवच्यस्व) आफ्नो वाणीद्वारा भनेका हुन्छन् कि जो हामी प्रवचन गर्छौं त्यसको अनुसरण गर । ती चतुर व्यक्तिहरूले पूर्णब्रह्मको पूजा न बताई अन्य उपासनाको मार्ग दर्शाएर अर्मतको ठाउँमा अन्य उपासना रूपी पीप {जस्तै भूत-प्रेत पूजा, पित्र पूजा, तीनै गुणहरू (रजगुण-ब्रह्मा, सतगुण-विष्णु, तमगुण-शिव शंकर) तथा ब्रह्म-काल सम्मको पूजा} लाई (चम्वोः) आदरसाग आचमन गराउँदै अर्थात् शास्त्र विरूद्ध गलत ज्ञानलाई समाप्त गर्नको लागि (भद्रा) परम सुखदायक (महान् कवीर्) महान कवीर अर्थात् पूर्णपरमात्मा कबीर (वस्त्रा) सशरीर साधारण वेशभूषमा 'अर्थात् वस्त्रको अर्थ छ वेशभूषा, संत भाषामा यसलाई चोला पनि भन्छन्, चोलाको अर्थ हो शरीर । यदि कुनै संतको देहान्त हुन जान्छ भने भन्छन् कि चोला छोडेर गए' (समन्या) आफ्नो सतलोक वाला शरीर जस्तै अन्य शरीर मधुरो तेजपुंज (चम्किलो) धारण गरी (वसानः) सामान्य व्यक्ति जस्तै जीवन यापन गरी केहि दिन संसारमा अतिथि जस्तै बसेर (निवचनानि) आफ्नो शब्दवली कबीर वाणी आदिको माध्यमले सतज्ञान (शंसन) वर्णन गरी (देव) पूर्णपरमात्माको (वीतौ) लुकेर बसेको सर्गुण-निर्गुण ज्ञान रूपी धनलाई (जागृविः) जाग्रत करते हैं ।

*भावार्थ :- जसरी यजुर्वेद अध्याय ५ मंत्र १ मा भनिएको छ कि 'अग्नेः तनः असि = परमेश्वर सशरीर छ । विष्णवे त्वा सोमस्य तनुः असि = त्यस अमर प्रभुको पालन पोषण गर्नका निमित्त अर्को शरीर छ जुन अतिथि रूपमा केहि दिनका लागि संसारमा आउँछन् । तत्त्वज्ञानद्वारा अज्ञान निन्द्रामा सुति रहेका प्रभु प्रेमीहरूलाई जगाउनु हुन्छ । त्यहि प्रमाण यस मंत्रमा छ कि केहि समयको लागि पूर्णपरमात्मा कविर्देव अर्थात् कबीर प्रभु आफ्नो रूप बदलेर सामान्य व्यक्ति जस्तो रूप बनाएर पृथ्वी मंडलमा प्रकट हुन्छन् र कविर्निवचनानि शंसन् अर्थात् कविर्वाणी बोल्छन् जसको माध्यमले तत्त्वज्ञानलाई जगाउछन् । त्यस बेला महर्षि भनाउँदा चतुर प्राणीहरू मिथ्या ज्ञानको आधारमा शास्त्र विधि अनुसार सत्य साधाना रूपी अमृतको स्थानमा शास्त्र विधि रहित पूजा रूपी पीप (मवाद) लाई श्रद्धाले आचमन अर्थात् पूजा गराई रहेका हुन्छन् । त्यस बेला पूर्णपरमात्मा स्वयं प्रकट भएर तत्त्व ज्ञानद्वारा शास्त्र विधि अनुसार साधनाको ज्ञान प्रदान गर्नु हुन्छ ।*

*पवित्र ऋग्वेदको निम्न मंत्रहरूमा पनि पहिचान बताइएको छ कि जब त्यो पूर्णपरमात्मा केहि समयका लागि संसारमा लीलावत् ठूलो हुन्छ । आफूलाई पाउनेव सतलोक जाने अर्थात् पूर्णमोक्ष मार्गको तत्त्वज्ञान(कविर्गिर्भिः) कबीर वाणीद्वारा कविताको माध्यमले बोल्नु हुन्छ जसले गर्दा प्रसिद्ध कवि भनिनु हुन्छ तर उनी स्वयं कविर्देव पूर्णपरमात्मा नै हुनु हुन्छ जो तेस्रो मुक्ति धाम सतलोकमा बस्नु हुन्छ ।*

*ऋग्वेद मण्डल ८ सूक्त १ मंत्र ८ तथा सूक्त ८६ मंत्र १७-१८ :-*

**ऋग्वेद मण्डल ९ सूक्त १ मंत्र ९**

अभी इमं अध्न्या उत श्रीणन्ति धेनवः शिशुम् । सोममिन्द्राय पातवे ।।९।।

अभी इमम्-अध्न्या उत श्रीणन्ति धेनवः शिशुम् सोमम् इन्द्राय पातवे ।

अनुवाद :- (उत) विशेष गरी (इमम्) यो (शिशुम्) बालक रुपमा प्रकट (सोमम्) पूर्णपरमात्मा अमर प्रभुको (इन्द्राय) सुख सुविधाहरुद्धारा अर्थात् खान-पानद्वारा जुन शरीर वृद्धिको प्राप्त हुन्छ त्यस (पातबे) वृद्धिको लागि (अभी) पूर्णतवरले (अध्न्या धेनवः) जुन गाई साढेद्धारा कहिले पनि पिडित नभएकी अर्थात् कुमारी गाईद्धारा (श्रीणन्ति) परवरिष की जाती है ।

***भावार्थ - पूर्णपरमात्मा अमर पुरुष जब लीला गर्दे बालक रूप धारण गरी स्वयं प्रकट हुन्छन् त्यस बेला कुमारी गाई आफ से आफ दूध दिन थाल्छे जसबाट त्यस पूर्णप्रभुको पालन पोषण हुन्छ ।***

**ऋग्वेद मण्डल ९ सूक्त ९६ मंत्र १७**

शिशुम् जज्ञानम् हर्य तम् मृजन्ति शुम्भन्ति वहि्नमरुतः गणेन ।

कविर्गीर्भि काव्येना कवीर् सन्त सोमः पवित्रम् अत्येति रेभन् ।।१७।।

अनुवाद - पूर्णपरमात्मा (हर्य शिशुम्) मानिसको बालक रुपमा (जज्ञानम्) जानी जानी प्रकट हुन्छ र आनो तत्त्व ज्ञानलाई (तम्) त्यस बेला (मृजन्ति) निर्मलताको पूर्वक (शुम्भन्ति) उच्चारण गर्नु हुन्छ । (वहि्न) प्रभु प्राप्तिको लागि (काव्येना) कविताहरुद्धारा कवित्वले (पवित्रम् अत्येति) अत्यन्त निर्मलता पूर्वक (कवीर गीर्भि) कवीर वाणी अर्थात् कबीर वाणीद्धारा (रेभन) ठूलो स्वरले सम्बोधन गरी भन्नु हुन्छ । (कवीर् सन्त् सोमः) त्यो अक्षर पुरुष अर्थात् सतपुरुष नै संत अर्थात् ऋषि रुपमा स्वयं कविर्देव नै हुन्छ । तर त्यस परमात्मालाई पहिचान न गरी कवि भन्न थाल्छन् ।

**भावार्थ – वेद बोल्ने ब्रह्म भन्दै छ कि विलक्षण मानिसको बाल रूपमा प्रकट भएर पूर्णपरमात्मा कविर्देव आफ्नो वास्तविक ज्ञानलाई आफ्ना हंसात्माहरू अर्थात् पुण्यात्मा अनुयाईहरूलाई कवि रूपमा कविता र लोकोक्तिहरूद्वारा सम्बोधन गरी अर्थात् उच्चारण गर ी वर्णन गर्छ । त्यो स्वयं सतपुरूष कबीर नै हुन्छ ।**

**ऋग्वेद मण्डल ९ सूक्त ९६ मंत्र १८**

ऋषिमना य ऋषिकृत् स्वर्षाः सहस्राणीथः पदवीः कवीनाम् ।

तृतीयम् धाम महिषः सिषा सन्त् सोमः विराजमानु राजति स्टुप् ।।१८।।

अनुवाद - वेद भन्ने ब्रह्म भन्दै छ कि (य) जुन पूर्णपरमात्मा विलक्षण बालक रुपमा आएर (कवीनाम्) प्रसिद्ध कविको (पदवीः) उपाधि प्राप्त गरी अर्थात् एउटा संत वा ऋषिको भूमिका निर्वाह गर्छ त्यस (ऋषिकृत) संत रुपमा प्रकट भएको प्रभुद्धारा रचना गरिएका (सहस्णीथः) हजारौं वाणी (ऋषिमना) संत स्वभाव वाला व्यक्तिहरू अर्थात् भक्तहरुका लागि (स्वर्षाः) स्वर्ग तुल्य आनन्द दायक हुन्छ । (सन्त सोमः) ऋषि/संत रुपमा प्रकट त्यो अमर पुरुष अर्थात् सतपुरुष नै हुन्छ, त्यो पूर्णप्रभु (तृतीया) तेस्रो ( धाम) मुक्तिलोक अर्थात् सतलोकको (महिषः) सुदृढ पृथ्वीलाई (सिषा) स्थापित गरी (अनु) पछि मानव सदृश संत रुपमा (स्टुप्) गुबंद अर्थात् गुम्बज मा अग्लो चुचुरो रुपी सिंहासन माथि (विराजमनु राजति) उज्जवल स्थुल आकारमा अर्थात् मानव सदृश शरीरमा विराजमान छ ।

***भावार्थ - मंत्र १७ मा भनिएको छ कि कविर्देव शिशु रूप धारण गर्नु हुन्छ । लीला***

*गर्दै ठूलो हुन्छन् कविताहरूद्वारा तत्त्व ज्ञान वर्णन गर्नाले कविको पदवी प्राप्त गर्नु हुन्छ अर्थात् उनलाई कवि भन्न थाल्छन् । वास्तवमा उनी पूर्णपरमात्मा कवीर् (कबीर प्रभु) नै हुन् । उहाँद्वारा रचित अमृतवाणी (कविर्गिरः अर्थात् कविर्वाणी) भनिन्छ जो भक्तहरूका लागि स्वर्ग तुल्य सुखद हुन्छ । त्यहि परमात्मा तेस्रो मुक्तिधाम अर्थात् सतलोकको स्थापना गरी एक गुम्बज(मंदीरको माथिल्लो भाग) मा सिंहासन माथि तेजोमय मानव सदृश शरीरमा आकारमा विराजमान छन् ।*

*यस मंत्रमा तेस्रो धाम सतलोकलाई भनिएको छ । जस्तै एक ब्रह्मको लोक जो २१ ब्रह्मण्डहरूको क्षेत्र हो, दोस्रो परब्रह्मको लोक जो सात संख ब्रह्मण्डहरूका क्षेत्र छन् र तेस्रो परम अक्षर ब्रह्मण्ड अर्थात् पूर्णब्रह्मका ऋतधाम अर्थात् सतलोक जो असख्य ब्रह्मण्डहरूको क्षेत्र हो ।*

## "त्रेतायुगमा कविर्देव (कबीर साहेब) को मुनिन्द्र नामबाट प्रकट हुनुभयो"

### "नल तथा नीललाई शरणमा लिनु"

*त्रेतागुगमा स्वयंभु (स्वयं प्रकट हुने) कविर्देव (कबीर परमेश्वर) रूपान्तर गरी मुनिन्द्र ऋषिको नामले आउनु भएको थियो । अनल अर्थात् नल तथा अनील अर्थात् नील दुवै एक अर्काका दिदी बहिनीका पुत्र थिए । माता पिताको देहान्त भै सकेका थिए । नल र नील दुवै शारीरिक र मानसिक रोगले अत्यधिक पीडित थिए । सबै ऋषि र संतहरूसँग कष्ट निवार णको लागि प्रार्थाना गरी सकेका थिए । सबै ऋषि र संतहरूले भनेका थिए कि यो तपाईको प्रारब्ध पाप कर्मको दण्ड छ, यो तपाईले भोग्नै पर्छ । यसको कुनै समाधान छैन । दुवै दाजु भाइ जीवन देखि निराश भएर मृत्युको प्रतिक्षा गर्दै थिए ।*

*एक दिन दुवैले मुनिन्द्र नामले प्रकट पूर्णपरमात्माको सतसंग सुन्ने मौका पाए । सतसंग पछि दुवैले परमेश्वर कविर्देव (कबीर साहेब) उर्फ मुनिन्द्र ऋषिजीको चरण स्पर्श गरे र परमेश्वर मुनिन्द्रजीले दुवैको टाउकोमा हात राख्ने बित्तिकै दुवैको असाध्य रोग छू मन्तर भयो अर्थात् दुवै नल र नील स्वस्थ भए । यो अद्भुत चमत्कारलाई देखेर प्रभुको चरणमा पर ेर घन्टौं रोई रहे अनि भने कि आज हामीलाई परमात्मा भेटियो जसको खोजी थियो तथा प्रभावित भएर उहाँबाट नाम (दीक्षा) नाम लिए र मुनिन्द्र साहेबजीसँगै सेवामा रहन थाले । पहिलेको समयमा संतहरूको समागम पानीको ब्यवस्था देखेर नदी किनारमा हुने गर्थे । नल र नील दुवै धेरै प्रभु प्रेमी र सोझा आत्मा थिए । परमात्मामा निकै श्रद्धा राख्ने गर्थे र सेवामा तल्लीन रहन्थे । समागमहरूमा रोगी र वृद्ध एवं विकलाङ्ग भक्तजन आउँदा उनको कपडा धुने गर्थे, भाडा वर्तन सफा गर्थे । उनीहरूका लोटा, ग्लास सफ गरिदिन्थे । तर दिमागको सीधा साधा थिए । कपडा धुँदा वा वर्तन सफ गर्दा आफूहरूले सतसंगमा सुनेका प्रभु*

*कथाहरूकोचर्चामा यति मस्त (मगन) हुन जान्थे र वस्तुहरू (सामानहरू) पानीमा डुबेको थाहै पाउदैनन् थे । कसैको चार चीजहरू लिएर जान्थे त दुई चीजहरू मात्र फर्काएर ल्याउथे । भक्तजन भन्थे कि तपाई सेवा त धेरै गर्नु हुन्छ तर हाम्रो धेरै काम बिगार्नु हुन्छ । यी हराएका चीजहरू कहाँबाट ल्याउ ? तपाई हाम्रो सेवा गर्ने काम छाडी दिनुस् हामी आफ्नो काम आफै गर्छौ । अनि नल र नील रून थाल्थे र भन्थे कि हाम्रो सेवा न छिन्नुहोस । अब देखि हराउदैनौं । तर फेरि त्यहि काम गर्थे । फेरी प्रभुको चर्चामा लागे पछि नदीको जलमा चीजहरू डुबेर जान्थे । भक्तजनहरूले ऋषि मुनिन्द्रजीसँग प्रार्थना गर्नु भयो कि नल नीललाई तपाई नै संझाउनु होस् । यिनीहरू न त मान्छन र नगर्नु भन्दा त रून थाल्छन् । हाम्रो सफा गर्न लगेको वस्तुहरू त आधी पनि फर्काएर ल्याउँदैनन् । यिनीहरू नदि किनार मा बसेर सतसंग सुनेका भगवानको चर्चामा मस्त हुन जान्छन् र सामानहरू डुबेर जान्छन् । मुनिन्द्र साहेबले एक दुई पटक त संझायौं । उनीहरू थाले र भन्न थाले कि साहेब हाम्रो यो सेवा न खोस्नु होस् (छिन्नुहोस) । सतगुरु मुनिन्द्र साहेबले भन्नु भयो बेटा नल तथा नील खुब सेवा गर । आज देखि तिम्रो हातले छोएको कुनै वस्तु चाहे त्यो ढुँङ्गा अथवा फलाम नै किन नहोस् पानीमा डुब्ने छैन् । मुनिन्द्र साहेबले उनलाई यो आशिर्वाद दिनु भयो ।*

*तपाईले रामायण सुन्नु भएको छ । एक समयको कुरा हो कि सीताजीलाई रावणले उठाएर लगेको थियो । भगवान रामलाई थाहा नै थिएन कि सीताजीलाई कसले लगेको छ ? श्री रामचन्द्रजी उता उता खोज्दै थिए । हनुमानजीले खोज गरी भने कि सीता माता लङ्कापति रावणको कैदमा छिन् । थाहा भए पछि भगवान रामले रावण कहाँ शान्ति दूत पठाउनु भयो र प्रार्थाना गर्नु भयो कि सीतालाई फर्का दिनु होस् तर रावणले मानेनन् । युद्धको तयारी भयो । समस्या आयो कि समुन्द्र पार सेना कसरी पठाउने ?*

*भगवान श्री रामचन्द्रजीले तीन दिन सम्म घुँडा घुँडा पानीमा उभिएर हात जोडेर समुन्द्र सित प्रार्थाना गर्नु भयो कि बाटो दिनु होस् । तर समुन्द्रले टेर पुच्छर लाएन । जब समुन्द्रले मानेनन् तब श्री रामले उसलाई अग्नि बाणले डढाउन चाहे । भयभीत समुन्द्र एउटा ब्रह्मणको रूपमा सामुन्ने आएर भन्यो कि भगवन ! सबैको आ-आफ्ना मर्यादा हुन्छ । मलाई न डढाउनु होस् । मेरो पेटमा अनगिन्ती जीव जन्तु बसेका छन् । यदि तपाई मलाई डढाए पनि पार जान सक्नु हुन्न कारण यहाँ धेरै गहिरो गहिरो खाल्डो बन्न जानेछ, जसलाई तपाई कहिले पनि पार गर्न सक्नु हुन्न ।*

*समुद्रले राय दियो कि भगवन यस्तो काम गर्नुहोस् जसले साँप पनि मरोस र लाठी पनि न भाँच्चियोस् । मेरो मर्यादा पनि रहोस् र तपाईको पुल पनि बनोस् । अनि भगवान श्री रामले समुद्रसँग सोध्नु भयो कि त्यस्तो कुन उपाय छ श्र ब्रह्मण भेषधारी समुद्रले भन्यो कि तपाईको सेना भित्र नल र नील नाम गरेका दुई सैनिक छन् । उनीहरूसँग उनको गुरूदेवद्धारा प्राप्त यस्तो शक्ति छ कि उनको हातले ढुङ्गा पनि पानी माथि तैरिन्छ अर्थात् डुब्दैन । प्रत्येक वस्तु चाहे त्यो फलाम नै किन नहोस् डुब्दैन । श्री रामचन्द्रजीले नल र नीललाई बोलाउनु भयो र सोध्नु भयो कि के तपाईसँग कुनै यस्तो शक्ति छ ? नल नीलले*

*भने कि हो, हाम्रो हातबाट ढुङ्गा पनि पानीमा डुब्दैन । श्री रामले भन्नु भयो - परीक्षण गरि योस् ।*

*ती नादान (नल-नील) ले सोचे कि आज सबै समक्ष हाम्रो धेरै मर्यादा होला । त्यस दिन उनले आफ्नो गुरुदेव भगवान मुनिन्द्र (कबीर साहेब) लाई याद गरेनन् यो सोचेर कि कहीं श्री रामले यो न सोचुन कि यिनीहरूसित शक्ति छैन, कोहि अरूसित माँग्दै छन् । उनीहरूले ढुँङ्गा उठाएर पानीमा हाल्दा त्यो ढुँङ्गा पानीमा डुबी हाल्यो । नल तथा नीलले धेर कोशिशगरे, तर सफल भएनन् । अनि भगवान श्री रामले समुद्र तिर हेर्नु भयो, मानौं भन्न चाहनु हुन्छ कि तपाई झुट्टो बोल्नु हुन्छ । यिनीहरूमा कुनै शक्ति नै छैन । समुद्रले भन्यो कि नल र नील आज तिमीहरूले आफ्नो गुरुदेवलाई याद गरेनौं । बेबकूफ आफ्नो गुरुदेवलाई याद गर । ती दुवैले संझिए कि आज हामीले गल्ती गर्‍यौं । उनीहरूले सतगुरु मुनिन्द्र साहेबजीलाई याद गरे । सतगुरु मुनिन्द्र (कबीर साहेब) त्यहाँ आए । भगवान र ामचन्द्रजीले भन्नु भयो कि हे ऋषिवर ! मेरो दुर्भाग्य हो कि तपाईको सेवकहरूको हातबाट ढुँङ्गा पानी माथि आउँदैन अर्थात् तर्दैन । मुनिन्द्र साहेबले भन्नु भयो कि अब यीनको हातबाट तर्दैन किन कि यीनलाई अभिमान भइ सकेको छ । सतगुरुको वाणी प्रमाण गर्छ कि :-*

गरीब, जैसे माता गर्भ को, राखे जतन बनाय ।
ठेस लगे तो क्षीण होवे, तेरी ऐसे भक्ति जाय ।

*त्यस दिन देखि नल-नीलको त्यो शक्ति समाप्त भयो । श्री रामचन्द्रजीले परमेश्वर मुनिन्द्र साहेबजीसँग सोध्नु भयो कि हे ऋषिवर ! म माथि ठूलो आपत्ति आई लागेको छ । दया गर्नुहोस् कुनै किसीमले सेना समुन्द्र पार भै जाओस् । जब हजुर आफ्नो सेवकलाई शक्ति दिन सक्नु हुन्छ भने प्रभु ! केहि दया गर्नुहोस् । मुनिन्द्र साहेबले भन्नु भयो कि यो जो सामुन्ने पहाड छ मैले त्यसको चारै तिर एउटा रेखा लगाई दिएको छु, त्यस बीचको ढुँङ्गा ल्याउ त्यो डुब्दैन । श्री रामले परिक्षणको लागि ढुँङ्गा मगाउनु भयो । त्यसलाई पानीमा राख्दा डुबेन । नल र नील कारीगर (शिल्पकार) पनि थिए । हनुमानजी प्रतिदिन भगवानलाई याद गर्दै रहन्थे उसले आफ्नो दैनिक कार्य पनि साथै गर्थे, राम राम पनि लेख्तै जान्थे र पहाडको पहाड उठाएर ल्याउथे भने नल-नील त्यसलाई जोड-तोड गरी पुलमा लगाउँदै जान्थे । यसरी पुलको निर्माण भएको थियो । धर्मदासजी भन्नु हुन्छ :-*

रहे नल नील जतन कर हार, तब सतगुरू से करी पुकार ।
ज सत रेखा लिखी अपार, सिन्धु पर शिला तिराने वाले ।
धन-धन सतगुरू सत कबीर, भक्त की पीर मिटाने वाले ।

*कोई भन्थे कि हनुमानजीले ढुँङ्गामा रामको नाम लेखेको हुँदा ढुँङ्गा डुब्दैन्थे । कोहि भन्थे कि नल-नीलले पुल बनाएका थिए । कोहि भन्थे कि रामले पुल बनाएका थिए । तर जसरी माथि भनिएको छ सत्य कथा त्यही हो ।*

**(सत कबीरको साखी - पृष्ट १७९ देखि १८२ सम्म) -: पीव पिछानको अंग :-**

कबीर- तीन देव को सब कोई ध्यावै, चौथे देव का मरम न पावै ।

चौथा छाड पंचम को ध्यावै, कहै कबीर सो हम पर आवै ।।३।।

कबीर- ओंकार निश्चय भया, यह कर्ता मत जान ।
साचा शब्द कबीर का, परदे माहीं पहचान ।।५।।

कबीर- राम कृष्ण अवतार हैं, इनका नांही संसार ।
जिन साहेब संसार संसार किया, सो किन्हूं न जन्म्या नार ।।१७।।

कबीर- चार भुजा के भजन में भूलि परे सब संत ।
कबिरा सुमिरो तासु को जाके भुजा अनंत ।।२३।।

कबीर- समुद्र पाट लंका गये, सीता को भरतार ।
ताहि अगस्त मुनि पीय गयो, इनमें को करतार ।।२६।।

कबीर- गोवर्धनगिरि धारयो कृष्णजी, द्रोणागिरि हनुमंत ।
शेष नाग सब सृष्टी सहारी, इनमें को भगवंत ।।२७।।

कबीर- काटे बंधन विपति में, कठिन किया संग्राम ।
चिन्हों रे नर प्राणियां, गरुड बडो की राम ।।२८।।

कबीर- कह कबीर चित चेतहूं, शब्द करौ निरूवार ।
श्रीरामहि कर्ता कहत है, भूलि परयो संसार ।।२९।।

कबीर- जिन राम कृष्ण व निरंजन कियो, सो तो करता न्यार ।
अंधा ज्ञान न बूझई, कहै कबीर विचार ।।३०।।

## "द्वापरयुगमा कविर्देव (कबीर साहेब) को करूणामय नामबाट प्रकट हुनुभयो"

***पर****मेश्वर कबीर (कविर्देव) द्वापर युगमा करुणामय नामले प्रकट हुनु, भएकोथियो । त्यस समयमा एउटा बाल्मीक जातिमा उत्पन्न भक्त सुदर्शन सुपच (अनुसुचित जातिको) उहाँको शिष्य भएको थियो । त्यही सुदर्शनजीले पाण्डवहरूको यज्ञ सफल गराएको थियो । जो न त श्री कृष्णजीको भोजन गर्नाले सफल भएको थियो न त तेंतिस करोड देवताहरू, अठासी हजार ऋषिहरू, बारह करोड ब्रह्मणहरू, नौ नाथहरू चौरासी सिद्धहरू आदिहरूको भोजन खानाले सफल भएको थियो । भक्त सुदर्शन वाल्मीक पूर्णगुरुजीबाट वास्तविक तीन मंत्र प्राप्त गरी सत साधना गुरू मर्यादा मा रही गर्दे थिए ।*

## "द्वापर युगमा इन्द्रमतिलाई शरणमा दिनु"

*द्वापर युगमा चन्द्र विजय नामको एउटा राजा थिए । उनकी पत्नी इन्द्रमती धेरै नै धार्मिक प्रवृतिकी महिला थिइन् । संत महात्माहरूलाई निकै आदर गर्ने गर्थिन्। उनले एउटा गुरुदेव पनि बनाई राखेकी थिइन् । उनको गुरुदेवजी ले भन्नु भएको थियो कि छोर*

*ी, साधु संतहरूको सेवा पनि गर्दै जानु पर्छ । संतहरूलाई भोजन खुवाउनाले निकै लाभ हुन्छ । एकादशी व्रत, मंत्र जप आदि साधानहरू जो गुरुदेवले बताउनु भएको थियो, उनी भगवत् भक्तिमा निकै दृढतासँग लागेकी थिइन् । गुरुदेवले बताउनु भएको थियो कि संतहरू कि संतहरूलाई भोजन खुवाउदै गर्‍यौं भने तिमी भविष्यमा रानी बन्ने छेउ र तिमीलाई स्वर्ग प्राप्ति हुनेछ । रानीले सोचिन् कि हरेक दिन एउटा संतलाई भोजन गराउने गर्छु । उसले यो प्रतिज्ञा मन मनै ठानिन् कि पहिले संतलाई भोजन गराएर पछिमात्र म खानेछु । यसबाट मलाई याद रही रहने छ, कहीं मबाट भूल नहुन जाओस् । रानी हरेक दिन पहिला एउटा संतलाई भोजन गराउँथिन् अनि मात्र स्वयं खाने गर्थिन् । वर्षौंसम्म यो क्रम चल्दै थियो ।*

*एक समय हरिद्वारमा कुम्भ मेलाको संयोग पर्‍यो । जति पनि त्रिगुण मायाको उपासक संतहरू थिए, सबै गंगामा स्नानको (परभी लिनको लागि) लागि गएका थिए । यस कारणले निकै दिनसम्म रानीले भोजन गराउनको लागि कुनै संत भेटिनन् । त्यस कारण र ानी इन्द्रमतिले प्रतिज्ञावश स्वयं पनि भोजन गरिनन् । चौथो दिन रानी इन्द्रमतिले आफ्नी सेविकालाई भनिन् कि हेर त कुनै संत भेटिन्छ कि ? होईन भने आज तिम्री रानी जिवीत रह्ने छैन । आज मेरो प्राण निस्के पनि भोजन गर्दिन । यो दीन दयाल कबीर परमेश्वर आफ्नो पछिल्लो सेवकलाई शरणमा लिनका निमित्त कस्ता कस्ता कारण बनाई दिनु हुन्छ । बांदी (सेविका) ले माथि अटारीमा चढेर हेरिन कि एउटा संत सामुन्नेबाट आउँदै छ । सेतो कपडा लाएका थिए । द्वापर युगमा परमेश्वर कबीर करूणामय नामले आउनु भएको थियो । त्यो सेविका तल आएर रानीलाई भनिन कि एक ब्यक्ति छ जो साधु जस्तै देखिन्छ । रानीले भनिन कि चाँडै बोलाएर ल्याउ । सेविका महल बाहिर आएर प्रार्थाना गरिन् कि हे महात्मा तपाईलाई हाम्री रानीले सम्झेकी छिन । करूणामय साहेबले भन्नु भयो कि रानीले मलाई किन याद गरेकी छिन? मेरो र रानीको के सम्बन्ध छ? सेविकाले सबै कुरा भनिन् । करूणामय साहेबजीले भन्नु भयो कि रानीलाई आवश्यकता छ भने यहाँ आओस म यही उँभिएको छु । तँ बांदी र उनी रानी । म त्यहाँ जाउँ र यदि उसले भन्ला कि तलाई कसले बोलाएको थियो राजाले नै केही भन्ला र अनि पुत्री संतहरूको अनादु धेरै पापदायक हुनेछ । बांदी फर्केर आइन् र सबै कुरा बताइन् । अनि रानीले भनिन् कि बांदी ! मेरो हात समात र हिड । जाने बित्तिकै रानीले दण्डवत प्रणाम गरी प्रार्थाना गरिन् हे परवरदिगार! इच्छा त छ कि तपाईलाई काँधमा राखी लगौं । करूणामय साहेबले भन्नु भयो पुत्री! म यही हेर्न चाहन्थे कि तिमीलाई साधुमा कुनै श्रद्धा पनि छ कि त्यसै भोकै मरी रहेकी छे । रानीले आफ्नो हाथले खाना बनाया । करूणामय रूपमा आएका कविर्देवले भन्नु भयो कि म खाना खाँदिन । मेरो शरीर खाना खाने जस्तो होइन । अनि रानीले भनिन् कि म पनि खाना खाँदिन । करूणामय साहेबजीले भन्नु भयो कि ठीक छ, ल्याउ खाना खान्छु किन कि समर्थ त्यसैलाई भनिन्छ जो जे चाहे त्यहि गरोस् । करूणामय साहेबले खाना खानु भयो । करूणामय रूपमा प्रकट कवीरग्नि (कबीर परमेश्वर) ले रानीसित सोध्नु भयो कि जो यो तँ साधना गर्दै छौ त्यो तँलाई कसले बताएको हो ? रानीले भनिन् कि मेरो गुरुदेवले आदेश*

दिनु भएको हो । कबीर साहेबले सोध्नु भयो कि तेरो गुरुदेवले के आदेश दिनु भएको छ ? इन्द्रमतीले भनिन् कि ब्रह्म-विष्णु-महेश को पूजा, एकादशी व्रत, तीर्थ भ्रमण्म, देवी पूजा, श्राद्ध निकाल्नु, मंदिरमा जानु, संतहरूको सेवा गर्नु आदि । करूणामय (कबीर) साहेबले भन्नु भयो कि जो साधना तिम्रो गुरुदेवले दिनु भएको छ त्यसले तँलाई जन्म मृत्यु र स्वर्ग-नर्कको चक्रमा राख्नेछ र चौरासी लाख योनीहरूको कष्टबाट मुक्त हुन सक्तैन । रानीले भनिन् महाराजजी जति पनि संत छन् आ-आफ्ना प्रभुता आफै बनाउन आउँछन् । मेरो गुरुदेवको बारेमा केहि पनि न भन्नुस् । म चाहे मुक्त होउँ अथवा न होउँ ।

अब करूणामय (कबीर) साहेब सोच्नु हुन्छ कि यो सीधा-साधा जीवलाई कसरी सम्झाउँ ? यिनीहरूले जुन अड्डी लिएका छन् त्यसलाई छोड्न सक्तैनन् बरू मर्न तयार हुन्छन् । करूणामय साहेबले भन्नु भयो कि पुत्री त्यसो त यो तेरो इच्छा हो, मैले निन्द्या गर ेको छैन । के मैले तिम्रो गुरूदेवलाई गाली दिएको छु र या कुनै नराम्रो भनेको छु? मैले त भक्तिमार्ग बारे भन्दै छु कि यो भक्ति शास्त्र विरूद्ध छ । तलाई पार हुन दिने छैन र न त तेरो कोई आउने कर्म दण्ड काटिने छ र सुन आजको तेस्रो दिन तेरो मृत्यु हुनेछ । न त तेरो गुरू न यो तेरो नकली साधना तिमीलाई बचाउने छन् (जब मर्ने बेला आउँछ अनि जीवलाईडर हुन्छ, त्यसरी मान्दैन) रानीले सोचिन कि संत झूटो बोल्दैनन् । कहि यस्तो न भै हालोस् कि म पर्सी नै मरौं । यस डरले रानीले करूणामय साहेबसँग सोधिन कि साहेब के मेरो ज्यान जोगिन सक्छ । कबीर साहेब (करूणामय) ले भन्नु भयो कि जोगिन सक्छ । यदि तँ मबाट उपदेश लिनेछस्, मेरो शिष्या बन्नेछेस्, पहिले गर्ने पूजालाई त्याग्नेछस् अनि तेर ो ज्यान बाँच्ने छ । इन्द्रमतीले भनिन् कि मैले सुनेकी छु कि गुरूदेव बदल्नु हुँदैन, पाप लाग्छ रे । कबीर साहेब (करूणामय) ले भन्नु भयो कि होइन, यो पनि तेरो भ्रम हो । एउटा वैध (डाक्टर) को औषधीले काम गरेन भने के अर्को वैधसँग औषधी लिनु हुँदैन ? एक पाँच कक्षाको शिक्षक हुन्छ । फेरि एउटा उच्च कक्षाको शिक्षक हुन्छ । अगाडी कक्षामा जानको लागि तलको कक्षा छोड्नु पर्छ । के जिवन भरि पाँचै कक्षामा पढी रहन्छौ ? होइन यसलाई छोड्नु पर्छ । तिमी अब अगाडीको पढाई पढ, म पढाउन आएको हूँ । त्यसरी त रानी मान्नेवाली थिइनन् तर मृत्यु देखिन थाल्यो कि संत भन्दै छ त कहि कुरा नबिग्रीयोस् । यसरी विचार गर ी इन्द्रमतिले भनिन् कि तपाई जसरी भन्नु हुन्छ म त्यसरी नै गर्छु । करूणामय (कबीर) साहबले उपदेश दिनु भयो । भन्नु भयो कि तेस्रो दिन मेरो रूपमा काल आउने छ तिमी उसित नबोल्नु । जुन नाम मैले तिमीलाई दिएको छु दुई मिनट सम्म त्यसको जप गर्नु । दुई मिनट पछि त्यसलाई हेर्नु र त्यसपछि उसलाई सत्कार गर्नु । हुन त गुरूदेव आए पछि अति शिघ्र चरणमा लाग्नु पर्ने हो । मात्र यस पटकको लागि यो मेरो आदेश हो । रानीले भनिन् ठीक छ ।

अब रानीलाई चिन्ता लागेको थियो । श्रद्धा पूर्वक जप गर्दै थिइन् । (कबीर साहेब) करूणामय साहेबको रूप बनाएर गरूदेवरूपमा काल आयो, बोलायो इन्द्रमति, इन्द्रमति । अब इन्द्रमतिलाई त पहिले देखि नै डर थियो । नाम स्मरण गरिन्, काल तिर हेरिनन् । दुई

*मिनटपछि जब हेरिन त कालको स्वरूप बदसिकेको थियो । कालको असली रूप देखिन थाल्यो । करूणामय साहेबको स्वरूप रहेन । जब कालले देख्यो कि आफ्नो स्वरूप बदलियो, तब त्यसले बुझ्यो कि यो सँग कुनै शक्तियुक्त मंत्र छ । काल यो भनेर गयो कि तँलाई फेरि हेर्छु । अहिले त बाँचिस । रानी धेरै खुशी भई । आफ्ना सेविकाहरूलाई भन्न थालिन कि आज मेरो मृत्यु हुने वाला थियो तर मेरो गुरूदेवले मलाई बचाई दिनु भयो । मलाई लिनको लागि काल आएको थियो । राजा कहाँ गएर भनिन् कि आज मेरो मृत्यु हुने वाला थियो तर मेरो गुरूदेवले मलाई बचाउँनु भयो ।मलाई लिनको लागि काल आएको थियो । राजाले भन्यो कि तिमी त्यतिकै ड्रामा गरि रहन्छयौ । काल आएको भए के तँलाई छोडेर जान्थ्यो ? यी संतहरू इस्तै वाहियात कुरा गर्छन् । राजाको कुरा रानी घ कसरी मान्न सक्थि । खुशीमा मग्न भएर रानी आफ्नो कोठामा गई ओछयान्मा पल्टिन । केहि बेर पटि सर्प बनेर काल फेरि आयो र रानीलाई डस्यो । डस्ने बित्तिकै रानीलाई थाहा भयो । रानी कस्सेर कराइन् मलाई साँपले डस्यो । नौकरहरू दगुरेर आए । हेर्दा हेर्दै एउटा मोरी (पानी निस्कने सानो प्वाल) बाट सर्प निस्केर गयो । आफ्नो गुरूदेवलाई गुहार्दै रानी बेहास भइन् । करूणामय (कबीर) साहेब त्यहाँ प्रकट हुनु भयो । मान्छेलाई देखाउनको लागि मंत्र भन्नु भयो । (उहाँ बिना मंत्र नै जीवित गर्न सक्नु हुन्छ । कुनै मंत्रको आवश्यकता पर्दैन) इन्द्रमतिलाई जीवित बनाउनु भयो । रानीले ठूलो गुणगान गरीन् कि हे बन्दी छोड ! यदि आज म तपाईको शरणमा न भएको भए म मर्ने थिएँ । कबीर परमेश्वरले भन्नु भयो कि इन्द्रमति यस काललाई म तेरो घर भित्र पस्न पनि दिन्नथे । तँलाई हमला पनि गर्दैनथ्यो तर तँलाई विश्वास हुँदैन थियो । तिमी यो सोंचमा थियौ कि ममाथि कुनै आपत्ति आउने वाला थिएन । गुरूजीले मलाई बहकाएर (भुल्याएर) नाम दिनु भयो । यसैले तँलाई अलिकति झट्का मात्र दिएको हो, नत्र तँलाई विश्वास हुने थिएन ।*

धर्मदास यहा़ घना अंधेरा, बिन परचय जीव जमका चेरा ।।

*कबीर साहेब (करूणामय) ले भन्नु भयो कि अब म जहिले चाहन्छु तहिले तेरो मृत्यु हुनेछ । गरीबदासजी भन्नु हुन्छ कि :-*

गरीब, काल डरै करतार से, जय जय जय जगदिश ।
जौरा जौरी झाडती, पग रज डारे शीश ।।

*यो काल, कबीर भगवान (कबीर परमेश्वर) देखि डराउँछ र यो मृत्यु (मौत) कबीर साहेबको जुत्ता सफा गर्छ जो नोकर तुल्य छ । जुत्ताबाट झरेको धुलोलाई आफ्नो टाउको मा लगाई भन्छ कि तपाईको भक्त कहाँ म जाने छैन ।*

गरीब, काल जो पीसै पीसना, जौरा है पनिहार ।
ये दो असल मजूर हैं, मेरे साहेब के दरबार ।।

*यो काल जो यहाँका २१ ब्रह्मण्डको भगवान(ब्रह्म) हो तथा जोब्रह्मा, विष्णु, महेशको पिता हो । यो त मेरो कबीर साहेबको आँटा पीस्ने काम गर्छ अर्थात् पक्का नोकर हो र जौरा (मृत्यु) मेरो कबीर परमेश्वरको पनीहारी हो अर्थात् विशेष नोकर्नी हो । यस दुई*

*असल मजदुर मेरो कबीर परमेश्वरको दरबारमा छन् । केहि दिन पछि साहेब फेरि आउनु भयो । रानी इन्द्रमतिलाई सतनाम प्रदान गर्नु भयो ।*

*फेरि केहि समय उपरान्त करूणामय साहेबले रानी इन्द्रमतिको अति श्रद्धा देखेर सारनाम दिनु भयो । शब्दको उपलब्धि गराउनु भयो । कबीर परमेश्वर रानी इन्द्रमतिलाई दर्शन दिन समय समयमा गई रहनु हुन्थ्यो तब इन्द्रमति प्रार्थना गर्दथिइन् कि मेरो पति र ाजालाई पनि सम्झाई दिनुहोस् प्रभु ! उ पनि मानोस् । हजुरको चरणमा आयो भने मेरो जीवन सफल भै जानेछ । कबीर साहेबले चन्द्र विजयसँग प्रार्थना गर्नु भयो कि चन्द्र विजय ! तपाई पनि नाम लिनुस्, यो दुई दिनको राज र ठाँट बाँट हुन् । फेरि चौरासी लाख जुनीमा प्राणीहरू जानेछन् । चन्द्र विजयले भन्यो कि भगवन ! म त नाम लिन्न र तपाईको शिष्यालाई मनाही गर्दिन चाहे उनी पूरै खजानालाई नै दान गरी दिओस् । चाहे कुनै किसिमको सतसंग गराओस् म रोक्तिन । कबीर साहेब (करूणामय) ले सोध्नु भयो कि तपाई नाम किन लिनु हुन्न ? चन्द्र विजयले भन्यो कि मलाई ठूला-ठूला राजा महाराजाको पार्टीमा जानु पर्ने हुन्छ । करूणामय (कबीर साहेब) ले भन्नु भयो कि पार्टीमा जानलाई नामले के बाधा पुऱ्याउँछ ? सभामा जाउ, त्यहाँ काजू खानुस्, दुध पिउँनुस्, शर्वत खानुस्, रक्सी (शर ाब) प्रयोग नगर्नुस् । रक्सी पिउनु महापाप हुन्छ । तर राजाले मानेनन् ।*

*रानीको प्रार्थनामा करूणामय (कबीर) साहेबले राजालाई पुनः संझाउनु भयो कि नाम बिना जीवन त्यसै ब्यर्थ जान्छ । तपाई नाम ली हाल्नुस् । राजाले फेरि भन्यो कि गुरूजी मलाई नामको लागि न भन्नुस् । राजाले फरि भन्यो कि गुरूजी मलाई नामको लागि न भन्नुस् । तपाई की शिष्यालाई म मनाही गर्दिन चाहे उनी जति पनि दान गरोस, सतसंग गराओस् । साहेबले भन्नु भयो कि पुत्री यो दुई दिनको सुख देखेर यसको बुद्धि भ्रष्ट भै सकेको छ । तिमी प्रभुको चरणमा लागि राख, आफ्नो आत्म कल्याण गराउँ । यहाँ कोहि कसैको पत छैन, कोहि पत्नी छैन । पूर्व जन्मको संस्कारले गर्दा दुई दिनको सम्बन्ध बनेको छ । आफ्नो कर्म बनाउँ पुत्री अब इन्द्रमति ८० बर्ष की बुढी भईन्, कहाँ ४० बर्षको उमेर मा मर्नु थियो । जब शरीरहल्लिन थाल्यो तब करूणामय साहेब भन्नु भयो कि अब बोल इन्द्रमति के चाहन्छेस् ? जान चाहन्छेस सतलोक ? इन्द्रमतिले भनिन् कि परमेश्वर म जान तयार छु । पक्का तयार छु दाता करूणामय साहेबले भन्नु भयो कि नाती नातिनीहरूमा केहि माया ममता त छैन? रानीले जवाफ दिइन् बिल्कुलै होइन् मालिक ! तपाईले ज्ञान नै यस्तो निर्मल दिनु भएको छ कि यस्तो मैलो फोहोर युक्त लोकको के इच्छा गर्नु ? कबीर ( करूणामय) परमेश्वरजीले भन्नु भयो कि हिड पुत्री ! रानीले प्राण त्याग गरीन् । परमेश्वर कबीर (करूणामय) बन्दीछोड रानी इन्द्रमतिको आत्मालाई माथि लग्नु भयो । यसै ब्रह्मण्डमा एउटा मानसरोवर छ । त्यस मानसरोवरमा गएर आत्मालाई स्नान गराउनु पर्छ । त्यस प्राणीलाई कबीर परमेश्वर पूरै गुरूको रूपमा प्रकट भएर केहि समय सम्म मानसरोवर माथि राख्नु हुन्छ । परमेश्वर कबीर बन्दी छोडजीले इन्द्रमतिलाई फेरि जन्म दिनु पर्छ । यदि मनमा कुनै इच्छा रह्यो भने सतलोक जान सकिदैन । इन्द्रमतिले भनिन् साहेब हजुर त अर्न्तयामी*

*होइ बक्सिन्छ, मलाई कुनै इच्छा छैन । हजुरको चरणमा बस्ने इच्छा छ । तर मनमा एउटा शंका छ कि मेरो जुन पति थियो, उसले मलाई कुनै पनि धार्मिक कर्मको लागि कहिले पनि रोक्नु भएन । अचेलका पतिहरू आफ्नी पत्नीहरूलाई बाधा दिन्छन्, रोक्छन् । यदि उनले मलाई रोकेको भए म हजुरको शरणमा लाग्न सक्ने नै थिइन । मेरो कल्याण हुने थिएन । यस शुभ कर्ममा सहयोगको लागि उनले केहि लाभ पाउनु पर्ने हो भने कहिले उनी माथि पनि दया गर्नु होला दाता । परमेश्वर कबीरजीले सोच्नु भयो कि यो नादान उसको पछाडी फेरि लागिन । साहेबले भन्नु भयो कि ठीक छ पुत्री, अब दुई चार वर्ष यहाँ नै बस्नु ।*

*दुई वर्ष पछि राजा पनि मर्न लाग्यो । किन कि नाम लिएको थिएन । यमको दूतहरू आए । राजा चक्कर खाएर चोकमा लड्यो । यमका दूतहरूले उसको घाँटी दबाए । राजाको दिशा पिसाब निस्कियो । करूणामय (कबीर) साहेबले रानीलाई भन्नु भयो कि हेर तेरो राजालाई के हालत भै रहेको छ । त्यहाँ मानसरोवरबाट परमेश्वर कबीरजीले देखाउनु भयो । त्यो सब देखेर रानी ले भनिन् कि हे दाता यदि उसको भक्तिमा सहयोगको केहि फल बन्छ भने दया गर्नुहोस् । राजा प्रति रानीमा अलिकति ममता बाँकी नै थियो । साहेब कबीर (करूणमय) ले विचार गर्नु भयो कि यो फेरि कालको जालमा फस्ने छे । यो सोचेर मानसरोवरबाट त्यहाँ जानु भयो जहाँ राजा चन्द्र विजय आफ्नो महलमा अचेत अवस्थामा थियो । यमदूत उसको प्राणलाई निकाल्दै थिए । कबीर साहेब आउने बित्तिकै यमदूतहरू यसरी आकाशमा उडे जसरी मरेको सिनोबाट गिद्ध उडेर जान्छन् । चन्द्र विजय होशमा आयो । सामुन्ने करूणामय साहेब उभि रहनु भएको थियो । मात्र चन्द्र विजयलाई देखिन्थ्यो, अरुकसैलाई देखिदैनथ्यो। चन्द्र विजय चरणमा झुकेर गुहार्न थाल्यो कि मलाई क्षमा गरि दिनुहोस् दाता, मेरो ज्यान बचाउनु होस् । किन कि अब उसले देख्यो कि तेरो ज्यान जाने वाला छ। (जब यस जीवको आँखा खुल्छ कि यो त कुरा बिग्रियो) मलाई क्षमा गरि दिनुस दाता, मेरो ज्यान बचाउनुस् मालिक । कबीर साहेबले भन्नु भयो कि आज पनि त्यहि कुरा छ, त्यस दिन पनि त्यहि कुरा थियो, नाम लिनु पर्छ । राजाले भन्यो म नाम लिन्छु, अहिले नै लिन्छु नाम । कबीर साहेबले नाम उपदेश दिनु भयो र भन्नु भयो कि अब म तिमीलाई दुई वर्षको आयु दिन्छु । यदि यसमा एक स्वांस पनि खाली गयो भने फेरि कर्मदण्ड भोग्नु पर्ने छ ।*

कबीर, जीवन तो थोडा भला, जै सत सुमरण हो । लाख वर्ष का जीवना, लेखे धरे ना को ।।

*शुभ कर्ममा सहयोग गरेको अघिल्लो कर्म र श्रद्धा युक्त दुई वर्षको स्मरणले साथै तीनै नाम प्रदान गरी कबीर साहेब चन्द्र विजयलाई पनि पार लग्नु भयो । भन (कबीर पर मेश्वर) कविर्देव की जय "जय बन्दी छोड ।"*

*परमेश्वर कबीरजी सच्चा श्रद्धालुको आयु बढाई दिनु हुन्छ र उसको परिवारको पनि पनि रक्षा गर्नु हुन्छ । उपरोक्त विवरणबाट सिद्ध भयो । यो प्रमाण धेरै पहिलेको छ । वर्तमानमा साधारण व्यक्ति विश्वास गर्दैन । वर्तमानमा पूज्य कबीर परमेश्वरको शक्तिले*

*सतगुरु रामपालजीद्धारा भएको कष्ट निवारण र आयु वृद्धिको अनेकानेक प्रमाणहरू पढनु होस् यसै पुस्तकमा "विचल्लीमा परेकालाई सही बाटो" नामक लेखमा ।*

## "कबीर साहेब (कविर्देव) को कलियुगमा प्रकट हुनुभयो"

*विक्रम सम्वत १४५५ (सन् १३९८, जेष्ठ पूर्णिमा बिहानै बिहान ब्रह्म मुहुर्तमा त्यो पूर्णपरमेश्वर कबीर (कविर्देव) जी स्वयं आफ्नो मूलस्थान सतलोकबाट आउनु भयो । काशीमा लहरतारा तलाउमा कमलको फूल माथि एउटा बालकको रूप धारण गर्नु भयो । पहिला म तपाईलाई नीरू-नीमाको बारेमा बताउन चाहन्छु कि यिनीहरू को थिए ? द्वापर युगमा नीरू-नीमा सुपच सुदर्शनका माता-पिता थिए । यिनीहरूले कबीर साहेबको कुरा त्यस बेला स्वीकार गरेका थिएनन् । अंतमा सुदर्शनले करूणामय रूपमा आएका कबीर साहेबसँग प्रार्थना गरेका थिए कि। हे परमात्मा हजुरले मलाई उपदेश दिनु भयो भने सबै कुरा दिएको ठान्नेछु । हजुरसँग आजसम्म केहि कुरा माग्ने आवश्यकता नै भएन किन कि हजुरले मेर । सबै मनोकामना पूरा गरिदिनु भयो तथा जो वास्तविक भक्ति धन छ त्यसले पनि भरिपूर्ण गरिदिनु भयो । दासको एउटा प्रार्थना छ यदि उचित भए स्वीकार गरिदिनु होला । मेरो माता-पिता यदि कुनै जन्ममा कहिले मानिस शरीर धारण गरे भने उनलाई सम्हाल्नु होला प्रभु । यीनीहरू धेरै पुण्यात्मा हुन्, तर आज यिनीहरूको बुद्धि विपरित हुन गएको छ । यिनीहरू परमात्माको वाणीलाई मानी रहेका छैनन् । कबीर साहेबले भन्नु भयो कि तिमी चिन्ता नगर अब तिमी आफ्नो माता-पिताको चक्करमा यहाँ अलमलिने छौ । आउन देउ समय यनिलाई पनि सम्हाल्ने छु । काल जालबाट पार गर्ने छु । तँ निश्चिंत भएर सतलोक जा । सुदर्शनजी सतलोक जानु भयो ।*

*सुदर्शनका माता-पिताको कलियुगमा नीरू-नीमाको जन्म भन्दा अगाडी पनि ब्रह्मण घरमा दुई जन्म भयो, त्यस बेला पनि निःसंतान नै रहे । फेरि तेस्रो मनुष्य जन्म काशीमा भयो । त्यस बेला पनि उनहिरू ब्रह्मण र ब्रह्मणी (गौरी शंकर र सरस्वतीको नामबाट) थिए । संतान फेरि पनि थिएन ।*

*नीरू तथा नीमा दुवै गौरी शंकर र सरस्वती नामका ब्रह्मण जातिका थिए । यिनीहरू भगवान शिवका उपासक थिए । भगवान शिवको महिमा शिव पुराणबाट निस्वार्थ रूपमा भक्तात्माहरूलाई सुनाउने गर्थे । कसैबाट पैसा लिदैंन थिए । यति पवित्र आत्मा थिए कि यदि कोही उनलाई आफू खुशी दक्षिणा दिएर जान्थे भने त्यसबाट आफ्नो भोजन योग्य राख्तथे अरू जो बाँकी बचेमा त्यसलाई भण्डारामा खर्च गरी दिन्थे ।*

*अन्य स्वार्थी ब्रह्मण गौरी शंकर तथा सरस्वती देखि इर्ष्या गर्थे किन कि गौरी शंकर निस्वार्थ कथा वाचन गर्ने गर्थे । पैसाको लालचमा भक्तहरूलाई भुक्याउँदैनन् थिए जसले गर्दा प्रशंसाका पात्र बनेका थिए । उता मुस्लमानहरूलाई थाहा भयो कि यिनीहरूसँग कुनै हिन्दु ब्रह्मण छैनन् । तिनीहरूले यस्को फाइदा उठाए र बलपूर्वक उनलाई मुस्लमान बनाई*

*दिए । मुस्लमानहरूले आफ्नो पानी उनको पूरै घरमा छर्किदिए तथा उनीहरूको मुखमा पनि हालि दिए, सबै कपडाहरूमा पनि छर्की दिए । त्यसले हिन्दु ब्रह्मणहरूले भने कि अब यीनीहरू मुस्लमान बनी सकेका छन् , आज देखि यी सँग हाम्रो कुनै भाई चाराको नाता र हने छैन ।*

## "नीरू-नीमालाई जुलाहाको उपाधी तथा परमेश्वर प्राप्ति"

*बिचरा गौरी शंकर र सरस्वती विवश भए । मुस्लमानहरूले पुरूषको नाम नीरू र स्त्रीको नाम नीमा राखी दिए । पहिले उनलाई जुन पूजाको भेंटी आउथ्यो त्यसबाट उनीहरूको गुजारा हुन्थ्यो र बाँकी रहेको रूपैया पैसाबाट धर्म-भण्डारा गर्थे, दरूपयोग गर्दैनन्थे । पूजा आउन पनि बन्द भयो । उनीहरूले सोचे अब के काम गर्ने ? उनीहरूले एउटा कपडा बुन्ने खड्डी लगाएर जुलाहाको काम गर्न थाले । कपडा बुनेर निर्बाह गर्न थाले । कपडाको बुनाईबाट घर खर्च र बचेको पैसा भण्डारामा लगाई दिन्थे । हिन्दु ब्रह्मणहरूले नीरू-नीमालाई गंगा घाटमा गंगा नदीमा स्नान गर्न बन्द गरी दिए । भन्थे कि अब तिमीहरू मुस्लमान हौ ।*

*गंगा नदी कै पानी लहरद्वारा छ-छल्किएर काशीमा एउटा लहरतारा नामक धेरै ठूलो सरोवर भरि रहन्थ्यो । धेरै निर्मल जल भरी रहन्थ्यो । त्यसमा कमलका फूलहरू फूलेका थिए । सन् १३९८ (विक्रमी सम्वत १४५५) ज्येष्ठ मास शुद्धि पूर्णमासीको ब्रह्ममूहूर्त (सूर्योदय भन्दा झण्डै डेढ घण्टा पूर्व) मा आफ्नो सतलोक (ऋतधाम) बाट सशरीर आएर परमेश्वर कबीर (कविर्देव) बालक रूप बनाएर लहर तारा तालाबमा कमल फूल माथि विराजमान हुनु भयो । त्यसै लहर तारा तालाबमा नीरू-नीमा एका विहानै ब्रह्ममूहूर्तमा स्नानको लागि प्रति दिन जाने गर्दथे । ब्रह्ममूहूर्तको बेला एउटा धेरै तेजपुंजको चम्किलो गोला (बालक रूपमा पर मेश्वर कबीर साहेबजी तेजोमय शरीर युक्त आउनु भएको थियो, टाढा भएको कारणले प्रकाश पुंज अर्थात् प्रकाशको गोला नै देखिन्थ्यो) माथिबाट (सत्यलोक बाट) आयो र एउटा कमलको फूलमा समेटियो जसले गर्दा सम्पूर्ण लहरतारा तालाब झलमल्ल हुन गएको थियो । फेरि एउटा कुनामा गएर त्यो अदृश्य भयो । यस दृश्यलाई स्वामी रामानन्दजीको एउटा शिष्य ऋषि अष्टानन्दजी आफ्नै आँखाले हेरि रहेका थिए । अष्टानन्दजी पनि स्नानका लागि एकान्त स्थानमा त्यसै लहर तारा तालाबमा प्रति दिन जाने गर्थे । त्यहाँ बसेर गुरूदेवजीले जुन मंत्र दिनु भएको थियो त्यसको जप गर्ने गर्थे । त्यहाँ एकान्तमा आफ्नो साधना पनि हुन्थ्यो र प्रवृतिको आनन्द पनि लिन्थे । स्वामी अष्टानन्दजीले जब देख्यो कि यति तेज प्रकाश जसले आँखा पनि तिरमिराउने भयो अनि सोच्न थाले कि यो मेरो भक्तिको कुनै उपलब्धि छ कि मेरो धोखा छ ? यो सोचेर यसको कारण सोध्नलाई आफ्नो गुरूदेव*

कहाँ गए ।

आदरणीय रामानन्दजीसँग अष्टानन्दजीले सोध्नु भयो कि हे गुरूदेव ! मैले आज यस्तो रोशनी देखेको छु कि जिन्दगीमा कहिले पनि देखेको थिईन । सबै वृतान्त बताए कि आकाशबाट एउटा प्रकाश पुंज आई रहेको थियो । त्यस रोशनीलाई मेरो आँखाले सहन गर्न सकेन र मेरो आँखा बन्द भयो । बन्द आँखामा एउटा शिशु (बालक) रूप देखियो(जसरी सूर्यलाई हेरे पछि सूर्यको एउटा गोला जस्तो नै देखिन्छ, यसरी बालक देखिन लाग्यो) । के यो मेरो भक्तिको कुनै उपलब्धि थियो अथवा मेरो दृष्टि दोष थियो ? स्वामी रामानन्दजीले भन्नु भयो कि हे पुत्र ! यस्तो लक्षण तब हुन्छ जब माथिल्लो लोकबाट कुनै अवतारगण आँउछन् । उनी कसैको मा प्रकट होलान्, कसै माता (आमा) जीको जन्म लिन्छन् अनि फेरि लीला गर्छन् । (किन कि यी ऋषिहरूलाई यति मात्र थाहा छ कि मात्र आमाबाट जन्म हुन्छ ।) जति ऋषिलाई ज्ञान थियो आफ्नो शिष्यको शंका समाधान गरि दिनु भयो ।

नीरू-नीमा प्रतिदिन झैं त्यस दिन पनि स्नान गर्न गइरहेका थिए । बाटोमा नीमाले प्रभुसँग प्रार्थना गर्दै थिइन् कि हे भगवान शिव (किन उनीहरू यद्यपि मुस्लमान भै सके पनि आफ्नो त्यो साधना हृदय देखि बिर्सन (छोड्न) सकेका थिएनन जो बर्षौ देखि गरि रहेका थिए ।) के हजुरको घरमा हाम्रो लागि एउटा बच्चा (बालक) को पनि कमी हुन गयो ? हामीलाई एउटा लाल (बालक) दिनु भए, हाम्रो जीवन पनि सफल हुन्थ्यो । यस्तो भनेर भक्कानो छोडी रून लागिन । उसको पति नीरूले भन्यो कि नीमा प्रभुको इच्छामा प्रसन्न रहनु मै हित हुनेछ । यदि यसरी रोई रहिस भने तेरो शरीर कमजोर हुन जानेछ, आँखाले देखिन बन्द हुन जानेछ । हाम्रो भागमा संतान छैन । यस्तै भन्दै भन्दै लहर तारा तालाबमा पुगे । अलि अलि अँध्यारो थियो । नीमा स्नान गरी बाहिर आइन् । आफ्नो लुगा फेरिन् । नीरू स्नान गर्नका लागि तालाबमा प्रवेश गरी डुबुल्की मार मारी नुहाउन थाल्यो । नीमा जब नुहाउँदा लगाएका कपडा धुनको लागि फेरि तालाबको किनारामा गई, तब सम्ममा अँध्यार ो हटिसकेको थियो । सूर्य उदय हुने वाला नै थियो । नीमाले तालाबमा देखिन् कि सामुन्ने कमलको फूल माथि कुनै वस्तु हल्लिदै छ । कबीर साहेबले बालक रूपमा एउटा खुट्टाको औंला मुखमा राखेर अर्को खुट्टा हल्लाई राख्नु भएको थियो । पहिले त नीमाले सोचिन् कि शायद कुनै सर्प त होइन जो मेरो पति तिर आइ रहेको छ । फेरि ध्यान लगाएर हेर्दा बुझि हालिन् कि कुनै बच्चा (बालक) हो भनेर । बालक कमलको फूल माथि । तुरून्तै आफ्नो पतिलाई बोलाई कि हेर्नुस हैं बच्चा डूब्ला, बच्चा डूब्ला । नीरूले भन्यो नादान बच्चाको चक्करमा पागल भै सकेकी छेस, तलाई पानीमा पनि बच्चा देखिन्छ । नीमाले भनि हो, त्यो सामुन्ने कमलको फूल माथि हेर्नुस् । नीमाको जोडदार आवजले प्रभावित भएर जता तिर हातले संकेत गरी रहेकी थी नीरूले त्यता हेऱ्यो, एउटा कमलको फूलमाथि नवजात शिशु सुतिरहेको थियो । नीरू त्यो बच्चालाई फूल समेत उठाएर ल्यायो र नीमालाई दियो । स्वयं स्नान गर्न थाल्यो । नीरू स्नान गरी बाहिर आयो, नीमा बालक रूपमा आएको परमेश्वरलाई अति नै माया गरि रहेकी थी तथा शिव प्रभुको प्रशंसा तथा स्तुति गर्दै थिइन् कि हे प्रभु !

*तपाइले मेरो वर्षौंको मनोकामना पूर्ण गरि दिनु भयो ।(किन कि नीमा शिव की पुजारिन थिइन ।) भन्दै थिइन् कि हे शिव प्रभु आजै मैले हृदय देखि पुकार गरेकी थिएँ र आजै सुन्नु पनि भयो ।*

*त्यस कबीर परमेश्वरलाई जसको नाम लिनाले हाम्रो हृदयमा एक विशेष हलचल जस्तै हुन्छ, उसको प्रेममा रोम-रोम खडिन्छ, आत्मा भरिएर आउँछ र जुन आमा-बहिनीले छातीमा लगाएर पुत्रवत माया गरिन जो आनन्द त्यस माईलाई भएको होला । त्यो अवर्णनीय छ । जस्तै व्यक्ति गुड खाएर अरूलाई त्यसको आनन्दलाई भन्न सक्तैन खाने वाला नै जान्न सक्तछ । जसरी आमा माया गर्छिन् यस्तो शिशु रूपधारी परमेश्वरलाई घर ी मुखमा म्वाई (चुम्मा), घरी छातीमा लगाउने फेरि पटक पटक उसको मुखमा हेरिरहन्छे । यतिकैमा नीरू स्नान गरेर बाहिर आयो । (किन कि मनुष्य समाज तिर बढी ध्यान दिन्छ) उसले विचार गऱ्यो कि न त अहिले मुस्लमानसँग हाम्रो स्नेह (माया) बनेको छ र हिन्दू ब्रह्मण हामीसँग द्वेष गर्छन् । पहिले यसै अवसरको फाइदा मुस्लमानहरूले उठाए कि हामीलाई मुस्लमान बनाई दिए । हाम्रो कुनै साथी छैन । यदि हामी यस बालकलाई लग्छौ भने मानिसहरूले सोध्लान् कि यस बालकको माता-पिता को हुन ? भन । तिमीले कसको बच्चा उठाएर ल्याएको हो । यसको आमा रोई रहेकी होली । हामी के जवाब दिने, कसरी भन्ने ? कमलको फूलमा भन्यौ भने कसैले मान्दैनन् । यहि सब विचार गरेर नीरूले भन्यो कि नीमा यो बच्चालाई यहीं छोडि दिनु । नीमाले भनिन कि यस बालकलाई म छोड्न् सक्तिन । मेरो प्राण जान सक्छ, म तडपेर मर्ने छु । थाहा छैन कि यस बालकले म माथि कस्तो जादु गर ेको छ ? म यस बालकलाई छोड्न सक्तिन । नीरूले नीमालाई सबै कुरा संझायो कि हामीसँग यस्तो हुन सक्छ । नीमाले भनिन् कि यस बालकको लागि म देश निकाला पनि लिन सक्छु तर म यसलाई छोड्दिन । नीरूले उसको नादानी देखेर सोच्यो कि यो त पागल भै सकेकी छे, समाजलाई पनि देख्तिन । नीरूले नीमालाई भन्यो कि हेर ! मैले आज सम्म तेरो कुराको अवहेलना गरेको छैन किन कि हामीसँग संतान छैनन् । जे तँ भनि रहन्थिस् मैले स्वीकार गरि रहे । तर आज म तेरो यो कुरा मान्दिन । या त यस बालकलाई यहीं छोडि देउ, या त अहिले दूइ थप्पड लगाउँछु । त्यस महापुरूषले पहिलो पल्ट आफ्नी पत्नी तर्फ हाथ उठाएको थियो । त्यही समय शिशु रूपमा कबीर परमेश्वर (कविर्देव) ले भन्नु भयो कि नीरू मलाई घर लिएर हिड । तलाई कुनै आपत्ति आउँने छैन् । बालक रूपमा परमेश्वर को वचन सुनेर नीरू डरायो कि कहीं यो बालक कुनै देवता हो अथवा कुनै सिद्ध पुरूष हो र त माथि नै कुनै आपत्ति न आई लागोस । चुपचाप बालकलाई लिएर हिड्यो ।*

*जब बच्चलाई लिएर घर आए सबैले यो सोध्न त बिर्सिहाले कि कहाँबाट ल्याएका हौ ? काशीका स्त्री र पुरूष बालकलाई हेर्न आए र भन्न थाले कि यो त कुनै देउतै देखिन्छ । यति राम्रो, सुन्दर शरीर, यस्तो तेजोमय बालक हामीले कहिले पनि देखेनौं । कोहि भन्थे कि यो त ब्रह्मा, विष्णु, महेश मध्येबाट कुनै प्रभु हुन् । ब्रह्मा-विष्णु-महेश भन्छन् कि यो माथिल्लो लोकबाट आएको कुनै शक्ति हो । यस्तै सबै आ-आफ्ना टिप्पणी गर्दै थिए ।*

गरीब, चौरासी बंधन काटन, कीनी कलप कबीर । भवन चतुरदश लोक सब, टूटैं जम जंजीर ।।३७६।।
गरीब, अनंत कोटि ब्रह्मांड में, बंदी छोड कहाय । सो तौ एक कबीर हैं, जननी जन्या न माय ।।३७७।।
गरीब, शब्द स्वरूप साहिब धनी, शब्द सिंध सब माहि । बाहर भीतर रमि रह्या, जहा तहां सब ठांहि ।।३७८।।
गरीब, जल थल पृथ्वी गगन में, बाहर भीतर एक । पूरणब्रह्म कबीर है, अविगत पुरूष अलेख ।।३७९।।
गरीब, सेवक होय करि ऊतरे, इस पृथ्वी के माहि । जीव उधारन जगतगुरू, बार बार बलि जांहि ।।३८०।।
गरीब, काशीपुरी कस्त किया, उतरे अधर अधार । मोमन कूं मुजरा हुवा, जंगल में दीदार ।।३८१।।
गरीब, कोटि किरण शशि भान सुधि, आसन अधर बिमान । परसत पूरणब्रह्म कूं, शीतल पिंडरू प्राण ।।३८२।।
गरीब, गोद लिया मुख चूंबि करि, हेम रूप झलकंत । जगर मगर काया करै, दमकैं पदम अनंत ।।३८३।।
गरीब, काशी उमटी गुल भया, मोमन का घर घेर । कोई कहै ब्रह्मा विष्णु हैं, कोई कहै इन्द्र कुबेर ।।३८४।।
गरीब, कोई कहै छल ईश्वर नही, कोई किंनर कहलाय । कोई कहै गण ईश का, ज्यूं ज्यूं मात रिसाय ।।३८८।।
गरीब, कोई कहै वरूण धर्मराय है, कोई कहते ईश । सोलह कला सुभांन गति, कोई कहै जगदिश ।।३८५।।
गरीब, भक्ति मुक्ति ले ऊतरे, मेटन तीनूं ताप । मोमन के डेरा लिया, कहै कबीरा बाप ।।३८६।।
गरीब, दूध न पीवै न अन्न भखै, नही पलने झूलंत । अधर अमान धियान में, कमल कला फूलंत ।।३८७।।
गरीब, काशी में अचरज भया, गई जगत की नींद । ऐसे दुल्हे ऊतरे, ज्यूं कन्या वर बींद ।।३८९।।
गरीब, खलक मुलक देखन गया, राजा प्रजा रीत । जंबूदीप जिहाान में, उतरे शब्द अतीत ।।३९०।।
गरीब, दनी कहै योह देव है, देव कहत है ईश । ईश कहै पारब्रह्म हैं, पूरण बीसवे बीस ।।३९०।।

*परमेश्वर कबीर नै अनादि परम गुरू हुन् । उहाँ नै रुपान्तर गरी सन्त वा ऋषि वेशमा समय समयमा (स्वयंभू) स्वयं प्रकट भै रहनु हुन्छ । कालका दूतहरू (संतहरू) द्वारा बिगाडिएको तत्त्व ज्ञानलाई स्वस्थ बनाउनु हुन्छ । कबीर साहेबले नै ब्रह्मा-विष्णु-शिव आदि देउताहरू, ऋषि, मुनि व संतहरूलाई समय समयमा आफ्नो सतलोकबाट आएर नाम उपदेश दिनु भयो । आदरणीय गरीब दासजी साहेबले आफ्नो वाणीमा लेख्नु भएको छ जो कबीरजीले स्वयं बताउनु भएको छ :-*

आदि अंत हमरा नहीं, मध्य मिलावा मूल । ब्रह्मा ज्ञान सुनाईया, धर पिंडा अस्थूल ।।
श्वेत भूमिका हम गए, जहा विश्वम्भरनाथ । हरियम हीरा नाम दे, अष्ट कमल दल स्वांति ।।
हम बैरागी ब्रह्म पद, सन्यासी महादेव । सोहं मंत्र दिया शंकर कूं, करत हमारी सेव ।।
हम सुल्तानी नानक तारे, दादू कूं उपदेश दिया । जाति जुलाहा भेद न पाया, कांशी माहे कबीर हुआ ।।

सतयुग में सतसुकृत कह टेरा, त्रेता नाम मुनिन्द्र मेरा ।
द्वापर में करूणामय कहलाया, कलियुग में नाम कबीर धराया ।।
चारों युगों मे हम पुकारैं, कूक कहैं हम हेल रे ।
हीरे मानिक मोति बरसें, ये जग चुगता ढेल रे ।।

*उपरोक्त वाणीद्वारा सिद्ध भयो कि कबीर परमेश्वर नै अविनाशी परमात्मा हुनुहुन्छ । उहाँ ने अजर अमर हुनुहुन्छ । यही परमात्मा चारै युगहरूमा स्वयं अतिथी रूपमा केहि समयको लागि यस संसारमा आएर आफ्नो सतभक्ति मार्ग (बाटो) देखाई दिनु हुन्छ ।*

# पूर्णसंतको चिन्हारी (पहिचान)

## (पवित्र सद्ग्रन्थहरूबाट पूर्णसंतको चिन्हारी (पहिचान)

वेदहरू, गीताजी आदि पवित्र सद्ग्न्थहरूमा प्रमाण भेटिन्छ कि जब-जब धर्मको हानी हुन्छ र अधर्मको वृद्धि हुन्छ तथा वर्तमानका नकली संत, महंत व गुरूहरूद्धारा भक्ति मार्गलाई बिगारिएको हुन्छ त्यस बेला परमेश्वर स्वयं आएर वा आफ्नो परमज्ञानी संतलाई पठाएर सत्य ज्ञानद्धारा धर्मको पुनः स्थापना गर्नु हुन्छ । उनी भक्ति मार्गलाई शास्त्र अनुसार संझाउनु हुन्छ । उसको पहिचान हुन्छ कि वर्तमानका धर्मगुरूहरू उसको विरोधमा उँभिएर राजा प्रजा सबैलाई झुक्याई उनी माथि अत्याचार गराउँछन् । कबीर साहेब आफ्नो वाणीमा भन्नु हुन्छ कि :-

जो मम संत सत उपदेश दृढावै (बतावै), वाके संग सभि राड बढावै ।
या सब संत महंतन की करणी, धर्मदास मै तो से वर्णी ।।

*कबीर साहेब आफ्नो प्रिय शिष्य धर्मदासलाई यस वाणीमा सम्झाउदै हुनु हुन्छ कि जो मेरो संत सत भक्ति मार्ग बताउनेछन् उनीसँग सबै संत, महंथहरू झगडा गर्ने छन् । यो उनको चिन्हारी (पहिचान) हुनेछ ।*

*दोस्रो चिन्हारी (पहिचान) त्यो संत सबै धर्म ग्रंथहरूको पूर्णजानकार हुनेछ । प्रमाण सतगुरु गरीबदासजीको वाणीमा -*

'सतगुरु के लक्षण कहूं, मधूरे बैन विनोद । चा वेद षट शास्त्र, कहै अठारा बोध ।।'

*सतगुरू गरीबदासजी महाराज आफ्नो वाणीमा पूर्णसंतको पहिचान गराउँदै हुनु हुन्छ कि उनी चारै वेद, छः शास्त्र, अठारक पुराण आदि सबै ग्रंथहरूको पूर्णजानकार हुनेछ अर्थात् तिनका सार निकालेर बताउनेछ । यजुर्वेद अध्याय १९ मंत्र २५, २६ मा लेखिएको छ कि वेदहरूको अधूरो वाक्य अर्थात् साङ्केतिक शब्दहरू र एक चौथाई श्लोकहरूलाई पुर ा गरेर विस्तारसँग बताउनेछ व तीन समयको पूजा बताउनेछ । बिहान पूर्णपरमात्माको पूजा, दिउँसो (मध्यान्ह) मा विश्वका देवताहरूको सत्कार र संध्या (साँझ) आरती अलग्गै बताउने छ त्यो जगत कै उपकारक संत हुनेछ ।*

*इजुर्वेद अध्याय १९ मन्त्र २५*

सन्धिछेदः- अर्द्ध ऋचैः उक्थानाम् रूपम् पदैः आप्नोति निविदः ।
प्रणवैः शस्त्राणाम् रूपम् पयसा सोमः आप्यते । (२५)

अनुवादः- जो सन्त (अर्द्ध ऋचैः) वेदहरूको अर्ध वाक्यहरू अर्थात् साङ्केतिक शब्दहरूलाई पूर्ण गरी (निविदः) आपूर्ति गर्दछ (पदैः) श्लोकको चौथो भागहरूलाई अर्थात् आंशिक वाक्यहरूलाई (उक्थानम्) स्तोत्रहरूको (रूपम्) रूपमा (आप्नोति) प्राप्त गर्दछ अर्थात् आंशिक विवरणलाई पूर्णरूपले संझिन्छ र संझाउछ(शास्त्राणाम्) जसरी शस्त्रहरू चलाउन जान्ने व्यक्ति त्यसलाई (रूपम्) पूर्णरूपले प्रयोग गर्छ त्यसरी नै पूर्णसन्त (प्रणवैः)

**औंकारहरू अर्थात् ओम्-तत्-सत् मन्त्रहरूलाई पूर्णरूपले बुझेर र सम्झाएर (पयसा) दूध-पानी छुट्याउँछ अर्थात् पानी रहित दूध जस्तो तत्त्व ज्ञान प्रदान गर्छ जसले (सोमः) अमर पुरूष अर्थात् अविनाशी परमात्मालाई (प्राप्त) गर्छ, त्यो पूर्णसंत वेदलाई जान्नेवाला भनिन्छ ।**

***तत्त्वदर्शी सन्त त्यो हुन्छ जो वेदहरूको साङ्केतिक श्ब्दहरूलाई पूर्णविस्तारसँग वर्णन गर्छ जसबाट पूर्णपरमात्माको प्राप्ति हुन्छ । त्यसलाई वेदको जानकारवाला भनिन्छ ।***

**यजुर्वेद अध्याय १९ मन्त्र २६**

सन्धिछेदः- अश्विभ्याम् प्रातः सवनम् इन्द्रेण ऐन्द्रम् माध्यन्दिनम्

वैश्वदैवम् सरस्वत्या तृतीयम् आप्तम् सवनम् (२६)

अनुवादः- त्यो पूर्णसन्त तीन समयको साधना बताउछ । (अश्विभ्याम्) सूर्यको उदय-अस्तले बनेको एक दिनको आधारले (इन्द्रेण) प्रथम श्रेष्ठताले सर्व देवहरूका मालिक पूर्णपरमात्माको (प्राप्तः सवनम्) पूजा त प्राप्तःकाल गर्नलाई भन्छ जो (एन्द्रम्) पूर्णपरमात्माको लागि हुन्छ । दोस्रो (माध्यन्दिनम्) दिनको मध्य कालमा गर्नलाई भन्छ जो (वैश्वदैवम्) सबै देवताहरूको सत्कारसाग सम्बन्धित (सरस्वत्या) अमृतवाणीद्वारा साधना गर्नलाई भन्छ र (तृतियम्) तेस्रो (सवनम्) पूजा साझमा (आप्तम्) प्राप्त गर्छ अर्थात् जो तीनै समयको साधना अलग अलग गर्नलाई भन्छ त्यो जगतको उपकारी संत हो ।

***भावार्थः- जुन पूर्णसन्तको विषयमा मन्त्र २५ मा भनिएको छ त्यो दिनमा ती पटक( प्रातः दिनको मध्य-तथा साँझमा) साधना गनृलाई भन्छ । (बिहान त पूर्णपरमात्माको पूजा, मध्यान्हको सबै देवताहरूको सत्कारको लागि तथा साँझमा संध्या आरती आदिलाई अमृतवाणीद्वारा गर्नलाई भन्छ त्यो सम्पूर्ण संसारको उपकार गर्ने वाला हुन्छ ।***

**यजुर्वेद अध्याय १९ मन्त्र ३०**

सन्धिछेदः- व्रतेन दीक्षाम् आप्नोति दीक्षया आप्नोति दक्षिणाम् ।

दक्षिणा श्रद्धाम् आप्नोति श्रद्धया सत्यम् आप्यते (३०)

अनुवाद :- (व्रतेन) दुर्व्यसनहरूको व्रत राख्नाले अर्थात् भांग, शराब (रक्सी), मांस (मासु) तथा तम्बाखु (सुर्ती) आदिको सेवनबाट संयम राख्ने साधक (दीक्षाम्) पूर्णसंतबाट दीक्षा (आप्नोति) प्राप्त गर्छ अर्थात् त्यो पूर्णसंतको शिष्य बन्छ (दीक्षया) पूर्णसंत दीक्षित शिष्यबाट (अक्षिणाम्) दानको (आप्नोति) प्राप्त हुन्छ अर्थात् संत त्यसैबाट दक्षिणा लिन्छ जो उनीसँग नाम उपदेश लिन्छ । यसरी विधिवत् ( दक्षिणा) गुरूदेवद्वारा बताइए अनुसार जो दान-दक्षिणाबाट धर्म गर्छ त्यसबाट (श्रद्धाम्) श्रद्धालाई प्राप्त हुन्छ (श्रद्धया) श्रद्धासाग भक्ति गर्नाले (सत्यम्) सदा रही रह्ने सुख व परमात्मा अर्थात् अविनाशी पर मात्मालाई (आप्यते) प्राप्त हुन्छ ।

***भावार्थ :- पूर्णसन्त त्यही ब्यक्तिलाई शिष्य बनाउँछ जो सदाचारी हुन्छ । अभक्षय पदार्थहरूको सेवन र नशीलो वस्तुहरूको सेवन न गर्ने आश्वासन दिन्छन् । पूर्णसन्त उनैबाट दान ग्रहण गर्नु हुन्छ जो उसको शिष्य बन्छ । फेरि गुरूदेवबाट दीक्षा प्राप्त गरी दान दक्षिणा गर्छ त्यसले श्रद्वा बढ्छ । श्रद्वासँग सत्य भक्ति गर्नाले अविनाशी परमात्मा प्राप्त हुन्छ अर्थात् पूर्णमोक्ष हुन्छ । पूर्णसंत भिक्षा वा चंदा माग्दै हिडदैन् ।***

कबीर, गुरू बिन माला फेरते गुरू बिन देते दान ।

गुरू बिन दोनों निष्फल है पूछो वेद पुराण ।।

*तेस्रो चिन्हारी (पहिचान) तीन प्रकारको मंत्र (नाम) लाई तीन पटकमा उपदेश गर्छ जसको वर्णन कबीर ुगर ग्रंथ पृष्ठ नं. २६५ बोध सागरमा पाइन्छ र गीताजी अध्याय १७ श्लोक २३ तथा सामवेद संख्या नं. ८२२ मा पाइन्छ । कबीर सागरमा अमर मूल बोध सागर पृष्ठ नं. २६५ -*

तब कबीर अस केवे लीन्हा, ज्ञानभेद सकल कह दीन्हा ।।
धर्मदास मैं कहो बिचारी, जिहिते निबहै सब संसारी ।।
प्रथमहि शिष्य होय जो आई, ता कहैं पान देहु तुम भाई ।।१।।
जब देखहु तुम दृढता ज्ञाना, ता कहैं कहु शब्द प्रवाना ।।२।।
शब्द मांहि जब निश्चय आवै, ता कहैं ज्ञान अगाध सुनावै ।।३।।

*दोस्रो पटक फेरि सम्भायो*

बालक सम जाकर है ज्ञाना । तासों कहहू वचन प्रवाना ।।१।।
जा को सूक्ष्म ज्ञान है भाई । ता को स्मरन देहु लखाई ।।२।।
ज को होए दिव्य ज्ञान परवेशा, ताको कहे तत्त्व ज्ञान उपदेशा ।।४।।

*उपरोक्त वाणीमा स्पष्ट छ कि कडिहार गुरु (पूर्णसंत) तीन स्थितिमा सारनाम सम्म प्रदान गर्नु हुन्छ तथा चौथो स्थितिमा सार शब्द प्रदान गर्नु पर्ने हुन्छ । किन कि कबीर सागर मा प्रमाण त पछाडि देखिएको थियो तर उपदेश विधि पहिले नै पूज्य दादा गुरुदेव तथा पर मेश्वर कबीर साहेबजी ने हमारे पूज्य गुरुदेवलाई प्रदान गरी दिनु भएको थियो जो हामीलाई शुरु देखि नै तीन पटकमा नामदानको दीक्षा गर्दै आई रहनु भएको छ ।*

*हाम्रो गुरुदेव रामपालजी महाराज पहिलो पटक श्री गणेशजी, ब्रह्मा-सावित्रीजी, श्री लक्ष्मी विष्णुजी, श्री शंकर पार्वतीजी, अनि माता शेरावालीको नाम जप दिनु हुन्छ । जसको वास हाम्रो मानव शरीरमा बनेको चक्रहरूमा हुन्छ । मूलाधार चक्रमा श्री गणेशजीको वास, स्वाद चक्रमा ब्रह्मा सावित्रीजीको वास, नाभि चक्रमा लक्ष्मी विष्णुजीको वास, हृदय चक्रमा शंकर पार्वतीजीको वास, कंठ चक्रमा शेराँवाली माताको वास छ र यी सबै देवी-देवताहरूका आदि अनादि नाम मंत्र हुन्छन् जसको वर्तमानमा गुरुहरूलाई ज्ञान छैन् । यी मंत्रहरूका जप गर्नाले पाँचै चक्र खुल्छन् । यी चक्रहरू खुले पछि मानिस भक्ति गर्ने लायक बन्छ । सतगुरु गरीबदासजी आफ्नो वाणीमा प्रमाण दिनु हुन्छ कि :—*

पांच नाम गुझ गायत्री आत्म तत्त्व जगाओ । ॐ किलियं हरियम् श्रीयम् सोहं ध्याओ ।।

*भावार्थ : पांच नाम जो गुझ गायत्री हुन । यीनलाई जप गरी आत्मालाई जागृत गर ।*

*दोस्रो पटकमा दुई अक्षरको जप दिन्छन् जसमा एक ओम् र अर्को तत् (जो कि गुप्त छ उपदेशीलाई मात्र बताइन्छ) जसलाई स्वाससँगै जप गरिन्छ ।*

*तेस्रो पटक सारनाम दिनु हुन्छ जो कि पूर्णरूपले गुप्त छ ।*

**तीन पटकमा नाम जपको प्रमाण :-**

## अध्याय १७ को श्लोक २३

ॐ, तत्, सत्, इति, निर्देशः ब्रह्मणः, त्रिविधः, स्मृतः,

ब्रह्मणाः, तेन, वेदाः, च, यज्ञाः, च, विहिताः, पुरा ।।२३।।

**अनुवाद : (ॐ) ब्रह्मको (तत्) यो साङ्केतिक मंत्र परब्रह्मको (सत्) पूर्णब्रह्मको ( इति) यस्तै यो (त्रिविधाः) तीन प्रकारको (ब्रह्मणः) पूर्णपरमात्माको नाम सुमरणको (निर्देशः) संकेत (स्मृतः) भनिएको छ (च) र (पुरा) सृष्टीको आदिकालमा (ब्रह्मणः) विद्वानहरूले बताए कि (तेन्) उनै पूर्णपरमात्माले (वेदाः) वेद (च) तथा (यज्ञाः) यज्ञादि ( विहिताः) रचे ।**

**संख्या नं. ८२२ सामवेद उतार्चिक अध्याय ३ खण्ड नं. ५ श्लोक नं. ८ (संत रामपाल दासद्वारा भाषा-भाष्य) :-**

मनीषिभिः पवते पूर्व्यः कविर्नृभिर्यतः परि कोशां असिष्यदत् ।

त्रितस्य नाम जनयन्मधु क्षरन्निन्द्रस्य वायुं सख्याय वर्धयन् ।।८।।

मनीषिभिः-पवते-पूर्व्यः-कवीर्-नृभिः-यतः-परि-कोशान्-असिष्यदत्-त्रि-तस्य-नाम-जनयन-मधु-क्षरनः-न-इन्द्रस्य-वायुम्-सख्याय-वर्धयन् ।

शब्दार्थ- (पूर्व्यः) सनातन अर्थात् अविनाशी (कवीर नृभिः) कबीर परमेश्वर मानव रूप धारण गरेर अर्थात् गुरु रुपमा प्रकट भएर (मनीषिभिः) हृदय देखि चाहनेहरू श्रद्धाले भक्ति गर्नेहरू भक्तात्मालाई (त्रि) तीन (नाम) मन्त्र अर्थात् नाम उपदेश दिएर (पवते) पवित्र गरेर (जनयन्) जन्म व (क्षरनः) मृत्युबाट (न) रहित गर्छ र (तस्य) उसको (वायुम्) प्राण अर्थात् जीवन-स्वांसलाई जो संस्कारवश गिन्तीको लागि राखिएको छ त्यसलाई (कोशान्) आफ्नो भण्डारबाट (सख्याय) मित्रताको आधारमा (परि) पूर्णरूपले ( वर्धयन्) बढाउाछ । (यतः) जस कारणले (इन्द्रस्य) परमेश्वरको (मधु) वास्तविक आनन्दलाई (असिष्यदत्) आनो आशीर्वाद प्रसादले प्राप्त गराउँदछ ।

***भावार्थ :- यस मंत्रमा स्पष्ट गरिएको छ कि पूर्णपरमात्मा कवीर अर्था कबीर मानव शरीर धारी गुरु रूपमा प्रकट भएर प्रभस प्रेमीहरूलाई तीन नामको जप दिएर सत्य भक्ति गराउँछ साथै त्यो मित्र भक्तलाई पवित्र गरि आफ्नो आशीर्वादिले पूर्णपरमात्मा प्राप्ति गराई पूर्णसुख प्राप्त गराउँछ । साधकको आयु बढाई दिन्छ । यस्तै प्रमाण गीता अध्याय १७ श्लोक २३ मा छ कि ओम्-तत्-सत् इति निर्देशः ब्रह्मणः त्रिविधि स्मृतः भावार्थ छ कि पूर्णपर मात्मालाई प्राप्त गर्ने ॐ (१) तत् (२) सत् (३) यो मंत्र जप गर्नलाई निर्देश हो । यस नामलाई तत्त्वदर्शी संतबाट प्राप्त गर । तत्त्वदर्शी संतको विषयमा गीता अध्याय ४ श्लोक ३४ मा भनिएको छ तथा गीता अध्याय १५ श्लोक नं. १ र ४ मा तत्त्वदर्शी संतको पहिचान बताइएको छ र भनिएको छ तत्त्वदर्शी संतद्वारा तत्त्वज्ञान जाने पछि त्यस परमपद परमेश्वर को खोजी गर्नु पर्ने जहाँ गए पछि साधक यो संसारमा फर्केर आउँदैन अर्थात् पूर्णमुक्त हुन जान्छ । त्यहि पूर्णपरमात्माबाट संसारको रचना भएको छ ।***

***विशेष :- उपरोक्त विवरणबाट स्पष्ट हुन्छ कि पवित्र चारै वेद साक्षी छ कि पूर्णपर मात्मा नै पूजा योग्य छ । उसको वास्तविक नाम कविर्देव (कबीर परमेश्वर) हो र तीन***

*मंत्रको नाम जप गर्नाले नै पूर्णमोक्ष हुन्छ ।*

*धर्मदासजीलाई परमेश्वर कबीर साहेबजीले सार शब्द दिनलाई मनाही गर्नु भएको थियो र भन्नु भएको थियो कि यदि सार शब्द कुनै कालको दूतको हातमा पर्‍यो भने बिचको पीढी पार हुन पाउने छैनन् । जस्तै कलियुगको प्रारम्भमा प्रथम पीढी वाला भक्तहरू अशिक्षित थिइ तथा कलियुगको अंतमा अंतिम पीढीका भक्तहरू कृतघनी हुनेछन तथा अब वर्तमानमा सन् १९४७ बाट भारत स्वतंत्र भए पछि बिचको पीढी प्रारम्भ भएको छ । सन् १९५१ म सतगुरु रामपालजी महाराजलाई पठाइएको छ । अहिले सबै भक्तजनहरू शिक्षित छन् । शास्त्र आफूसँग विद्यमान छ । अब यो सतमार्ग सत साधना पूरे संसारमा फैलिनेछ तथा नकली गुरु ता संत, महंत लुक्दै लुकाउँदै हिड्नेछन् । यसैले कबीर सागर, जीव धर्म बोध सागर पृष्ठ १९३७ माः-*

धर्मदास ताहि लाख दुहाई, सार शब्द कहीं बाहर नहीं जाई ।
सार शब्द बाहर जो परि है, बिचली पीढी हंस नहीं तरि है ।

*पुस्तक "धनी धर्मदास जीवन दर्शन एवं वंश परिचय" को पृष्ठ ४६ मा लेखिएको छ कि एघारौं पीढीलाई गद्दी भएन । जुन महंतजीको नाम "धीरज नाम साहेब" कवर्धामा बस्थे । त्यस पछि बारहौं महन्त उग्र नाम साहेबले दामाखेडामा गद्दीको स्थापना गर्नु भयो र स्वयं नै महन्त बन्नु भयो । यस भन्दा अगाडी दामाखेडामा गद्दी थिएन । यसबाट स्पष्ट हुन्छ कि पूरै विश्वमा सतगुरु रामपालजी महाराजको अतिरिक्त वास्तविक भक्तिमार्ग छैन । सबै प्रभु प्रेमी श्रद्धालुहरूलाई प्रार्थना छ कि मलाई प्रभु सम्फेर आफ्नो कल्याण गर ाउनुहोस् ।*

यह संसार समझदा नाहीं, कहन्दा श्याम दोपहरे नूं ।
गरीबदास यह वक्त जात है, रोवोगे इस पहरे नूं ।।

*बारहौं पंथ (गरीबदास पंथ बारहौं पंथ लेखिएको छ कबीर सागर, कबीर चरित्र बोध पृष्ठ १८७० मा) को विषयमा कबीर सागर कबीर वाणी पृष्ठ नं. १३६-१३७ मा वाणी लेखिएको छ :-*

सम्वत सत्रासै पचहत्तर होई, तादिन प्रेम प्रकटें जग सोई ।
साखी हमारी ले जीव समझावै, असंख्य जन्म ठौर नहीं पावै ।
बरवें पंथ प्रगट बानी, शब्द हमारे की निर्णय ठानी ।
अस्थिर घर का मरम न पावैं, ये बारा पंथ हमही को ध्यावैं ।
बारवें पंथ हम ही चलि आवैं, सब पंथ मेटि एक ही पंथ चलावें ।
धर्मदास मोरी लाख दोहाई, सार शब्द बाहर नहीं जाई ।
सार शब्द बाहर जो परही, बिचली पीढी हंस नहीं तरहीं ।
तेतिस अर्ब ज्ञान हम भाखा, सार शब्द गुप्त हम राखा ।
मूल ज्ञान तबत क छुपाई, जब लग द्वादश पंथ मिट जाई ।

*यहाँ साहेब कबीरजी आफ्नो शिष्य धर्मदासजीलाई सम्फाउँनु हुन्छ कि सम्वत्*

*१७७५ मा मेरो ज्ञानको प्रचार हुनेछ जो बारहौं पंथ हुन्छ । बारहौं पंथमा मेरो वाणी प्रकट हुनेछ तर सही भक्ति मार्ग हुने छैन । फेरि बारहौं पंथमा म नै हिडेर आउनेछु र सबै पंथलाई मेटेर मात्र एउटा पंथ चलाउने छु । तर धर्मदास तिमी लाई लाखौं सौगंध छ कि यो सार शब्द कुनै कुपात्रलाई न दिनु, होइन भने बीचको पीढीका हंसहरू पार हुन सक्ने छैन । यसैले जब सम्म बारह पंथ मेटेर एउटा मात्र पंथ चल्दैन तब सम्म म यो मूल ज्ञान लुकाएर राख्ने छु ।*

***संत गरीबदासजी महाराजको वाणीमा नामको महत्व :-***

*नाम अभैपद ऊंचा संतों, नाम अभैपद ऊंचा ।*
*राम दुहाई साच कहत हूं, सतगुरू से पूछा ।।*
*कहै कबीर पुरष बरियांम, गरीबदास एक नौका नामं ।।*
*नाम निरंजन नीका संतों, नाम निरंजन नीका ।*
*तीर्थ व्रत थोथरे लागे,जी तप संजम फीका ।।*
*गज तुरक पालकी अर्था, नाम बिना सब दानं व्यर्था ।*
*कबीर, नाम गहे सो संत सुजाना, नाम बिना जग उरझाना ।*
*ताहि ना जाने ये संसारा, नाम बिना सब जम के चारा ।।*

***संत नानक साहेबजीको वाणीमा नामको महत्व :-***

*नानक नाम चढदी कलां, तेरे भाणे सबदा भला ।*
*ननक दुःखिया सब संसार, सुखिया सोय नाम आधार ।।*
*जप ताप ज्ञान सब ध्यान, षट शास्त्र सिमरत व्याखान ।*
*जोग अभ्यास कर्म धर्म सब क्रिया, सगल त्यागवण मध्य फिरिया ।*
*अनेक प्रकार किए बहुत यत्ना, दान पूण्य होमै बहु रत्ना ।*
*शीश कटाये होमै कर राति, व्रत नेम करे बहु भांति ।।*
*नहीं तुल्य राम नाम विचार, नानक गुरूमुख नाम जपिये एक बार ।।*

***(परम पूज्य कबीर साहेब (कवीर् देव) को अमृत वाणी)***

संतो शब्दई शब्द बखाना ।टेक।। शब्द फांस फँसा सब कोई शब्द नहीं पहचाना ।। प्रथमहिं ब्रह्म स्वं इच्छा ते पाचौ शब्द उचारा । सोहं, निरंजन, रंरकार, शक्ति और ओंकारा ।। पाँचौ तत्त्व प्रकृति तीनों गुण उपजाया । लोक द्वीप चारों खान चौरासी लख बनाया ।। शब्दइ काल कलंदर कहिये शब्दइ भर्म भुलाया ।। पाँच शब्द की आशा में सर्वस मूल गंवाया ।। शब्दइ ब्रह्म प्रकाश मेंट के बैठे मूंदे द्वारा । शब्दइ निरगुण शब्दइ सरगुण शब्दइ वेद पुकारा ।। शुद्ध ब्रह्म काया के भीतर बैठ करे स्थाना । ज्ञानी योगी पंडित औ सिद्ध शब्द में उरझाना ।। पाँचइ शब्द पाच है मुद्र काया बीच ठिकाना । जो जिहसंक आर ाधन करता सो तिहि करत बखाना ।। शब्द निरंजन चांचरी मुद्रा है नैनन के माहीं । ताको जाने गोरख यागी महा तेज तप माही ।। शब्द ओंकार भूचरी मुद्रा त्रिकुटी है स्थाना । व्यास देव ताहि पहिचाना चांद सूर्य तिहि जाना ।। सोहं शब्द अगोचरी मुद्रा दसवें द्वार ठिकाना । ब्रह्मा विष्णु महेश आदि लो रंरकार पहिचाना ।। शक्ति शब्द ध्यान उनमनी मुद्रा बसे आकाश सनेही । झिलमिल झिलमिल जोत दिखावे जाने जनक विदेही ।। पाँच शब्द पाँच हैं मुद्रा सो निश्चय कर जाना । आगे पुरुष पुरान निःअक्षर तिनकी खबर न जाना ।। नौ नाथ चौरासी सिद्धि लो पाच शब्द में अटके । मुद्रा साध रहे घट भीतर फिर ओंधे

मुख लटके ।। पाँच शब्द पाँच है मुद्रा लोक द्वीप यमजाला । कहैं कबीर अक्षर के आगे निःअक्षर का उजियाला ।।

*जस्तो कि यो शब्द "संतो शब्दई शब्द बखाना" मा लेखिएको छ कि सबै संतजन शब्द (नाम) को महिमा सुनाउँछन् । पूर्णब्रह्म कबीर साहेबजीले भन्नु भएको छ कि शब्द सतपुरुषको पनि छ जो सतपुरुषको प्रतिक हो र ज्योति निरंजन (काल) को प्रतिक पनि शब्द नै हो । जस्तो ज्योति निरंजनको शब्द यो चांचरी मुद्रालाई प्राप्त गराउँछ । यसलाई गोरख योगीले धेरै ज्यादा तप गरी प्राप्त गऱ्यो जो कि साधारण व्यक्तिको बसको कुरा छैन र फेरि गोरखनाथ काल सम्मको साधना गरी सिद्ध हुन पुगे । मुक्ति पाएनन् । जब कबीर साहेबले सतनाम र सारनाम दिन भयो अनि मात्र गोरखजीलाई कालबाट छुट्कारा भयो । यसैले ज्योति निरंजनको नामको जप गर्नेहरू काल जालबाट बाँच्न सक्तैनन् अर्थात् सत्यलोक जान सक्तैनन् । शब्द ओंकार (ओ३म्) को जप गर्नाले भूंचरी मुद्राको स्थितिमा साधक आउँछ जो कि वेद व्यासले साधना गऱ्यो र काल जाल मै रह्यो । सोहं नामको जपबाट अगोचरी मुद्राको स्थिति हुन्छ र कालको लोकमा बनेको भंवर गुफामा पुग्दछ । जसको साधना सुखदेव ऋषिले गर्नु भयो र मात्र श्री विष्णुजीको लोकमा बनेको स्वर्ग सम्म पुग्यो । शब्द रंरकार खैचरी मुद्रा दसौं द्वार (सुष्मण) सम्म पुग्दछन् । ब्रह्म विष्णु महेश तीनैले रंरकारलाई सत्य मानेर काल जालमा अल्झीरहें । शक्ति (श्रीयम्) शब्द यो उनमनी मुद्रालाई प्राप्त गराउँछ जसलाई राजा जनकले प्राप्त गरे तर मुक्ति भएन । कतिपय संतले पाँच नामहरूमा शक्तिको ठाउँमा सत्यनाम जोडी दिए जो कि सत्यनाम कुनै जप होइन । यो त सच्चानाम तिर इशारा छ जसरी सत्यलोकलाई सच्च खण्ड पनि भन्छन् यस्तै नै सत्यनाम व सच्चानाम छ । मात्र सत्यनाम-सत्यनाम जप गर्नलाई होइन । यी पाँचशब्दहरूको साधना गर्नेहरू नौ नाथ तथा चौरासी सिद्ध पनि यिनीहरू सम्म सीमित रहे तथा शरीरमा (घट मा) नै धुनि सुनेर आनन्द लिई रहे । वास्तविक सत्यलोक स्थान त शरीर (पिण्ड) बाट (अण्ड) ब्रह्मण्ड भन्दा पारी छ, यसैले फेरि माताको गर्भमा आए (उल्टो झुण्डिएर/लट्किएर) अर्थात् जन्म-मृत्युको कष्ट समाप्त भएन । जुन सुकै उपलब्धि (घट) शरीरमा हुन्छ त्यो त काल (ब्रह्म) सम्मको नै हो, किन कि पूर्णपरमात्माको निजी स्थान (सतलोक) र उसैको शरीरको प्रकाश त परब्रह्म आदि भन्दा पनि ज्याला र धेरै अगाडी (टाढा) छ । त्यसको लागि त पूर्णसंत नै पूरा साधना भन्नेछन् जो पाँच नाम (शब्द) हरू भन्दा अलग छ ।*

संतो सतगुरू मोहे भावै, जो नैनन अलख लखावै ।। ढोलत ढिगै ना बोलत बिसरै, सत उपदेश दृढावे ।।
आंख ना मूंदै कान ना रूंदै ना अनहद उरझावै । प्राण पूंज क्रियाओं से न्यारा, सहज समाधी बतावै ।।

*घट रामायणको रचयिता आदरणीय तुलसीदास साहेबजी हाथरस वाले स्वयं भन्नु हुन्छ कि :- (घट रामायण प्रथम भाग पृष्ठ नं. २७) ।*

पाँचो नाम काल के जानौ तब दानी मन संका आनौ । सुरति निरत लै लोक सिधाऊँ,
आदिनाम ले काल गिराऊँ । सतनाम ले जीव उबारी, अस चल जाऊँ पुरुष दरबारी ।।
कबीर, कोटि नाम संसार में, इनसे मुक्ति न हो । सार नाम मुक्ति का दाता, वाको जाने न कोए ।।

***गुरु नानकजीको वाणीमा तीन नामको प्रमाण :-***

पूरा सतगुरू सोए कहावै, दोय अखर का भेद बतावै ।
एक छुडावै एक लखावै, तो प्राणी निज घर जावै ।।
जै पंडित तु पढिया, बिना दुउ अखर दुउ नामा ।
परणवत नानक एक लंघाए, जे कर सच समावा ।
वेद कतेब सिमरित सब सांसत, इन पढि मुक्ति न होई ।।
एक अक्षर जो गुरूमुख जापै, तिस की निरमल होई ।।

***भवार्थ : गुरु नानकजी महाराज आफ्नो वाणीद्वारा सम्झाउन चाहनुहुन्छ कि पूरा सतगुरु त्यही हो जो दुई अक्षरको जपको बारेमा जान्दछ । जसमा एउटा काल व मायाको बंधनबाट छुडाउँछ अर्को परमात्मालाई देखाउँछ र तेस्रो जो एक अक्षर छ त्यो परमात्मासँग मिलाउँछ ।***

***संत गरीबदासजी महाराजको अमृत वाणीमा स्वांसको नामको प्रमाण :-***

*गरीब, स्वांसा पारस भेद हमारा, जो खोजे सो उतरे पारा ।*
*स्वांसा पारा आदि निशानी, जो खाजे सो होए दरबानी ।*
*स्वांसा ही में सार पद, पद में स्वासा सार ।*
*दम देही का खोज करो, आवागमन निवार ।।*
*गरीब, स्वांस सुरति के मध्य है, न्यारा कदे नहीं होय ।*
*सतगुरू साक्षी भूत कूं, राखो सुरति समोय ।।*
*गरीब, चार पदार्थ उर में जोवै, सुरति निरति मन पवन समोवै ।*
*सुरति निरति मन पवन पदार्थ (नाम), करो इक्तर यार ।*
*द्वादस अन्दर समोय ले, दिल अंदर दीदार ।*
*कबीर, कहता हूं कहि जात हूं, कहूं बजा कर ढोल ।*
*स्वांस जो खाली जात है, तीन लोक का मोल ।।*
*कबीर, माला स्वांस उस्वांस की, फेरेंगे निज दास ।*
*चौरासी भ्रमे नहीं, कटैं कर्म की फांस ।।*

***गुरु नानक देवजीकी वाणी में प्रमाण :-***

*चहऊं का संग, चहऊं का मीत, जामै चारि हटावै नित ।*
*मन पवन को राखै बंद, लहे त्रिकुटी त्रिवैणी संघ ।।*
*अखण्ड मण्डल में सुन्न समाना, मन पवन सच्च खण्ड टिकाना ।।*

***पूर्णसतगुरु त्यही हो जो तीन पटकमा नाम दिन्छ र स्वांस क्रियासँग स्मरणको तरिका बताउँछ । अनि मात्र जीवको मोक्ष संभव छ । जसरी परमात्मा सत्य हो, ठीक त्यसरी नै परमात्माको साक्षात्कार र मोक्ष प्राप्त गर्ने तरिका पनि आदि-अनादि व सत्य हो जो कहिल्यै पनि बदलिदैन । गरीबदासजी महाराज आफ्नो वाणीमा भन्नु हुन्छ :***

भक्ति बीज पलटै नहीं, युग जांही असंख । सांई सिर पर राखियो, चौरासी नहीं शंक ।।
घीसा आए एको देश से, उतरे एको घाट । समझों का मार्ग एक है, मूर्ख बारह बाट ।।

कबीर भक्ति बीज पलटै नहीं, आन पडै बहु झोल । जै कंचन बिष्टा परै घटै न ताका मोल ।।

अनेकौं महापुरुषहरू सच्चा नामको बारेमा जान्दैनन् । उनीहरू मनमुखी नाम दिन्छन् जसले न सुख हुन्छ न त मुक्ति नै । कोहि भन्छन् तप, हवन, यज्ञ आदि गर्नु होस् व केहि महापुरुष आँखा, कान मुख बन्द गरेर भित्र भित्रै ध्यान लगाउने कुरा गर्छन् जुन कि तिनका मनमुखी साधनाको प्रतीक हो । जब की कबीर साहेब, संत गरीबदासजी महाराज, गुरु नानक देवजी आदि परम संतहरूले यी सबै क्रियालाई मनाही गरेर मात्र एउटा नाम जप गर्नलाई भन्नु हुन्छ ।

एक नास्त्रेदमस नामको भविष्य वक्ता थियो । जसको सबै भविष्य वाणीहरू सत्य भै रहेका छन् जो करीब चार सय वर्ष पूर्व लेखिएको व बोलिएको थियो । उसले भनेको छ कि सन् २००६ मा एक हिन्दु संत प्रकट होला अर्थात् संसारमा उसकै चर्चा हुनेछ । त्यो संत न त मुसलमान हुन्छ न त्यो इसाई हुन्छ त्यो मात्र हिन्दु नै हुनेछ । उद्वारा बताइएको भक्ति मार्ग सबै भन्दा भिन्न तथा तथ्यहरूमा आधारित हुनेछ । उसलाई ज्ञानमा कसैले पर ाजित गर्न सक्ने छैनन् । सन् २००६ मा त्यस संतको आयु ५० र ६० वर्षको बीचमा हुनेछ । (संत रामपालजी महाराजको जन्म ८ सितम्बर सन् १९५१ म भयो । जुलाई सन् २००६ मा संतजीको आयु ठीक ५५ वर्ष हुन्छ जो भविष्य वाणी मुताविक सही छ ।) त्यस हिन्दु संतद्वारा बताइएको ज्ञानलाई पूरा संसार स्वीकार गर्ने छ । त्यस हिन्दु संतको अध्यक्षतामा सम्पूर्ण संसारमा भारत वर्षको शासन हुनेछ र त्यस संतको आज्ञाले सबै कार्य हुनेछ । उसको महिमा आकाश भन्दा पनि माथि हुनेछ । नास्त्रेदमसद्वारा बताइएको साङ्केतिक संत रामपालजी महाराज हुन् जो सन् २००६ मा विख्यात भएका हुन । यद्यपि अज्ञानीहरूले नराम्रो गरी प्रसिद्ध गरेको हो तर संतमा कुनै दोष छैन ।

उपरोक्त लक्षण जुन बताइएको छ ती सबै तत्त्वदर्शी संत रामपालजी महाराजमा विद्यमान छ ।

## संत सताउनेलाई सजाय

*आदरणीय गरीबदास साहेबजीको जन्म पावन गाउँ छुडानी जिल्ला झज्जरमा श्री बलरामजी धनखड (जाट) को घरमा भयो । उहाँलाई पनि काशीमा १२० वर्ष सम्म बसेर सन् १५१८ मा सतलोक जानु भयो । पूर्णब्रह्म कबीर परमेश्वर (कविर्देव) सतलोक (ऋतधाम) बाट सशरीर आएर १७२७ मा भेट्नु भएको थियो र उहाँको आत्मालाई सत्यलोक लिएर जानु भएको थियो । पछिबाट परिवारजनहरूले उहाँलाई मरेको ठानेर चितामा राखि सकेका थिए । त्यसै बेला कविर्देवले उहाँको आत्मालाई फर्काई दिएर शरीरमा प्रविष्ट गराई दिनु थियो । त्यस पछि आदरणीय गरीबदासजी पनि परम पूज्य कविर्देव (कबीर परमेश्वर) को आफ्नै आँखाले देखेको महिमा जन जनमा सुनाउन थाले । जो कोहि दुखी प्राणी उहाँसँग उपदेश लिन्थे सुखी हुन जान्थे । उहाँको बढ्दै गएको महिमा र तत्त्वज्ञानको सामुन्ने अन्य गुरुहरू (आचार्यहरू) को अधुरो ज्ञानको पोल खुलनाले वर-परका सबै अधुरो ज्ञान युक्त गुरु जन (आचार्य जन) उहाँसँग अत्याधिक इर्ष्या गर्न थाले । उनीहरूले वर परका मुख्य-मुख्य चौधरीहरूलाई उल्टो कुरा पढाए दिए जसबाट वर परका गाउँका आम व्यक्ति प्रभु कबीरका प्यारो पुत्र आदरणीय गरीबदासजीसँग घृणा गर्न थाले ।*

*दिल्लीको वाजीदपुर गाउँमा हजुरको एउटा शिष्य थियो । त्यसलाई पनि पूरै गाउँ इर्ष्या गर्दथे । उसको प्रार्थनामा केहि दिन सम्म हजुर वाजदिपुरमा बस्नु भयो । त्यसै बेला फटेङग्रा (टिड्डी) समूहले वर परको क्षेत्रमा जुनेलो (बाजरा) को बालीलाई नष्ट गरी दिए तर हजुरको सेवकको फसलमा कुनै हानी पुऱ्याएनन् । सबै गाउँवासीहरू संत गरीबदासको महिमाबाट निकै प्रभावित भए र ज्ञानलाई स्वीकार गरी आ-आफ्नो कल्याण गराए ।*

*हजुरको आदेशबाट हजुरको भक्तले त्यस जुनेलो (बाजरा) लाई पूरै गाउँमा बाँडी दिए र गरीबदासजीले बार बार मनाही गर्दा पनि केही जुनेलो (बाजरा) बैलगाडामा हाली दिएर भने कि प्रत्येक पुर्णिमामा तपाई भण्डारा गर्नु हुन्छ, अलि कति दानयस दासको पनि हनेछ । भक्तहरूको श्रद्धालाई ध्यानमा राख्दै हजुरले स्वीकृति प्रदान गर्नु भयो (आदरणीय गरीबदासजीको चार पुत्र तथा दुई पुत्री र पुग न पुग १३०० बिगाहा जग्गाको मालिक पनि थिए) । त्यसै बैलगाडीमा बसेर हजुर गाउँ छुडानी तिर लाग्नु भयो । बाटोमा गाउँ काणौंदाको नजिकै बैलगाडी पुग्ने बित्तिकै पहिले देखि नै सुनियोजित षडयन्त्र स्वार्थी गुरुहरू ( आचार्यहरू) ले संत गरीबदासजी लाई घेरे । सबै जुनेलो (बाजरा) लुटे र त्यसै गाउँको चौधरी छाजुराम छिक्कारालाई सूचना पठाए कि उनीहरूले हिन्दु धर्मको द्रोहीलाई समाती र राखेको छ । चौधरी छाजुरामजीके आदेशबाट चौपाडमा बांधियो । चौधरी छाजुरामजीलाई सर कारको तर्फबाट केहि कानूनी अधिकार प्राप्त थियो । उहाँलाई छः महीनाको सजया, पाँच सय रूपियाँ जरिवाना र महादोषीलाई काठमा बंद गर्ने आदि सम्मिलित थियो)*

केहि समय पछाडी ऋषि दुर्वासाजीको श्रापवश सबै यादवकुल विनास भयो श्रीकृष्णजीको पैतालामा एउटा शिकारी (जो त्रेता युगमा सुग्रिवको दाजु वालीको आत्मा नै थियो) ले विशाक्त तिर हान्यो । अनी पाँचौ पाण्डवहरू घटना स्थलमा पुगेपछि श्रीकृष्णजीले भन्नु भयो कि तपाईहरू मेरो शिष्य हुनुहुन्छ, म तपाईहरूको धार्मिक गुरू पनि छु त्यसैले मेरो अन्तिम आज्ञा सुन्नुहोस् । एक त यो कि अर्जुन, द्वारिकाका सबै स्त्रीहरूलाई ईन्द्र प्रस्थ (दिल्ली) लैजानु, किनकि यहाँ कोहि पुरूष बाँचेनन् र अर्को तपाई सबै पाण्डवहरू राज्य त्यागेर हिमालयमा साधना गरि शरीरलाई गलाइदिनु किनकि तिमीहरूले महाभारत युद्धको बेला जुन हत्याहरू गरेका थियौ । तिमीहरूको टाउकोमा त्यो पाप निकै भयंकर छ । त्यसवेला अर्जुनले आफुलाई थाम्न सकेनन् र भने कि प्रभु ! हुन त तपाई यस्तो स्थितीमा हुनुहुन्छ कि मैले यस्तो कुरा भन्नु हुँदैन तर प्रभु ! आज यदि मेर ो शंकाको सामाधान हुन सकेन भने म चैनले मर्न पनि पाउदिन पुरै जीवन रूँदै रहुँला श्रीकृष्णजीले भन्नु भयो अर्जुन ! सोध जे सोध्नु छ, मेरो अन्तिम वेला छ । श्रीअर्जुनले गहभरी आँसु पारेर सोध्यो कि प्रभु नराम्रो नठान्नुहोला जव तपाईले पवित्र गीताजीको ज्ञान भन्नुभएको थियो त्यसवेला म युद्ध गर्नालाई मनाही गर्दै थिए हजुरले भन्नु भएको थियो कि अर्जुन तिम्रो दुवै हातमा लड्डु छ यदि युद्धमा मारियौ भने स्वर्ग प्राप्त हुनेछ र विजयी भयौ भने पृथ्वीको राज्य भोग्नेछौ र तिमीलाई कुनै पाप लाग्ने छैन हामीले तपाईकै रेख देखमा तपाईकै आज्ञा अनुसार युद्ध गर्‍यौ (प्रमाण पवित्र गीता अध्याय २ श्लोक ३७-३८) हे भगवान ! हाम्रो त एउटा हातमा पनि लड्डु रहेन । न त युद्धमा मारिएर स्वर्ग प्राप्ति भयो र अव तपाई राज्य त्याग गर्ने आदेश दिनुहुन्छ, न त पृथ्विको राज्यको आनन्दनै भोग्न पायौं । यस्तो छलकपट युक्त ब्यवहार गर्नमा हजुरको के स्वार्थ थियो ? अर्जुनको मुखमा यस्तो कुरा सुनेर युधिष्ठिरजीले भनेका थिए कि हे अर्जुन यस्तो स्थितीमा जवकी भगवान अँन्तिम सास लिईरहनु भएको छ तपाईको शिष्टचार रहित ब्यवहारले शोभा दिदैन श्रीकृष्णजीले भन्नुभयो अर्जुन ! आज म अन्तिम स्थितिमा छु तिमी मेरो अत्यन्त प्रिय हौ आज म वास्तविकता बताउछु कि कुनै खलनायक जस्तो अर्को शक्ति छ जो आफुलाई यंत्र जस्तो नचाउँदै थियो मलाई केहि थाहा छैन कि मैले गीतामा के भनेको थिए तर अहिले जुन कुरा भन्दै छु त्यो हितमा छ श्रीकृष्णजीले उक्त कुरा अश्रुयुक्त आँखाले भनेर प्राण त्याग गर्नु भयो । उपरोक्त विवरणबाट यो शिद्धभयो कि पवित्र गीताजीको ज्ञान श्रीकृष्णले भन्नुभयो । त्यो त ब्रह्म (ज्योति निरंजन काल) ले भनेको छ जो एक्काइस ब्रह्माण्डको स्वामी छ । काल (ब्रह्म) को छ ? यस बारे जान्नलाई कृपया पढनुहोस् यसै पुस्तक मा पृष्ट २० देखि ६५ सम्म ।

श्रीकृष्ण सहित सबै यादवहरूको अन्तिम संकार गरी अर्जुनलाई छाडेर चारै दाजुभाइ ईन्द्रप्रस्थ (दिल्ली) जानु भयो पछि अर्जुन द्वारिकाका स्त्रीहरूलाई लिएर आउदै थिए बाटोमा जंगली मानिसहरू सबै गोपिनीहरूलाई लुटेर र कोहिलाई भगाएर लगे साथै अर्जुनलाई समातेर पिटे अर्जुनको हातमा त्यहि गान्डीव धनुष थियो जसले महाभारतको युद्धमा अनगिन्ती हत्या गरेका थिए त्यो पनि चलेन अनि अर्जुन ले भने कि त्यो श्रीकृष्ण वास्तवमा झुठो र कपटी थियो जुन युद्धमा पाप गराउनु थियो तव मलाई शक्ति प्रदान गर्‍यो एक तिर ले सय करोड योद्धाहरूलाई मारेर लडाउथे र आज त्यो शक्ति खोसिहाले म यहाँ उभिएर

पिटाइखाई रहेको छु । यसै विषयमा पूर्णब्रह्म कवीर साहेव (कविर्देव) जीको भनाई छ कि श्री कृष्णजी कपटी अथवा झुठा थिएनन् । यो सवै अत्याचार काल (ज्योति निरंजन) गर्दैछ । जबसम्म यो आत्मा कवीर परमेश्वर(सत्पुरूष) को शरणमा पूरा संत (तत्त्वदर्शी) को माध्यमले आउदैन तवसम्म काल यस्तै प्रकारले कष्ट माथि कष्ट दिई रहन्छ। पूर्णजानकारी तत्त्वज्ञानबाट हुन्छ । यसैले काल को हो ? यो जान्नको लागि कृपया पढनुहोस यसै पुस्तकको पृष्ट २०देखि ६५ सम्म ।

विषेश विचार :- उपरोक्त प्रमाणहरूबाट सिद्ध भयो कि श्रीमद्भागवत गीताको ज्ञान श्री कृष्णजीले भन्नु भएन यो त श्रीकृष्णजीको शरीरमा प्रेत जस्तै प्रवेश गरी ब्रह्म(काल अर्थात् ज्योति निरंजन) ले भनेका थिए ।

## "श्रीमद्भागवत गीता सार"

परमेश्वरको खोजीमा आत्मा युगौंदेखि लागेको छ । जसरी प्यासीलाई जलको चाहना हुन्छ । जीवात्मा परमात्मा देखि छुट्टिएर महाकष्ट भोग्दैछन् । जो मुर्ख पूर्णब्रह्म ( सत् पुरूष) को सतलोक (ऋतधाम) मा थियो, त्यो सुख यहाँ काल (ब्रह्म) प्रभुको लोकमा छैन । चाहे कोहि करोडपति छन्, चाहे पृथ्वी पति (पुरै पृथ्वीको राजा), चाहे त्यो सुरपति( स्वर्गको राजा ईन्द्र) चाहे त्रिलोकपति ब्रह्मा, विष्णु र शिव नै किन नहोस् । जन्म र मृत्यु, गरिएका कर्मका भोग अवश्य नै प्राप्त हुनेछ (प्रमाण गीता अध्याय २ श्लोक १२ अ. ४ श्लोक ५) यसैले पवित्र श्रीमद्भागवत गीता ज्ञान दाता प्रभु (काल भगवान ) ले अ. १५ श्लोक १ देखि ४ र अध्याय १८ श्लोक ६२ मा भनेको छ कि अर्जुन सर्वभावले त्यस परमेश्वरको शर णमा जाउ । उनकै कृपाले तिमी परम शान्ति र सतलोक (शाश्वतम् स्थानम्) लाई प्राप्त गर्नेछौ । त्यस परमेश्वरको तत्त्वज्ञान र भक्ति मार्ग वारे (गीता ज्ञान दाता) लाई थाहा छैन । त्यस तत्त्वज्ञानलाई तत्त्वदर्शि संतहरू कहाँ गएर उनलाई दण्डवत प्रणाम गरि विनम्र भावले प्रश्न गर, अनि ती तत्त्वद्रष्टा संतहरू तिमीलाई परमेश्वरको तत्त्वज्ञान बताउने छन् । फेरि वँहाले देखाएको भक्ति मार्गमा सर्वभावले लागि हाल । (प्रमाण गीता अध्याय ४ श्लोक ३४) तत्त्वदर्शी संतको पहिचान गीता अध्याय १५ श्लोक १ मा बताउँदै भनिएको छ कि यो संसार उल्टो झुण्डीएको वृक्ष जस्तै जसको मुल (जरा) माथी र शाखाहरू तल छन् । जो यस संसार रूपी रूखको विषयमा जान्दछन् । उनी तत्त्वदर्शी संत हुन् । गीता अध्याय १५ श्लोक २ देखि ४ सम्ममा भनिएको छ त्यस संसार रूपि रूखको तीनै गुण (रजगुण ब्रह्मा, सतगुण विष्णु, तमगुण शिव) रूपि शाखा हाँगा हुन् । जो (स्वर्गलोक, पाताललोक र पृथ्वीलोक) तीनै लोकहरूमा तल र माथि फिजीएको छ । त्यस संसार रूपी उल्टो झुण्डिएको रूखको विषयमा अर्थात् सृष्टि रचनाको विषयमा म यस गीताजीको ज्ञानमा बताउन सक्दिन । यहाँ विचार कालमा (गीता ज्ञान) जो ज्ञान तपाईलाई भन्दैछु । यो पूर्णज्ञान छैन । त्यसका लागि गीता अध्याय ४ श्लोक ३४ मा संकेत गरिएको छ जसमा भनिएको छ कि पूर्णज्ञान (

तत्त्वज्ञान) को लागि तत्त्वदर्शी संत समिप जानु पर्छ र उहाँले नै बताउने छन् । मलाई पूर्णज्ञान छैन । गीता अध्याय १५ श्लोक ४ मा भनिएको छ कि तत्त्वदर्शी संतको प्राप्ति पछि त्यस परमपद परमेश्वर (जसको विषयमा गीता अध्याय १८ श्लोक ६२ मा भनिएको छ) को खोज गर्नु पर्छ । जहाँ गए पछि साधक पुनः फर्केर आउदैन पूर्णमोक्ष प्राप्त गर्छ । जुन पूर्णपर मात्माबाट उल्टो संसार रूपि रूखको प्रवृत्ति विस्तारको प्राप्त भएको छ।

भावार्थ छ कि जुन परमेश्वरले सबै ब्रमाण्डमो रचना गर्नु भएको छ र म (गीता ज्ञान दाता ब्रह्म) पनि त्यहि आदि पुरूष परमेश्वर अर्थात् पूर्णपरमात्माको शरणमा छु । उनको साधना गर्नाले अनादी मोक्ष (पूर्णमोक्ष) प्राप्त हुन्छ ।

तत्त्वदर्शी संत त्यही हो जो माथी मुल (जरा) र तल तिनै गुण (रजगुणयुक्त ब्रह्माजी, सतगुणयुक्त विष्णुजी र तमगुणयुक्त शिवजी) रूपी हाँगाहरू तजाव माटो डालीको पूर्णजानकारी प्रदान गर्नु हुन्छ । कृपया हेर्नुहोस् उल्टो भुण्डिएको संसार रूपी रूखको चित्र)

आफुद्वारा रचित सृष्टिको पूर्णज्ञान (तत्त्वज्ञान) स्वयं नै पूर्णपरमात्मा कविर्देव (कवीर परमेश्वर) ले तत्त्वदर्शि संतको भुमिका गरेर (कविर्गिर्भीः)कवीर वाणीद्वारा भन्नु भएको छ ( प्रमाण ऋगवेद मण्डल ९ सुक्त ९६ मंत्र १६ देखि २० र ऋग्वेद मण्डल १० सुक्त ९० मंत्र १ देखि ५ सम्म र अथर्ववेद काण्ड ४ अनुवाक्त १ मंत्र १ देखि ७ मा )

कवीर , अक्षर पुरूष एक पेड है, ज्योति निरंजन वाकी डार ।

तीनों देवा शाखा हैं, पात रूपि संसार ।।

पवित्र गीताजीमा पनि तीन प्रभुहरू (१ क्षरपुरूष अर्थात् ब्रह्म २ अक्षर पुरूष अर्थात् परब्रह्म ३ परम अक्षर पुरूष अर्थात् पूर्णब्रह्म) को विषयमा वर्णन छ । प्रमाण गीता अध्याय १५ श्लोक १६-१७, अध्याय ८ श्लोक १ को उत्तर श्लोक ३ मा छ त्यो परम अक्षर ब्रह्म छ र तीन प्रभुहरूका एक अर्को प्रमाणति ७ श्लोक २५ मा गीता ज्ञान दाता काल (ब्रह्म) ले आफ्नो विषयमा भनेको छ । कि म अब्यक्त छु । यो प्रथम अब्यक्त प्रभु भयो । फेरि गीता अध्याय ८ श्लोक १८ मा भनेको छ कि यो संसार दिनको समयमा अब्यक्त (परब्रह्मबाट उत्पन्न भएको छ ।फेरि रात्रीको वेला त्यसैमा लिन हुन जान्छ । यो दोस्रो अब्यक्त भयो । अ. ८ श्लोक २० मा भनेको छ कि अब्यक्त भन्दा पनि अर्को जो अब्यक्त (पूर्णब्रह्म) छ त्यो परम दिब्य पुरूष सर्व प्राणीहरूको नास भए पनि नष्ट हुँदैनन् । त्यहि प्रमाण गीता अध्याय २ श्लोक १७ मा पनि छ कि नासरहित त्यस परमात्मालाई चिन (जान) जसको नास गर्नमा कोहि समर्थ छैन । आफ्नो विषयमा गीता ज्ञान दाता (ब्रह्म) प्रभु अध्याय ४ मंत्र ५ तथा अध्याय २ श्लोक १२ मा भनेको छ कि म त जन्म मृत्युमा नाशवान छु ।

उपरोक्त संसाररूपी रूखको मुल (जरा) त परम अक्षर पुरूष अर्थात् पूर्णब्रह्म कवीर देव हुन् । यसैलाई तेस्रो अब्यक्त पुरूष भनिएको छ । रूखको जराबाट नै सम्पुर्ण रूखलाई आहार प्राप्त हुन्छ । यसैले गीता अध्याय १५ श्लोक १७ मा भनिएको छ कि वास्तवमा पर मात्मा त क्षरपुरूष अर्थात् ब्रह्म, तथा अक्षर पुरूष अर्थात् परब्रह्म भन्दा पनि अन्य नै छ ।




ऊपर जड़ नीचे शाखा वाला उल्टा लटका हुआ
संसार रूपी वृक्ष का चित्र

जो तीनै लोकमा प्रवेश गरी सबैको भरण पोषण गर्दछ । त्यहि वास्तवमा अविनासी हुन ।

१. क्षरको अर्थ छ नाशवान । किनकि ब्रह्मा अर्थात् गीता ज्ञान दाताले स्वयं भनेको छ कि अर्जुन तँ र म त जन्म मृत्युमा छौ (प्रमाण गीता अध्याय २ श्लोक १२, अध्याय ४ श्लोक ५ मा )

२. अक्षरको अर्थ छ अविनाशी । यहाँ परब्रह्मलाई पनि स्थायी अर्थात् अविनाशी भनिएको छ तर यो पनि वास्तवमा अविनाशी छैन यो चिर स्थायी छ जस्तो एउटा माटोको प्याला छ जुन सेतो रंगको चिया खाने काममा प्रयोग हुन्छ । त्यो झर्दा तुरून्त फुट्छ । यस्तो स्थिती ब्रह्म(काल अर्थात् क्षरपुरूष) लाई सम्झौं । दोस्रो प्याला इस्पात (स्टिल) को हुन्छ । यो माटोको प्यालाको तुलनामा अधिक स्थाई (अविनाशी) हुन्छ तर यसमा पनि खिया लाग्छ र नष्ट हुन्छ । हो समय ज्यादा लाग्छ । यसैले यो पनि वास्तवमा अविनाशी छैन तेस्रो प्याला सुन(स्वर्ण) को छ सुन धातु वास्तवमा अविनाशी छ जसको नाश हुँदैन ।

जसरी परब्रह्म (अक्षर पुरूष) लाई अविनाशी पनि भनिएको छ तर वास्तवमा अविनाशी यि दुवै भन्दा अन्य छ । यसैले अक्षर पुरूषलाई अविनाशी पनि भनिएको छैन । कारण सात रजगुण ब्रह्माको मृत्यु पछि एक सतगुण विष्णुको मृत्यु हुन्छ । सात सतगुण विष्णुको मृत्यु पछाडी एक तमगुण शिवको मृत्यु हुन्छ । तब तमगुण शिवको ७० हजार पटक मृत्यु हुन जान्छ तब एक क्षरपुरुष ब्रह्मको मृत्यु हुन्छ । यो परब्रह्मा (अमर पुरूष) को एक युग हुन्छ । यस्तो एक हजार युगको परब्रह्माको एक दिन तथा यति नै राती हुन्छ । तीस दिन रातको एक महिना, बाह्र महिनाको एक वर्ष तथा सय बर्षको परब्रह्मा ( अक्षर पुरूष) को आयु छ । अनि पछि यो परब्रह्म र सर्वब्रह्माण्ड जो सतलोक भन्दा तलका छन्, नष्ट हुन जान्छन् । केहि समय उपरान्त तलका सवै ब्रह्माण्डहरू (ब्रह्म र परब्रह्मका लोकहरू) को रचना पूर्णब्रह्म अर्थात् परम अक्षर पुरूष गर्नु हुन्छ । यसरी यो तत्त्वज्ञान सम्झनु पर्नेछ । तर परम अक्षर पुरूष अर्थात् पूर्णब्रह्म (सतपुरूष) र उनको सतलोक ( ऋृतधाम) सहित माथीका अलखलोक, अगमलोक र अनामीलोक कहिले पनि नष्ट हुँदैनन् ।

यसै कारणले गीता अध्याय १५ श्लोक १७ मा भनिएको छ कि वास्तवमा उत्तम प्रभु अर्थात् पुरूषोतम त (ब्रह्म) क्षरपुरूष तथा परब्रह्म (अक्षर पुरूष) भन्दा अन्य नै छ जो पूर्णब्रह्म (परम अक्षर पुरूष) छ । उहि वास्तविकतामा अविनाशी हुन । उहि सवैका धारण पोषण गर्नेवाला संसार रूपि रूखको मुल रूपी पूर्णपरमात्मा छन् । रूखको जुन भाग ( जमिनको तुरून्त वाहिर देखिन्छ त्यो तना हो । त्यसलाई अक्षर पुरूष (परब्रह्म) सम्झनु । तनालाई पनि आहार मूल -जरा) बाट नै प्राप्त हुन्छ । फेरि तना भन्दा अगाडी रूखको अनेक हाँगाहरू हुन्छन् । त्यस मध्य एउटा हाँगा ब्रह्म (क्षरपुरूष) हुन् । यसको आहार पनि मूल (जरा) अर्थात् परम अक्षर पुरूषबाट नै प्राप्त हुन्छ । त्यो हाँगा ( क्षरपुरूष ब्रह्म) को मानौ तीन गुण (रजगुण ब्रह्मा, सतगुण विष्णु , तथा तमगुण शीव) रूपी शाखाहरू छन् । यिनलाई पनि आहार मुल (परम अक्षय पुरष अर्थात् पूर्णब्रह्म) बाट नै प्राप्त हुन्छन् । यी तीनै शाखाहरूमा पात रूपमा अन्य प्राणीहरू आश्रीत छन् । उनलाई पनि

वास्तवमा आहार मूल (परम अक्षय पुरूष अर्थात् पूर्णब्रह्म ) बाट प्राप्त हुन्छ । यसैले सवैको पूज्य पूर्णपरमात्मा नै सिद्ध भयो । यो पनि भन्न सकिन्दैन कि पातहरूसम्म आहार पुर ्याउनमा तना, हांगा र शाखाहरूको कुनै योगदान छैन । यसेले सवै आदरणिय छन् तर पुजनिय त मात्र मूल (जरा) नै हो । आदर र पूजामा अन्तर छ । जसरी पतिव्रता स्त्री सत्कार त सवैलाई गर्छिन् जस्तै जेठानलाई दाजु सरह, देवरलाई भाइ सरह तर पूजा आफ्नो पतिलाई गर्छिन् । अर्थात् जुन भाव आफ्नो पतिमा हुन्छ त्यस्तो भाव अन्य पुरूषमा पतिव्रता स्त्रीले राख्दैनन् ।

दोस्रो उदाहरण - एक पटक हरियाणा प्रान्तमा बाढी आएको थियो । त्यसवेला ६ सय करोडको नोक्सान भएको थियो । त्यसको पूर्ति हरियाणा सरकारले गर्न सक्दैनथ्यो । किनकि हरियाणा सरकारको सिंगो सरकारको बजेट नै नौ रूपैयाको थियो । देशको प्रधानमन्त्रिजीले त्यो क्षतिपूर्ती गरेको थियो । त्यस ६ सय करोड रूपैयाको वितरण हरियाणा सरकारको अधिकारी तथा कर्मचारीहरूले गरेका थिए । राहत प्राप्तकर्ता जुन अनजान थिए, तिनीहरू ति वितरण कर्तालाई नै राहतकर्ता भनी ठानेका थिए । उनैबाट भविष्यमा पनि अन्य राहतको आशा गर्दै छन् । उसैको पूजा (घुस आदि दिनु) गर्दै रहन्छन् । तर जो शिक्षित छन् उनीहरूलाई थाहा छ कि ति कर्मचारीको कति योगदान छ । उनिहरू आदर त गर्दछन् तर पूजा (घुस आदि दिने) गर्दैनन् । न त अन्य कुनै कार्य शिद्धिको आशा राक्दछन् ।

वाढीको राहत वितरण पछि त्यसै क्षेत्रमा प्रान्तको मन्त्रीजी आउनु भयो, उनले भन्नु भयो कि मैले तपाईको क्षेत्रमा दश लाख रूपैया दिएँ । उसैले गाउँको सुचिबाट नाम पढेर सुनायो । राम अवतारलाई दश हजार आदि रूपैया दिएँ । फेरि त्यसै गाँउमा देशको प्रधानमन्त्रीजी आउनुभयो । उहाँले पनि भन्नु भयो कि मैले तपाईको गाउँलाई दश लाख रूपैया दिएँ र उहि सुचीबाट पढेर सुनाउनु भयो । जसमा लेखिएको थियो । राम अवतार लाई दश हजार रूपैया दिए । राम अवतार भन्छन् की यी सवै झुठो भन्दैछन् । मलाई त रूपैया मुखियाले दियो । त्यो अन्जान राम अवतार अज्ञानता वश गाँउको मुखियाजीको पूजा गरी आफ्नो सवै कार्यका शिद्धि उनैबाट चाहन्छ । जो शिक्षित छन् । उनलाई थाहा छ कि प्रधानमन्त्रिजीले राहत नदिएको भए मुख्यमन्त्रिजी, मन्त्रीजी र गाँउका मुखिया जुन केहि पनि दिन सक्दैनथे । यदि मुख्यमन्त्रीजीले पनि आफ्नो राहत कोषबाट राशि वितरण गरेको भए त सय सय रूपैया मुस्किलले वाढी पिडितलाई हुन्थ्यो जुन नाम मात्र हुन्थियो । यस्तै समझदार ब्यक्तिलाई थाहा हुन्छ कि कसको कति क्षमता छ । त्यसै आधारमा उनमाथि आस्था राख्दछन् । अनादरणिय कोहि हुँदैन तर पूजाको लागि सोचि संझेर छान्दछन् । ठीक त्यस्तै गीता अ.२ श्लोक ४६ मा भनिएको छ कि अर्जुन धेरै ठूलो जलाशयको (जसको पानी दस वर्षसम्म वर्षा नभए पनि सुक्न सक्दैन) प्राप्ति पछि सानो जलाशय (जसमा पानी एक वर्ष नआए समाप्त हुन जान्छ) मा जस्तो आस्था रहन जान्छ, त्यस्तै गरि पूर्णपरमात्माबाट प्राप्त हुने लाभको ज्ञान सित परिचित भए पछि तेरो आस्था अन्य प्रभुहरूमा त्यस्तै रहन जानेछ । त्यो सानो जलाशय नराम्रो लाग्दैन तर उसको क्षमताबाट थाहा छ कि यो त काम

चलाउछ ।

गीता अध्याय ७ श्लोक १२ देखि १५ सम्ममा भनिएको छ कि तीनै गुणहरूबाट जे जति भइरहेका छन् । (जस्तै रजगुण ब्रह्माबाट जीवहरूको उत्पति, सतगुण विष्णुबाट स्थिती र तमगुण शिवबाट संहार) यसको मुख्य कारण म (ब्रह्म काल) मै हुँ जो साधक तीनै गुणहरू (रजगुण ब्रह्मा, सतगुण विष्णु, तमगुण शिव) को पूजा गर्छन् उनीहरू राक्षस स्वभावलाई धारण गरि मानिसहरूमा निच दुश्कर्म गर्ने मुर्ख मेरो ब्रह्मको भक्ति पनि गर्दैनन् । फेरि आफ्नो भक्तिलाई अति घटिया भनेको छ । गीता अ. ८ श्लोक १८ मा यसैले गीता अ. १५ श्लोक ४ र अ.१८ श्लोक ६२ मा भनेको छ पूर्णपरमात्मा भक्ति गर्नाले पूर्णलाभ पूर्णमोक्ष प्राप्त हुन्छ । जुन शास्त्र विधिअनुसार भक्ति छ र अन्य प्रभुहरूको इष्ट रूपमा साधना शास्त्र विधीको विरूद्ध हुने हुनाले ब्यर्थ छ । (प्रमाण गीता अ. १६ श्लोक २३,२४ मा )

जसरी आँपको बिरूवा नर्सरीबाट ल्याएर उसको मूल (जरो) लाई जमिनमा खाल्डो खनि राप्यौ । फेरि मूलको सिंचाई (पूजा) गर्‍यौ भने विरूवा ठूलो होला र रूख वन्ला । अनि शाखाहरूमा फल लाग्ने छ । यदि केहि शाखाहरूलाई नै जमिनमा खाल्डो खनि रोप्यौ फेरि मुलको सिंचाई गरे भने विरूवा सुकेर जान्छ । कृपया हेर्नुहोस सिधा रोपेको र उल्टो रापेको भक्ति रूपी विरूवाका चित्र यसै पुस्तकको पृष्ठ १८७-१८८ मा )

भावार्थ छ कि साधकलाई परमात्मा (मुल) को साधना(पूजा) ईष्ट रूपमा गर्नाले त्यसको फल तीनै ब्रह्मा, विष्णु शिव (शाखाहरू) नै प्रदान गर्नेछन् । किनकि यी भगवान कृयमान कर्मको फल जस्ताका त्यस्तै नै दिनु हुन्छ ।

यदि तपाईले कुनै कम्पनीमा नोकरी पाउनु छ भने पूजा कम्पनी (फैक्ट्री) को मालिकलाई नै गर्नु पर्छ । जस्तो जुन कार्य त्यस नोकरलाई दिइन्छ त्यो आफ्नो सेवा अवधिमा गर्छ । यो पूजा (नोकरी) मालिकको भयो । नोकरी (पूजा) गरे वापत तलब त्यस मालिकको अन्य नोकर (कर्मचारी वा अधिकारी) ले दिन्छ । जस्तो शिफ्ट अफिसर उपस्थितीको आधारमा तलब (किसान कर्मको फल) वनाएर खजांची (कैशियर) कहाँ पठाउँछ । त्यहाँबाट त्यो सेवकको सेवा (पूजा) फल प्राप्त हन्छ । शिफ्ट अफिसर तथा कैशियरले मात्र गरिएको कर्मको तलब नै दिन्छन् । त्यसमा कुनै परिवर्तन गर्न सक्दैनन् । न त एक रूपैयाँ वढि अथवा कम गर्न सक्दछन् । यदि कामदारले सही काम गरेमा कम्पनीको मालिकले चाहेमा त्यसै सेवाको धनराशिमा बृद्धि गरि दिन्छ । तथा छुट्टै इनाम रूपमा धन राशि अधिक दिन सक्छन् । यदि कोहि मालिकको नोकरी (पूजा) त्याग गरि अर्को अधिकारीको नोकरी (पूजा) गर्न थाल्यो भने उसलाई मालिकबाट प्राप्त हुने धन लाभ बन्द हुन जान्छ । जसले गर्दा त्यो अज्ञानी निर्धन हुन जान्छ । अधिकारीहरू त्यसलाई त्यति तलब दिन सक्दैनन् । फैक्ट्री मालिकको तुलनामा धेरै कम सुविधा पाउनाले त्यो अन्य अधिकारीहरूको सेवक अर्थात् एक मालिकलाई त्यागेर अन्यको उपासना गर्ने ब्यक्ति महादुखि हुन जान्छ ।

कृपया यसै प्रकारले तत्त्वज्ञानको आधारमा पवित्र श्रीमद्भागवत गीताजीको ज्ञानलाई सम्झौ । पूर्णब्रह्म कुलमालिकको पूजा त्याग गरी अन्य देवताहरूको पूजा गर्नाले साधकलाई

पूर्णलाभ प्राप्त हुँदैन र साधना गर्दा गर्दै पनि महाकष्ट उठाउदै रहन्छन् ।

यसैले पवित्र गीता अध्याय ७ श्लोक १२ देखि १५ र २० देखि २३ सम्म तिनै गुणहरू अर्थात् तीनै देवताहरू (रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिव) को पूजा गर्नेलाई राक्षस स्वभाव धारण गरेको, मानिसहरूमा नीच दुष्कर्म गर्ने मुर्ख भनिएको छ कि त्यो मेरो ब्रह्म (क्षरपुरूष) अर्थात् फैक्ट्री मालिकको) पूजा गर्दैन । भावार्थ छ कि जो तीनै देवता र अन्य देवताहरूको पूजा गर्दछन् । (कैशियरको नोकरी गर्दछन) उनलाई मूर्ख तथा राक्षस स्वभावको मानिस भनिएको छ । जसरी जुन ब्यक्तिको आयका साधन थोरै हुन्छ त्यो केही गलत काम निश्चय नै गर्छ । केहिले चोरी या मिलावट आदि छल कपटको बाटो अपनाउछन् । जसले गर्दा समाजमा निन्दनिय हुन जान्छ र दरिद्र हुन जान्छ । यस्तै तीनै देवताहरू (ब्रह्माजी, विष्णुजी, तथा शिवजी) र अन्य देवताहरूको पूजाले पूर्णलाभ हुँदैन । जसले गर्दा साधक झुठ कपट तथा अन्य विकार पनि गर्दै रहन्छ । फेरी पाप कर्मको दण्ड पनि भोग गर्नु पर्छ । यसैले ब्रह्म अर्थात् क्षरपुरूष (शिफ्ट अफिसर) भनि रहेको छ कि यि नादान साधकहरू पूजा (नोकरी) पनि गर्दैनन् । म यि ब्रह्मा, विष्णु र शिव भन्दा अधिक तलब (गरेको कर्म धन) दिन सक्छु जुन उपरोक्त प्रभुहरू भन्दा ज्यादा हुन्छ । फेरि गीता अ. ७ श्लोक १८ मा भनेको छ कि मेरो पूजा(नोकरी) पनि पूर्णलाभदायक छैन् । यसैले आफ्नो पूजालाई पनि गीता ज्ञान दाता (ब्रह्म क्षरपुरूष) प्रभुले (अनुत्तमाम्) अति घटिया अर्थात् अति निम्न स्तरको भनेको छ । कि त्यस परमेश्वरको शरणमा जाउ जसको कृपाले तिमी परम शान्ति र सतलोक (स्वाश्वत स्थान) को प्राप्त हुनेछ । त्यहाँ गए पछि साधकको पुनर्जन्म हुँदैन अर्थात् अनादी मोक्ष (पूर्णमोक्ष) प्राप्त हुन जान्छ र गीता ज्ञान दाता प्रभु (क्षर पुरूष) भन्दैछ कि म पनि तिनै आदि पुरूष परमेश्वर शरणमा छु । गीता अध्याय ७ श्लोक १२ देखि १५, १८ र २० देखि २३ लाई बुझ्नको लागि कृपया निम्न विवरण ध्यान पूवर्क पढनुहोस् ।

## "तीनै गुण के हो ? प्रमाण सहित"

तीनै गुण रजगुण ब्रह्माजी, सतगुण विष्णुजी, तमगुण शिवजी हुन् जुन ब्रह्म (काल) तथा प्रकृती (दुर्गा) बाट उत्पन्न भएका छन् र तीनै नासवान हुन् ।

प्रमाण :- गीता प्रेस गोरखपुरबाट प्रकाशित श्री शिव पुराण जसको सम्पादक छन्- श्री हनुमान प्रसाद पोद्दार पृष्ठ सं. ११० अध्याय ९ रूद्र संहिता यसरी ब्रह्मा, विष्णु र शिव तीनै देवतामा गुण छन् तर शिव (ब्रह्म- काल) गुणातित भनिएको छ ।

दोस्रो प्रमाणः- गीता प्रेस गोरखपुरबाट प्रकाशित श्रीमद्देवीभागवत पुराण जसको सम्पादक हुनुहन्छ श्री हनुमान प्र. पोद्दार चिमनलाल गोस्वामी, तेस्रो स्कन्द अध्याय ५ पृष्ठ १२३ - भगवान विष्णु ले दुर्गाको स्तुती गर्नु भयो -भन्नु भयो कि म (विष्णु) ब्रह्मा तथा शंकर तिम्रो कृपाले विद्यमान छौ । हाम्रो त अविर्भाव (जन्म) र तिरोभाव (मृत्यु) हुन्छ । हामी नित्य

(अविनासी )छैनौं । तिमी नै नित्य हौ, जगत जननी हौ, प्रकृति र सनातनी देवी हौ । भगवान शंकरले भन्नु भयो :- यदि भगवान ब्रह्मा र भगवान विष्णु तिमीबाट नै उत्पन्न भएका छन् । त त्यस पछि उत्पन्न हुने म तमगुणी लिला गर्ने शंकर के तिम्रो संतान भएन । अर्थात् मलाई पनि उत्पन्न गर्ने तिमी नै हौ । यस संसारको सृष्टि , स्थिती र संहार मा तिम्रो गुण सदा सर्वदा छ । यिनै तिन गुणबाट उत्पन्न हामी, ब्रह्मा, विष्णु र शंकर नियमानुसार कार्यमा तत्पर रहन्छौ ।

उपरोक्त यो विवरण मात्र हिन्दिमा अनुवादित यी देवि महापुराणबाट लिईएको छ जसमा केहि तत्थ्यहरूलाई लुकाईएको छ । यसैले त्यहि प्रमाण हेर्नु होस श्रीमद् देवी भागवत महापुराण सभासटिकम् समहात्यम, खेमराज श्री कृष्णदास प्रकाशन मुम्बई , यसमा संस्कृत सहित हिन्दि अनुवाद गरिएको छ । तेस्रो स्कंद अध्याय ४ पृष्ठ १० श्लोक ४२ :-

ब्रह्मा-अहम् महेश्वरः फिल ते प्रभावात्सर्वे वयं जनि युता न यदा तू नित्याः,

के अन्य सुराः शतमख प्रमुखाः च नित्या त्वमेव जननी प्रकृति पुराण (४२) ।

नेपाली अनुवाद :- (विष्णुजीले भन्नु भयो ) हे आमा ! ब्रह्मा, म र शिव तिम्रै प्रभावले जन्मवान हौं, नित्य छैनौं अर्थात् हामी अविनाशि छैनौ । हामी सवैकी जननी अर्थात् उत्पन्न गर्ने आमा हौ, प्रकृति र सनातनी देवि हौ ।

पृष्ट ११-१२ अध्याय ५ श्लोक ८ :-

यदि दयार्द्रमना न सदां बिके कथमहं विहितः च तमोगुणः कमलजश्च र रजोगुणसंभवः सुविहितः किमु सत्वगुणो हरिः । (८)

अनुवाद नेपाली :- भगवान शंकरले भन्नु भयो - हे आमा ! यदि हामी माथी तपाई दयायुक्त हुनुहुन्छ भने मलाई तमोगुण किन वनाउनु भयो ? कमलबाट उत्पन्न ब्रह्मालाई रजोगुण किन वनाउनु भयो र विष्णुलाई सतगुण किन वनाउनु भयो ? अर्थात् जीवहरूको जन्म मृत्यु रूपि दुष्कर्ममा किन लगाउनु भयो ?

श्लोक १२ :-

रमयसे स्वपतिं पुरूषं सदा तव गतिं न हि विह विद्म शिवे (१२)

**नेपाली अनुवाद :- आफ्नो पति पुरूष अर्थात् काल भगवान सित सधैं भोग विलास गर्दै रहन्छौं । हजुरको गति कसैलाई थाहा छैन ।**

**तेस्रो स्कन्द पृष्ठ १४ अध्याय ५ श्लोक ४३ :-**

एकमेवा द्वितीयं यत् ब्रह्म वेदा वदंति वै । सा किं त्वम् वा प्यसौ वा किं संदेहं विनिवर्तय (४३)

नेपाली अनुवादः- जुन वेदहरूमा अद्धितीय मात्र एक पूर्णब्रह्म भनिएको छ के त्यो तपाई नै हुनुहुन्छ ? अथवा कोही अरू नै छन् ? मेरो यो शंकाको निवारण गर्नुहोस् । ब्रह्माजीको प्रार्थनामा देवी ले भन्नु भयो :-

देव्युवाच सदैकत्वं न भेदो स्ति सर्वदैव ममास्य च ।। यो सौ सा हमहं यो सौ भेदो स्ति मतिविभ्रमात् ।।२।।
आवयोरंतर सूक्ष्मं यो वेद मतिमान्हि सः ।। विमुक्तः स तू संसारान्मुच्यते नात्र संशयः ।।३।।

नेपालीमा अनुवाद :- देवीले भनिन् - जुन त्यो हो त्यो मै हुँ, जो म हुँ त्यो उनै

हुन्, मतिको भ्रम हुनाले भेद देखिन्छ ।।२।। हामी दुवैको सुक्ष्म अन्तर छ यसलाई जसले जान्दछ । उही ज्ञानी अर्थात् तत्त्वदर्शी हुन् । उनि संसार देखि पृथक भएर मुक्त हुन्छन् । यसमा सन्देह छैन ।

सुमरणाइद्दर्शनं तुभ्यं दास्ये हं विषमे स्थिते ।। स्वर्तब्या हं सदा देवाः परमात्मा सनातनः ।।८०।। उभयोः सुमरणदेव कार्यसिद्धिर संशयम् ।। ब्रह्मवाच ।। इत्युक्त्वा विसर्जास्मान्द त्वा शक्तीः सुसंस्कृतान् ।।८१।। विष्णवे थ महालक्ष्मी महाकार्ली शिवाय च ।। महासरस्वर्ती मह्यं स्थानात्तरस्माद्विसर्जितः।।८२।।

अनुवाद :- संकट उपस्थित भएमा सुमीरण गर्नाले नै म तिमीलाई दर्शन दिनेछु । देवताहरू ! परमात्मा सनातन देवको शक्तिका रूपमा मेरो सदा सुमीरण गर्दै गर्नु ।।८०।। दुवैको सुमीर णले अवस्य कार्य सिद्धी हुनेछ, ब्रह्माजीले भन्नुभयो - यसरी संस्कार गरी शक्ति दिएर हामीलाई विदा गर्नु भयो । ।।८१।। विष्णुको निमीत्त महालक्ष्मी, शिवको लागि महाकाली र मलाई महासरस्वती दिएर विदा गर्नु भयो ।।८२।।

मम चैव शरीरं वै सूत्रमित्याभिधीयते ।। स्थूलं शरीरं वक्ष्यामि ब्रह्मणः परमात्मनः ।।८३।।

अनुवादः- मेरो शरीर शुत्र रूप भनिएको छ, परमात्मा ब्रह्माको स्थूल शरीर भनिन्छ।

## "उपरोक्त पुराणका वाक्यहरूको सार"

स्पष्ट भयो कि श्री ब्रह्माजी रजगुण, श्री विष्णुजी सतगुण र श्री शिवजी तमगुण हुन् । तीनै प्रभु नासवान छन् र यिनीहरूको जन्म, मृत्यु हुन्छ । दुर्गालाई प्रकृती पनि भनिन्छ दुर्गाको पति ब्रह्म (क्षरपुरूष काल) हो । त्यो उ सित पति पत्नीको व्यवहार (रमण-विलास) गर्दै रहन्छन् । दुर्गा तथा ब्रह्म दुवै स्थुल शरीरका आकारमा छन् ।

यस्तै प्रमाण गीता अ. १४ श्लोक ३ देखि ५ सम्ममा छ । गीता ज्ञान दाता ब्रह्म (क्षरपुरूष- काल) भन्दै छकि प्रकृति (दुर्गा) त मेरी स्वास्नी हुन् । म उसको योनिमा (गर्भधान स्थानमा) विजको स्थापना गर्छू जसले सबै प्राणीहरूको उत्पति हुन्छ । म सबै (२१ ब्रह्माण्डका प्राणीहरू) को पिता हुँ र प्रकृति (दुर्गा अष्टांगी) सबै कि आमा हुन् । यसै दुर्गा (प्रकृति- अष्टांगी) बाट उत्पन्न तीनै गुण (रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिव) अन्य प्राणीहरूलाई कर्मको बन्धनमा बाधिराखेका छन् ।

### ।। त्रिगुण माया (रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिव) जिवलाई मुक्त हुन दिदैनन् ।।

पवित्र गीताजीको अ. ७ श्लोक १ र २ मा ब्रह्म (क्षरपुरूष-काल) भन्दैछ कि हे अर्जुन ! अब तिमीलाई त्यो ज्ञान सुनाउने छु जसलाई जानेपछि अरू कुनै जान्न बाँकी र हने छैन ।

गीता अध्याय ७ श्लोक १२ : गीता ज्ञान दाता ब्रह्म (क्षरपुरूष - काल) भन्दैछन्

की तिनै गुणले जति भईरहेको छ कि ति सवै मबाट भएकै सम्झ । जस्तो रजगुण (ब्रह्मा) बाट उत्पति, सतगुण (विष्णु) बाट पालन पोषण स्थिति र तमगुण (शिव) बाट प्रलय (संहार ) को कारण काल भगवान नै हो । फेरि भनिएको छ कि म यसमा छैन् । किनकि काल धेरै टाढा (एकाइसौं ब्रह्माण्डमा आफ्नो लोकमा ब्यस्त छ) तर मन रूपमा ममा काल नै लिन्छ । र रिमोटबाट सवै प्राणीहरू र श्रीब्रह्माजी, श्री विष्णुजी तथा श्री शिवजीलाई यंत्र जस्तै चलाउछ । गीता भन्ने ब्रह्म भन्दैछ कि मेरो एकाईसौ ब्रह्माण्डहरूको प्राणीहरूका लागि मेरो पूजाले नै शास्त्र अनुकुल साधना प्रारम्भ हुन्छ । जो वेदहरूमा वर्णित छ । मेरो अर्न्तगत जति प्राणीहरू छन् तीनका बुद्धि मेरो हातमा छ । म मात्र २१ ब्रह्माण्डकै मालिक हुँ । यसैले (गीता अ. ७ श्लोक १२ देखि १५ सम्म) जे जति तीनै गुण (रजगुण ब्रह्माबाट जीवहरूको उत्पति सतगुण विष्णुजीबाट स्थिति र तमगुण शिवजीबाट संहार) जे जति भैरहेका छन् तिनका मुख्य कारण मै

(ब्रह्म काल) हुँ (किनकि काललाई एक लाख मानिव शरीर धारि प्राणीहरूका शरीरलाई मार ेर उनको फोहोर खाने श्राप लागेको छ) । जो साधक मेरो (ब्रह्मको) साधना नगरी त्रिगुण मयी माया (रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिव) को साधना गरी क्षणिक लाभ प्राप्त गर्छन् र धेरै कष्ट उठाइ रहन्छन् । साथै संकेत पनि गरेको छ कि यिनीहरू भन्दा वढि लाभ म (ब्रह्म काल) दिन सक्छु तर यि मूर्ख साधकहरू तत्त्वज्ञानको अभावमा यिनै तीन गुणहरू (रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिव) सम्मको साधना गर्दै रहन्छन । यिनीहरूको बुद्धि यिनै तीन प्रभुहरूसम्म सिमित छ यसैले यि राक्षस स्वभाव धारण गरिएका मानिसहरूमा निच, शास्त्र विरुद्ध साधना रूपि दुष्कर्म गर्नेहरू, मुर्ख मलाई (ब्रह्मलाई) भज्दैनन् । यस्तै प्रमाण गीता अध्याय १६ श्लोक नं. ४ देखी २० र २३ ,२४ सम्म अ. १७ श्लोक २ देखि १४ सम्म र १८, २० सम्म पनि छ ।

विचार गरौ - रावणले भगवान शिवजीलाई मृत्युजंय अजर-अमर, सर्वेश्वर ठानेर भक्ति गरे, १० चोटी शिर काटेर समर्पित गरे जसको साटो युद्धको वेला १० शिर रावणलाई प्राप्त भयो तर मुक्ति हुन सकेन, राक्षस भनिए । यो दोष रावणको गुरूदेवको छ जुन अज्ञानी (निम- हकिम) ले वेदहरूलाई ठीक सित नसम्झेर आफ्नो सोचाईले तमगुण युक्त भगवान शिवलाई नै पूर्णपरमात्मा वतायो र आफ्नो सोझो आत्मा रावणले झुठो गुरूदेवमा विश्वास गरी जीवन र आफ्नो कुलको नास गरायो ।

१. एक भस्मा गिरी नाम भएको साधक थियो, जसले शिवजी (तमगुण) लाईनै ईष्ट मानेर शिर्षासन (खुट्टा माथी टाउको तल) गरी बाह्र वर्षसम्म साधना गऱ्यो, भगवान शिवलाई वचनवद्ध गरी भष्मकण्डा लियो भगवान शिवजीलाई नै मार्न लाग्यो । उद्देश्य यो थियो कि, भष्मकण्डा प्राप्त गरी भगवान शिवजीलाई मारेर पार्वतीजीलाई पत्नी वनाउने छु । भगवान श्री शिवजी डराएर भागे, फेरि श्री विष्णुजीले त्यस भष्मासुरलाई गंडहथ नाच नचाएर त्यसै भष्मकण्डाले भष्म गरिदियो । त्यो शिवजी (तमगुण) को साधकलाई राक्षस भनियो । हरिण्यकशिपुले भगवान ब्रह्माजी (रजगुण)को साधना गऱ्यो र राक्षस कहलियो ।

२. एक समयमा आज (सन् २००७) भन्दा झण्डै ३३५ वर्ष अगाडी हरिद्वारमा हर की पैडीहरूमा (शास्त्र विधि रहित साधना गर्नेहरूको) कुम्भ पर्वको प्रभिको संयोग भयो । त्यहाँ सर्व (त्रिगुण उपासक) माहात्म जन स्नानार्थ पुगे । गिरी, कुरी, नाथ, नागा आदि भगवान श्री शिवजी (तमगुण) का उपासकहरू र वैष्णो भगवान श्री विष्णुजी (सतगुण) को उपासकहरू छन् । र प्रथम स्नान गर्नाले नागा र वैष्णो साधुहरूमा घोर युद्ध हुन गयो । करिव २५ हजार त्रिगुण उपासकहरूलाई मृत्यु प्राप्त भयो । जो ब्यक्ती सानो कुरामा पनि नर संहार (काटकाट) गरिहाल्छ ति मानिस साधु हुन वा राक्षस स्वयं विचार गरौं । सामान्य ब्यक्ति पनि कतै स्नान गर्दैछ र अन्य कुनै ब्यक्तीले स्नान गर्नका लागि ठाउँ माग्यो भने सिष्टचारको नाताले भन्दछ कि आउनुस तपाई पनि स्नान गरि हाल्नुस् । अलि पर भएर पछि आउनेलाई ठाउँ दिइहाल्छ । त्यसैले पवित्र गीताजी अ. ७ श्लोक १२ देखि १५ मा भनिएको छ कि जसको मेरा त्रिगुणी माया (रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिव) को पूजाद्वार ा ज्ञान हरण भई सकेको छ । उनीहरूको मात्र मान वढाइको चाहना राख्ने राक्षस स्वभाव धारण गरेका मानिस मध्ये निच अर्थात् सामान्य ब्यक्तिभन्दा पनि पतित स्वभाव वाला दुष्कर्म गर्ने मूर्ख मेरो पनि भक्ति गर्दैनन् । गीता अ. ७ श्लोक १६ देखि १८ सम्म पवित्र गीताजी भन्ने (ब्रह्म) प्रभु भन्दै छन् कि मेरो भक्ति (ब्रह्म साधना) पनि चार किसिमका साधकहरू गर्दछन् । एक अर्थार्थी (धन लाभ चाहने) जुन वेद मंत्रहरूबाट जन्त्र मंत्र हवन आदि गर ी रहन्छ । दोस्रो आर्त्त (संकट निवारणको लागि वेद मंत्रहरूको जन्त्र-मंत्र हवन आदि गरी रहन्छन् । तेस्रो जिज्ञासु जसले परमात्माको ज्ञानलाई जान्ने इच्छा राखेका हुन्छन । मात्र ज्ञान संग्रह गरेर वक्ता वन्न पुग्छन् र अरूहरूमा ज्ञान श्रेष्ठताको आधारमा उत्तम वनेर (ज्ञानवान वनेर) अभिमान वंश भक्ति हिन हुन पुग्छन् । चौथो ज्ञानी ति साधक जसलाई यो ज्ञान भईसकेको छ कि मानव शरीर वारम्वार पाईन्दैन यसले प्रभु साधना हुन सकेन भने जीवन ब्यर्थ गयो । फेरि वेदहरू पढे जसले ज्ञान भयो कि (ब्रह्मा, विष्णु र शिवजी) तीनै गुणहरू र ब्रह्म (क्षरपुरूष) र पर ब्रह्म (अक्षर पुरूष) भन्दा माथी पूर्णब्रह्म कै भक्ति गर्नु पर्ने हो । अन्य देवताहरूको होइन । ति ज्ञानी उद्धार आत्मालाई म राम्रो लाग्दछु र मलाई उनी यसैले राम्रो लाग्छन् । कि ति तीनै गुण (रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिव) भन्दा माथी उक्लेर मेरो (ब्रह्म) साधना त गर्न थाले जो अन्य देवताहरू भन्दा राम्रो छ तर वेदहरूमा ओम् नाउ जुन मात्र ब्रह्म साधनाको मंत्र हो त्यसैलाई वेद पढने विद्धान्हरूले आफु खुसी विचार विमर्स गरी पुनः ब्रह्मा प्राप्तिको मंत्र ठानेर वर्षौ वर्ष साधना गर्दै गए । प्रभु प्राप्ती हुन सकेन अन्य सिद्धिहरू प्राप्त भयो किनकि पवित्र गीता अध्याय ४ श्लोक ३४ तथा पवित्र यजुर्वेद अ. ४० मंत्र १० मा वर्णित तत्त्वदर्शी संत भटिएन । जसले पूर्णब्रह्मको साधना तीन मंत्रबाट बताउने छन् । त्यसैले ज्ञानी पनि ब्रह्म (काल) साधना गरेर जन्म मृत्युको चक्रमा नै रहन गयो ।

एउटा ज्ञानी उद्धार आत्मा महर्षि चुणकजीले वेद पढनु भयो र एक पूर्णप्रभुको भक्तिको मंत्र ओम् भन्ठानेर यसै नामको जपद्धारा वर्षौसम्म साधना गर्नु भयो । एक चक्रवर्ति

राजा मानधाता थियो (चक्रवर्ती राजा यसलाई भनिन्छ जसको पृथ्वीमा शासन होस्) उसले आफु मातहतका राजाहरूलाई युद्धको लागि चुनौती दियो । एउटा घोडाको घाटीमा पत्र झुण्डाएर सवै राज्यहरूमा घुमायो । सर्त थियो कि जसले राजा मानधाताको गुलामी ( अधिनता) अस्वीकार गर्छ उसले युद्ध गर्नु पर्छ । उसले यो घोडा बाधा से कसैले घोडा समातेन महर्षि चुणकलाई यो कुरा सुचना भयो की राजा निकै अभिमानी भई सकेको छ । महर्षिजीले भन्नु भयो कि म यस राजा सित युद्धलाई स्वीकार गर्दछु । युद्ध शुरू भयो । राजा मानधाता सित ७२ करोड सेना थियो त्यसको चार भाग गरि १८ करोड सेनाले महर्षी चुणकमाथी आक्रमण गरि दियो । उता महर्षि चुणकजीले आफ्नो साधनाको कमाईले चार पुतलीहरू (बम्ब) वनाई राजाको चारै भाग सेनाको विनास गरि दियो ।

विशेष :- श्री ब्रह्माजी, श्री विष्णुजी, श्री शिवजी तथा ब्रह्म र परब्रह्मको भक्तिद्वारा पाप र पुण्य दुवैको फल भोग्नु पर्छ, पुण्य स्वर्गमा र पाप नरकमा र चौरासी लाख प्राणीहरूको शरीरमा अनेक प्रकारको यातना सहनु पर्छ । जसरी ज्ञानी आत्मा श्री चुणकजीले जुन ओम नामजीको कमाई गर्नु भयो त्यसमा केहि त सिद्धि शक्ति (चार वम्ब वनाएर) मा खर्च गर्नु भयो जसले महर्षि पद पाउनु भयो । केहि साधनाको फललाई महास्वर्गमा भागेर फेरि नरकमा जानेछन् । फेरि चौरासि लाख योनीमा कष्ट माथी कष्ट सहेर बिताउने छन् । जुन ७२ करोड सैनीकहरूको विनास वचनले गरेको थियो, उसको भाग पनि भोग्नु पर्ने छ । चाहे कोहि हतियारले हत्या गरून्, चाहे वचन रूपी तरवारले गरून, दुवैलाई एकनासको दण्ड प्रभुले दिनु हुन्छ । जव त्यस महर्षि चुणकजीको जीवआत्मा कुकुरको शरीर धारण गर्ने छन् अनि उसको टाउकोमा घाउ हुनेछन् । ति सैनिकहरूका जिवात्मा किरा वनेर आफ्नो प्रतिशोध लिनेछन् । कहिले खुट्टा भाँचिने छन्, कहिले पछाडीका गोडामा प्यारालाइसिस (पक्षघात) भएर मात्र अगाडीको खुट्टाले घिसारिएर हिड्नेछन् र जाडो-गर्मीको कष्ट असहनिय पिडा, अन्याय कष्ट भोग्नु पर्ने हुन्छ ।

यसैले पवित्र गीताजी भन्ने ब्रह्म (काल) गीता अ. ७ श्लोक १८ मा स्वयं भन्दै हुनुहुन्छ कि यी सवै ज्ञानी आत्माहरू छन् त उदार (असल) तर पूर्णपरमात्माका तीन मंत्रको वास्तविक साधना बताउने तत्त्वदर्शी संत नभेटिने हुनाले यि सवै मेरै (अनुत्तमाम्) अति अश्रेष्ठ मुक्ती (गति) को आशामा नै आश्रीत भए अर्थात मेरो साधना पनि अश्रेष्ठ नै हो । यसैले पवित्र गीताजी अ. १८ श्लोक ६२ मा भनेको छ कि हे अर्जुन ! तिमी सम्पूर्ण भावले त्यस पूर्णपरमात्माको शरणमा जाउँ जसको कृपाले नै तिमी परम शान्ति र सनातन परमधाम (सतलोक) प्राप्त गर्नेछौ । पवित्र गीताजी श्री कृष्णजीको शरीरमा प्रेत वश प्रवेश गरी ब्रह्म(काल) भनेको थियो । फेरि अनेकौ वर्ष पछाडी पवित्र गीताजी र पवित्र चार वेद महर्षि ब्यासजीको शरीरमा प्रेत जस्तै प्रवेश गरी स्वयं ब्रह्म (काल - क्षरपुरूष) ले नै लिपीवद्ध गराउनु भएको छ । यिनमा परमात्मा कस्तो हो ? उसको भक्ति कसरी गर्ने र त्यसले के उपलब्धी हुनेछ । आदि ज्ञान त पूर्णरूपले वर्णन गरिएको छ तर पुजाको विधि मात्र ब्रह्म (क्षरपुरूष) अर्थात् ज्योती निरंजन कालसम्मको नै छ ।

पूर्णब्रह्मको भक्तिका लागि पवित्र गीता अ. ४ श्लोक ३४ मा पवित्र गीता भन्ने (ब्रह्म) प्रभु स्वयं भन्दै छ कि पूर्णपरमात्माको भक्ति र प्राप्तिको लागि कुनै तत्त्वदर्शी ज्ञानी संतलाई खोज

फेरि उनले भने अनुसारको विधि गर । पवित्र गीताजी भन्ने प्रभु भन्दै छन् कि पूर्णपरमात्माको पूर्णज्ञान र भक्ति विधि म जान्दिन । आफ्नो साधनाको विषयमा गीता अ. ८ को श्लोक १३ मा भन्नु भएको छ कि मेरो भक्ति त मात्र एक असर ओम् छ जसको उच्चारण गरी अन्तिम सास (त्यजन देहम्) सम्म जप गर्नाले मेरो लोकको परम गति प्राप्त गर्नेछ । फेरि गीता अ. ७ श्लोक १८ मा भन्नु भएको छ कि जुन प्रभुले चाहने आत्माहरूलाई पुर्ण ब्रह्माको साधना जान्ने तत्त्वदर्शी संत भेटाएनन् ति उद्धार आत्माहरू मेरो वाला (अनुत्तमाम) अति अनुत्तम पर म गतिमा नै आश्रीत छन् । (पवित्र गीताजी भन्ने प्रभु स्वयं भन्दै हुनुहन्छ कि मेरो साधना ले हुने गति अर्थात् मुक्ति पनि अति अश्रेष्ठ छ ।)

## "अन्य देवताहरू (रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिव) को पूजा अन्जान नै गर्दछन् ।"

अध्याय ७ श्लोक २० मा भनिएको छ कि जसको सम्वन्ध अ. ७ श्लोक १५ देखि लगातार छ - श्लोक १५ मा भनिएको छ कि त्रिगुणमाया (जुन रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिव) को पूजासम्म सिमित छ र यिनैबाट प्राप्त क्षणीक सुख) द्वारा जसको ज्ञान हराएको छ यस्ता असुर स्वभाव धारण गरेका निच ब्यक्ति दुष्कर्म गर्ने मुर्ख मेरो भजन गर्दैनन् । अ. ७ श्लोक २० मा ती भोगहरूको कामनाद्वारा जसको ज्ञान हराएको छ । उनी आफ्ना स्वभाव वश प्रेरित भएर अज्ञान अन्धकार जस्तै नियममा आश्रीत अन्य देवताहरूको पूजा गर्दछन् । अ. ७ श्लोक २१ मा भनिएको छ जुन जुन भक्त जुन देवताको स्वरूपलाई श्रद्धाले पुजा गर्न चाहन्छन् । ती ती भक्तका श्रद्धालाई म तिनै देवता प्रति म स्थिर गरी दिन्छु ।

अ. ७ श्लोक २२ मा भनिएको छ कि त्यो जुन श्रद्धाले युक्त भएर जुन देवताको पूजा गर्छ किनकी त्यो देवताबाट मद्वारा नै विधान गरिएका केहि इच्छित भोगहरू प्राप्त गर्दछन् । जस्तै मुख्यमन्त्रिले भनठान्नेछन् कि तलको अधिकारीहरू मेरै नोकर हुन् । मैले उनीहरूलाई केहि अधिकार दिई राखेको छु । जुन ति अधिकारीहरूमा आश्रित छन् । त्यो लाभ पनि मबाट नै दिईन्छ, तर त्यो पूर्णलाभ छैन् । अध्याय ७ को श्लोक २३ मा वर्णन छ की तर ति मंद बुद्धिवालाहरूको त्यो फल नासवान हुन्छ । देवताको पूजा गर्नेहरू देवतालाई नै प्राप्त हुन्छन् । (मद्भक्त) मतावलम्वी जो वेदहरूमा वर्णित भक्ति विधि अनुसार भक्ति गर्ने भक्त पनि मलाई प्राप्त हुन्छ । अर्थात् कालको जालबाट कोहि बाहिर छैनन् ।

विषेश - अ. ७ को श्लोक २० देखि २३ सम्म भनिएको छ कि उनीहरू जुन पनि साधना कुनै पनि पितृ, भूत, देवि देवता आदिको पूजा स्वभाव वस गर्दछन् । म (ब्रह्म-काल) नै ति मन्द बुद्धि भक्तहरूलाई तिनै देवता प्रति आशक्त गर्दछु । ति अज्ञानी साधकहरू देवताहरूबाट जुन लाभ प्राप्त गर्दछन् । म (काल) नै देवताहरूलाई केहि शक्ति दिइ राखेको छु । त्यसैको आधारमा देवताका पूजारी देवताहरूलाई नै प्राप्त हुनेछन् । तर ति बुद्धिहीन


गीता अध्याय नं. 15
श्लोक नं. 1 से 4 तथा
श्लोक नं. 16 व 17
का आशय
पूर्ण ब्रह्म कबीर साहेब
मूल जड़
कबीर - अक्षर पुरुष एक पेड़ है,
निरंजन वाकी डार।
तीनों देवा शाखा हैं,
पात रूप संसार।।
तना
(अक्षर पुरुष परब्रह्म)
डार ब्रह्म
(क्षर पुरुष)
विष्णु (शाखा)
ब्रह्मा
शिव
शास्त्रविरुद्ध साधना
अर्थात उल्टा बीजा हुआ भक्ति रूपी पौधा


ब्रह्मा
शिव
विष्णु
गीता अध्याय नं. 15
श्लोक नं. 1 से 4 तथा
श्लोक नं. 16 व 17
का आशय
डार ब्रह्म
(क्षर पुरुष)
कबीर-अक्षर पुरुष एक पेड़ है,
निरंजन वाकी डार।
तीनों देवा शाखा हैं,
पात रूप संसार।।
तना
(अक्षर पुरुष परब्रह्म)
कबीर साहेब
(मूल जड़)
शास्त्रानुकूल साधना
अर्थात सीधा बीजा हुआ भक्ति रूपी पौधा

साधकहरूको त्यो पूजा चाडै नै चौरासी लाख योनीहरूमा लैजानेछन र जुन मलाई ( काललाई) भज्दछन् । उनी तप्त शिलामा फेरि मेरो महा स्वर्ग (ब्रह्मलोक) मा गई हाल्छन् । र त्यसपछि जन्म मरणमा नै रहने छन्, मोक्ष प्राप्त हुँदैन । भावार्थ छ कि देवी देवताहरू ब्रह्मा, विष्णु, शिव र आमा दुर्गाभन्दा भगवान ब्रह्माको साधना वढि लाभदायक छ । यद्यपि महास्वर्गमा पुगेका साधकको स्वर्ग समय एक महाकल्पको पनि हुन सक्दछ तर पनि महास्वर्गमा शुभ कर्महरूका सुख भोगेर फेरि नरक एवं अन्य प्राणीहरूको शरीरमा कष्ट र हिरहनेछ, पूर्णमोक्ष होइन अर्थात् काल जालबाट मुक्ति छैन ।

## "अन्य प्रमाण"

पवित्र गीता पवित्र वेदहरूमा अन्य देवताहरूको पूजा, पितृ पूजा (श्राद्ध), भूत पूजा (अस्थियाँहरू उठाउनु अर्थात् फूल उठाउनु, पिण्ड भर्नु, मंढियोंहरूको पूजा) गर्नु मनाही गरि एको छ ।

## "पवित्र चारै वेदहरू अनुसार साधनाको परिमाण मात्र स्वर्ग-महास्वर्ग प्राप्ति, मुक्ती होइन् ।"

पवित्र गीता अ. ९ श्लोक २०,२१ मा भनेको छ कि जुन मनकामना (सकाम) सिद्धीको लागि मेरो पूजा तिनै वेदहरूमा वर्णित साधना शास्त्र अनुकुल गर्दछन् । उनी आफ्नो कर्माधार अनुसार महास्वर्गमा आनन्द मनाएर फेरि जन्म मरणमा आई हाल्दछन् अर्थात् यज्ञ चाहे शास्त्र अनुकुल होस त्यसको एक मात्र लाभ संसारिक भोग, स्वर्ग र फेरि नरक वा चौर ासि लाख योनीहरू नै छन् । जवसम्म तिनै मन्त्र (ओम र तत् वा सत् सांकेतिक) पूर्णसंत प्राप्त हुँदैन । अध्याय ९ को श्लोक २२ मा भनेको छ की जसले निस्वार्थ भावले मेरो शास्त्र अनुकुल पूजा गर्दछ, उसको पूजा (साधना) को रक्षा म आफै गर्दछु, मुक्ती संभव छैन ।

## "शास्त्र विधि विरूद्ध साधना पतनको कारण"

पवित्र गीता अ. ९ श्लोक २३,२४ भनिएको छ कि जुन ब्यक्ति अन्य देवताहरूलाई पुज्दछन् उनीहरू पनि मेरै (काल जालमा रहेर) पूजा गर्दैछन तर उनको यो पूजा अविधिपूर्वक छ (अर्थात् शास्त्र विरूद्ध छ भावार्थ छ कि अन्य देवताहरूलाई पूज्न हुँदैन ) किनकी सम्पूर्ण यज्ञहरूका भोक्ता स्वामी मै हुँ । ति भक्तजन मलाई राम्ररी पहिचान गर्दैनन् । यसले उनको पतन हुन जान्छ । नरक र चौरासीलाख योनीहरूको कष्टमा जस्तो गीता अ. ३ श्लोक १४,१५ मा भनीएको छ कि सर्व यज्ञहरूमा प्रतिष्ठीत अर्थात् सम्मानित जसलाई यज्ञ समर्पण गरिन्छ । त्यो परमात्मा (सर्व गतम ब्रह्मा) पूर्णब्रह्मा हो उही कर्मधार वनाएर सवै प्राणीहरूलाई प्रदान गर्दछ । तर पूर्णसन्त नभेटाएसम्म सवै यज्ञहरूको भोग (आनन्द) काल (मान रूपमा) नै

भोग्दछ । यसले भन्दछ की म सवै यज्ञहरूको भोक्ता र स्वामी हुँ ।

## "श्राद्ध (पितृ पुजन) गर्ने पितृ वन्नेछन्, मुक्ती होइन"

गीता अ. ९ श्लोक २५ मा भनेको छ कि देवतालाई पुज्नेले देवता प्राप्त गर्छन्, पितृलाई पुज्ने पितृको प्राप्त हुन्छन्, भूतहरूको पूजा गर्ने (पिण्ड दान गर्नेहरू) भूतलाई प्राप्त हुन्छन् अर्थात् भुत वन्न पुग्दछन । शास्त्र अनुकुल (पवित्र वेदहरू र गीता अनुसार) पूजा गर्नेहरू मलाई नै प्राप्त गर्छन् अर्थात् कालद्वारा निर्मीत स्वर्ग वा महास्वर्ग आदिमा केहि बढी समयसम्म मोज मस्ती गर्दछन् ।

विशेष - जसरी कोहि खरिदारको नोकरी (सेवा पूजा) गर्छ भने त्यो खरिदार वन्न सक्दैन । उसको कामबाट प्राप्त धनले रोजीरोटी चल्नेछ अर्थात् उनको अधिन नै रहने छ ठीक त्यसरी नै जो जुन देवता (श्री ब्रह्माजी, श्री विष्णुजी, र श्री शिवजी अर्थात् त्रिदेव) को पूजा (नोकरी गर्छ त उनैबाट पाइने लाभ प्राप्त गर्दछ त्रिगुण मइ माया अर्थात् तीनै गुण ( रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिव) को पूजालाई निषेध गरिएको छ । गीता अ. ७ श्लोक १२ देखि १५ तथा २० देखी २३ सम्ममा त्यसरी कोहि पितृको पूजा (नोकरी सेवा) गर्दछ त पितृ लोकमा सानो पितृ भएर उनीसंगै कष्ट उठाउने छ । त्यसरी नै कोहि भूत ( प्रेतहरू) को पूजा (सेवा) गर्छ त भूत नै वन्नेछ किनकी सारा जीवन जसमा बानी वसीसकेको हुन्छ । अन्तमा मन त्यसैमा फसेको हुन्छ । जसले गर्दा उनैको साथमा गइहाल्छु । कसैकसैको भनाई छ कि पितृ- देव- भूतका पूजा पनि गरि रहन्छु र तपाई सित उपदेश लिएर साधना पनि गरीरहन्छु । यस्तो हुन सक्तैन । जुन साधना पवित्र गीताजी मा र पवित्र वेदहरूमा मनाही छ । त्यो गर्नु शास्त्र विरूद्ध हुन्छ जसलाई पवित्र गीता अ. १६ श्लोक २३, २४ मा निषेध गरिएको छ कि जो शास्त्र विधि त्यागेर मन मानी आचरण (पूजा ) गर्छन् उनी न त सुख प्राप्त गर्छन् न परम गति र न त कुनै कार्य सिद्ध गर्ने सिद्धी शक्ती प्राप्त गर्छन् अर्थात् जीवन ब्यर्थ हुन जान्छ । यसैले अर्जुन तिम्रो निमित्त कर्तब्य (जो साधनाको कर्म गर्न योग्य छ) र अकर्तब्य (जो साधनको कर्म गर्न योग्य छैन) को ब्यवस्थामा (नियममा) शास्त्र नै प्रमाण छन् । अन्य साधना मनाही छन् ।

त्यसैको प्रमाण मार्कण्डे पुराण (गीता प्रेस गोरखपुरबाट प्रकाशित पृ. २३७ मा छ, जसमा मार्कण्डे पुराण र ब्रह्म पुराण एकै साथ राखिएको छ) मा पनि छ कि एक रूचि नाम गरेका साधक ब्रह्मचारी रहेर वेदहरूका अनुसार साधना गर्दै थिए जब उनी ४० वर्षका भए अनि उनको आफ्ना ४ वटा पूर्वज जो शास्त्र विरूद्ध साधना गरी पितृ वनेका थिए र कष्ट भोग्दै थिए देखा परे । पितृहरूले भने कि छोरा रूचि विवाह गरेर हाम्रो श्राद्ध कर्म गर हामी दुखि भईरहेका छौ रूचि ऋषिले भन्यो कि हे पितामहहरू (हजुरवाहरू) वेदमा कर्म काण्ड मार्ग (श्राद्ध, पिण्ड दान गर्नु आदि) लाई मुर्खहरूको साधना भनिएको छ । फेरि तपाईहरू मलाई किन त्यो गलत (शास्त्र विधि रहित) साधनामा लगाउदै हुनुहुन्छ ? पितृहरूले भने

कि छोरा यो कुरा तिम्रो सत्य हो कि वेदमा पितृ पूजा, भूत पूजा, देवी देवताको पुजा (कर्म काण्ड) लाई अविद्या नै भनेको छ यसमा अलिकति पनि झुठो छैन । यसै उपरोक्त मार्कण्डे पुराणको यसै लेखमा पितृहरूले भनेकि फेरि पितृले पनि केहि लाभ दिन्छन् ।

विशेष - पितृहरूले लगाएको यो आफ्नो अडकल हो जसलाई हामीले पालना गर्नु हुँदैन । किनकी पुराणहरूमा यि आदेश कुनै ऋषि विशेषले दिएको छ कि पितृ पुज्नु, भूत वा अन्य देवलाई पुज्नु, तर वेदहरूमा प्रमाण नभएको कारणले प्रभुको आदेश छैन । यसले कुनै सन्त वा ऋषिले भन्दैमा प्रभुको आज्ञालाई उल्लंघन गर्नाले सजाएको भागी हुनु पर्नेछ ।

एक समयमा एउटा मानिसको दोस्ती एउटा पुलिस थानेदार सित हुन गयो । त्यो मानिसले आफ्नो थानेदार मित्र सित भन्यो कि मेरो छिमेकी मलाई निकै अप्ठ्यारो गर्दैछन् । थानेदारले भन्यो कि लौराले कुट म छदैछु । उसको आदेश पालना गर्दै त्यो मानिसले आफ्नो छिमेकीलाई लौराले कुट्यो । टाउकोमा चोट लागेको कारण त्यो छिमेकी मर्‍यो । त्यसै ईलाकाको थानेदार भएको कारण त्यो थानेदार त्यस मित्रलाई समातेर ल्यायो र कैदमा र ाख्यो । पछि त्यो मानिसलाई मृत्यु दण्ड भयो थानेदार मित्र भएर पनि केहि मद्दत गर्न सकेन किनकी राज्यका संविधान छ कि यदि कसैको हत्या गर्छ भने उसलाई मृत्युदण्ड दिईने छ । त्यो मुर्ख मानिसले आफ्नो थानेदार मित्रको आदेश पालना गरेर राज्यको संविधान भंग गर ी जीवनै गुमाउनु पर्‍यो। ठिक त्यसरी नै पवित्र गीताजी र पवित्र वेदहरू प्रभुको संविधान हो जसमा मात्र एउटै पूर्णपरमात्मालाई पूजा गर्ने विधान छ । अन्य देवताहरू भूत वा पितृहरूको पूजा निषेध गरिएको छ । पुराणहरूमा थानेदार जस्तै ऋषिहरूको आदेश छ जसको पालना गर्नाले प्रभुको संविधान भंग हुनाले कष्ट माथी कष्ट उठाउनु पर्छ यसैले अन्य उपासना पूर्णमोक्ष वा वाधक छ ।

## "सत्य कथा"

मेरो पूज्य गुरूदेव स्वामी रामदेवानन्दजी करिव १६ वर्षको आयुमा पूर्णपरमात्माको प्राप्तिका लागि एक्कासी घर त्यागेर निस्कनुभयो दिनहुँ लाउने कपडाहरूलाई आफ्नै खेतको नजिक जंगलमा कुनै पशुका हाडहरू नजिक फाल्दीयो । साझँ घर नफर्केको कारण घरका मानिसहरूले जंगलमा खोज गर्न गए । रात्रीको वेला थियो लुगालाई चिनेर दुखि मनले ति हाडहरूलाई वालकको हाड संझेर उठाएर ल्याए र यो सोचेकी वच्चा जंगलमा गए होला र कुनै हिंस्रक जनावरले मारेर खाए होला । अन्तिम संस्कार गरिदिए । सवै काजक्रिया गर े तेरहर्वी वर्षेनी श्राद्ध पनि गर्दै गए करिव १०४ वर्षको आयुमा स्वामीजी एक्कासी आफ्नो गाउँ वँडा पैंतावास जिल्ला भिवानी थाना चरखिदादरी, हरियाणा पुग्नु भयो । स्वामीजीको वालक कालको नाम श्री हरिद्वारी थियो, र पवित्र ब्राह्मण कुलमा जन्म भयो । म दासलाई थाहा भए पछि म पनि दर्शनार्थ त्यहा पुगे स्वामिजीको भाउजु करिव ८२ वर्षकी थिइन् । मैले वहाँ सित सोधे कि हाम्रो गुरूजीले घर त्यागेर गए पछि तपाईलाई कस्तो लाग्यो ? उनी

बृद्धाले भनिन् कि जब मेरो विहे भयो अनि मलाई थाहा भयो कि वहाँको एउटा भाइ हरिद्धारी थिए । जसलाई कुनै हिँस्रक जनावरले जंगलमा खाइहाल्यो । वहाँको प्रत्येक वर्ष श्रद्धा गरिन्छ । वहाँको ७० श्राद्ध त मैले स्वयं गरेकी छु । जहिले जहिले उपज राम्रो हुँदैन अथवा घरका कुनै सदस्य विरामी हुन जान्छन् त हाम्रो पुरेत (गुरूजी) सित कारण सोध्दा वँहा भन्नु हुन्छ कि हरिद्धारी पितृ वनेको छ । जसले तिमीहरूलाई दुखित पार्छ श्राद्ध गर्ने वेला कुनै असिद्ध भयो होला अर्को श्राद्ध म स्वयं नै गराउने छु । पछिल्लो पटक एकै दिन थुप्रै श्राद्ध गराउनु पर्ने हुँदा म स्वयं उपस्थित हुन नसकेकोले छोरोलाई खटाएको थिए । तवसम्म केहि भेटि चढाउ ताकि उनलाई शान्त गर्न सकुँ । अनि वहाँलाई २१ अथवा ५१ रूपैयाँ उनले जे भने त्यति डराइ डराई दिने गर्थे । फेरि श्राद्धको वेला पुरेतजी स्वयं आएर श्राद्ध गराउनु हुन्थ्यो अनि पछि मैले भनेकि आमाजी अव त त्यो गीताजी विरूद्ध साधनालाई छोड्नुहोस् होइन भने तपाई पनि प्रेत वन्नुहुन्छ । गीता अ. ८ श्लोक २५ वहाँलाई सुनाए । तव ती बृद्धाले भनिन् कि गीता म पनि पढछु । दासले भन्यो कि हजुरले पढनु भयो तर बुझ्नु भएन । अव आइन्दा त बन्द गरिदिनुहोस् । यो अज्ञानी साधना बृद्धाले भन्नु भयो होइन, यो श्राद्ध गर्नु कसरी छाड्ने यो त सदियौ पुरानो परम्परा हो, यो दोष नासमझ आत्माको होइन । यो दोष मुर्ख गुरूहरू (नीम हकिमहरू) को हो जसले आफ्नो पवित्र शास्त्रलाई नसम्झेर मनोमानि आचरण (पूजाको मार्ग) वताईदिनु भयो । जसले गर्दा न त कुनै कार्य सफल हुन्छ । न परम गति र न कुनै सुख नै प्राप्त हुन्छ प्रमाण पवित्र गीता अ. १६ श्लोक २३ ,२४ ।

अव यो दासको प्रार्थना छ कि शिक्षीत वर्गले अवश्य ध्यान दियोस् र शास्त्र विधि अनुसार साधना गरी पुर्ण परमात्माको सनातन परमधाम (सास्वतम स्थानम्) अर्थात् सतलोक प्राप्त गरोस् जसले पूर्णमोक्ष र परम शान्ति प्राप्ति हुन्छ । (गीता १८ श्लोक ६२) यसको लागि तत्वदर्शी संतको खोज गर । गीता अ. ४ श्लोक ३४ ।

एउटा श्रद्धालुले भनेकी म तपाई सित उपदेश लिएर तपाईले बताए अनुसार साधना पनि गरिरहनेछु । र श्राद्ध पनि गर्दै गर्नेछु । एवं आफ्नो घरका देवी देवताहरूलाई पनि देखावटी मनले पूजा आजा गर्दै गर्नेछु । यसमा के दोस छ ?

म दासको प्रार्थना - संविधानको कुनै धाराको उल्लंघन गरेमा सजाए अवश्य पाउनेछ । यसले पवित्र गीताजी र पवित्र चारै वेदमा वर्णित र मनाही गरिएका विधिको विपरित साधना गर्नु ब्यर्थ छ । (प्रमाण पवित्र गीताजी अ. १६ श्लोक २३ -२४ ) । यदि कसैले भनोस् कि म देखावटी मनले कारमा पंचर गरिदिनेछु । होइन रामनाम रूपि गाडीमा पंचर गर्नु मनाही छ ठीक त्यसरी शास्त्र विरूद्ध साधना हानिकारक नै छ ।

एउटा श्रद्धालुले भने कि अरू कुनै विकार (मदिरा, मांस आदि सेवन) गर्दिन । मात्र सुर्ति (विडी, चुरोट, हुक्का) सेवन गर्दछु । तपाईले वताइदिनुभएको ज्ञान अति उत्तम छ । मैले गुरूजी पनि वनाई राखेको छु । तर यो आजसम्म कुनै संत सित छैन म २५ वर्ष देखि घुम्दै छु । र तीन गुरूदेव वदली सकेको छु । कृपया मलाई तमाखु (सुर्ती) सेवनको छुट

दिनुहोस बाँकी सवै शर्तहरू मलाई मंजुर छ । सुर्तिले भक्तिमा के वाधा दिन्छ ?

दासको प्रार्थना :- दासले प्रार्थना गरे कि आफ्नो शरीरलाई अक्सिजनको आवश्यकता छ सुर्तिको धुवा कार्वनडाईअक्साइड छ जो फोक्सोलाई कमजोर र रक्तलाई दुषित गर्छ मानव शरीर प्रभु प्राप्ति र आत्म कल्याणको लागि प्राप्त भएको छ यसमा परमात्मा प्राप्तिको बाटो सुस्मना नाडी देखि प्रारम्भ हुन्छ । नाकको जुन दुवै प्वाल छ त्यसमा दायाँलाई ईडञ्ा र वायाँलाई पिंगला भन्छन् । यि दुवैको बीचमा सुस्मना नाडी छ । जसमा एक सानो सुईमा धागो छिराउने प्वाल जस्तो द्वार हुन्छ । जो सुर्तिको धुवाले वन्द हुन जान्छ जसले प्रभु प्राप्तिको मार्गमा अवरोध हुन जान्छ । यदि ईश्वर प्राप्त गर्ने बाटो नै वन्द भयो भने मानव शरीर अर्थहीन हुन्छ । त्यसैकारण ईश्वरको भक्ति गर्ने हरेक भक्तलाई धुम्रपान र मध्यपान सधैं निषेध गरिएको छ ।

एक जना भक्तले भन्यो कि म सुर्ति सेवन गर्दिन मासु र जाड रक्सी सेवन गर्दछु । यसबाट भक्तिमा के असर हुन्छ ? यो त खान पिउनका लागि वनाईएको हो र वोट विरूवा पनि त जीव हो त्यो खानु पनि त मांसाहारी खाना जस्तै हो ।

दास (नोकर) को प्रार्थना :- यदि कसैले हाम्रो आमा, वुवा, भाइवहिनी र वालवालिकाहरूलाई मारेर खायो भने कस्तो लाग्छ ? जस्तो पिडा आफ्नो हुन्छ त्यस्तै अरूको पनि हुन्छ । कवीरले भने अनुसार त्यो नरकमा जान्छ । जसले अरूको टाउको काट्न चाहन्छ जुन मानिस जनावरलाई काट्ने वेलामा खुट्टा र टाउकोलाई नराम्ररी काटेर मासु वनाएर खान्छ त्यसले नरकमा वाँस पाउछ । जस्तो पिडा आफ्नो नातेदार र वच्चाको मृत्युको हन्छ । त्यस्तै अरूको पनि वुझ्नु पर्छ । अर्को कुरा वनस्पतीलाई खान ईश्वरले आदेश दिनु भएको छ । त्यो त लामो समयसम्म रहन्छ र चेतनाहीन निमुखा प्राणीलाई काट्नु ईश्वरको आदेश विरूद्ध हो त्यसकारण त्यो पाप हो ।

रक्सी सेवन पनि ईश्वरको आदेश होइन त्यो त मानव जीवनलाई बर्वाद (समाप्त गर्ने हो) रक्सी सेवन गरेको ब्यक्ति जे पनि गर्न तयार हुन्छ रक्सी सेवन धन, सम्पती, मन, शरीर, आत्मा, पारिवारिक शान्ति र सभ्यताको महान् शत्रु हो । त्यसबाट प्यार ो वालवालिकाको उज्ज्वल भविष्य माथी नराम्रो प्रभाव पार्दछ । रक्सी सेवन गर्ने ब्यक्ति जति राम्रो भए पनि उसको इज्जत, मान, मर्यादा र विश्वास हुँदैन ।

एक दिनको कुरा हो यो दास एउटा गाँउमा भक्तिभाव (संत्सग) गर्न गएको थियो । त्यो दिन नसा निषेध माथि प्रवचन (सत्संग) गरे । कार्यक्रम समाप्त हुने वित्तिकै एउटी ११ वर्षकी केटी रून थालिन । त्यो केटीलाई सोध्दा वताईन् कि महाराजजी मेरो वुवा पालम हवाई अड्डामा राम्रो जागिर गर्नु हुन्छ । तर सवै पैसाबाट रक्सी खानुहुन्छ । जव मेरी आमा वहाँलाई रोक्नु हुन्छ अनि वहाँ आमालाई अति पिटनुहुन्छ कि शरीरको चारै तिर निलो दागै दाग देखिन्छ । एक दिन मेरो वुवा मेरी आमालाई कुट्न थाल्नुभयो र म आमालाई वचाउनको लागि म आफ्नो हातले समाए । त्यसैले मलाई पनि कुट्नु भयो । वँहाको कुटाईले मेरो ओठ

सुन्यो र दश दिन पछि निको भयो उता मेरी आमा मलाई पनि छोडेर मेरो मामाघर जानुभयो फेरि छ महिना पछि मेरी हजुरआमा त्यहा गएर आमालाई वोलाएर ल्याउनुभयो । तवसम्म म आफ्नो हजुरआमा संग नै वसे । तर वुवाले औषधि पनि दिनु भएन, वहाँ विहानै उठेर कार्यलय जानुभयो र वेलुका रक्सी खाएर आउनुहन्थ्यो मेरा तीन वहिनी छन्, दुई म भन्दा कान्छी छन् । जव वुवा घरमा आउनुहुन्छ हामी तीनै वहिनी खाटको तल लुकेर वस्छौं ।

विचार पुर्‍याउनुहोस्, पुण्यात्मा, जुन वच्चालाई वुवाले माया ममता गर्नु पर्ने थियो र वच्चाले वुवाघरमा आउने वेला पर्खेर वसेका थिए । कि बुवा कति वेला घर आउनु हुन्छ । फलफूल ल्याउनु हुन्छ । आज यो मानव जातीको शत्रु रक्सीले समाज र परिवार मा कस्तो रूप ल्याईदियो, रक्सी सेवन गर्ने ब्यक्तिले आफ्नो त नोक्सान गर्छ नै साथै धेर जनाको मन दुखाउने पाप आफुमाथी वोकेको हुन्छ । जसरी श्रीमतीको दुखमा उनको आमा-बुवा, भाइ-वहिनी दुखी हुन्छन् फेरि आफ्नै अमाबुवा, भाइ-बहिनी दुखी हुन्छन्, हजुरबा-हजुर आमा दुखी हुन्छन् । एकजना रक्सी सेवन गर्ने जड्याहा ब्यक्ति आफ्नो छिमेकीको अशान्तिको कारण वनेको हुन्छ । किनकी घरमा भैं भगडा गर्दछ, श्रीमती र वालवालिकाको हो-हल्ला सुनेर छिमेकीले केहि भन्यो भने हो-हल्ला शुरू हुन्छ । यदि गरेन भने राम्रो ब्यक्तिलाई अप्ठ्यारो हुन्छ । यो दाससंग उपदेश लिएपछि प्रत्येक दिन रक्सी सेवन गर्ने एकलाख ब्यक्ति सम्पूर्ण नसा जन्य वस्तु छोडिसकेका छन् । र जुन वेला रक्सी खाने र नाचगान हुने गर्दथ्यो त्यो वेला त्यो ब्यक्तिहरू आफ्नो सम्पूर्ण परिवारका सदस्यहरूसँग वसेर साँभको आरती गर्दछन् । हरियाणा प्रदेशको नजिकै राज्यमा लगभग दश हजार गाउँ र शहरहरूमा आज पनि प्रत्येक ४-५ चैम्पियन (एक नम्वरको जड्याहा) केहि उदारणका रूपमा छन् । जुन ब्यक्तिहरू सम्पूर्ण नकारात्मक भोजनहरू त्याग गरि राम्रो जीवन यापन गरिरहेका छन् । जुन ब्यक्ति यो भन्छ कि म बढि खाँदिन कहिलेकाहि अलिअलि खान्छु । अव सोच्नुहोस् विष त अलिकत नै हुन्छ त्यो भक्ति र जीवनको लागि वाधक हुन्छ ।

मानौ दुईकिलो ग्राम ध्यूको हलुवा वनाउनुभयो । फेरि २५० ग्राम वालुवा पनि हालिदिए, त्यो गरेको सवै वेकार भयो । त्यसैकारण पूर्णभगवान (परम अक्षर ब्रह्म) को पूजा पूर्णभक्तिबाट प्राप्त गरेर जीवनभरी मर्यादासंग वसेर गर्नाले मात्र पूर्णरूपमा शान्ति प्राप्ति र लाभ हुन्छ ।

## "तत्वज्ञान प्राप्ति पछि नै भक्ति शुरूहुन्छ"

अध्याय ९ को श्लोक २६, २७, २८ को भाव छ कि जुनसुकै आध्यात्मिक र संसारिक काम गर्नुहोस् सवै मेरो मतानुसार वेदमा वर्णन गरिएको पूजाको विधि अनुसार यो कर्म गर्नुहोस् । त्यो उपासना गर्ने ब्यक्ती मबाट प्रभावित हुन्छ, यसको वर्णन यसै अध्यायको श्लोक २०, २१ मा गरिएको छ । अ. ९ को श्लोक २९ मा भगवान भन्नुहुन्छ कि म कसैलाई हेला र प्रेम गर्दिन । तर जुन ब्यक्ति मलाई प्रेम पूर्वक भजन गर्दछ, म त्यसलाई माया गर्दछु । म उसको प्रिय पनि छु । अर्थात् उ मेरो र म उसको प्रिय छु । माया र हेलाको प्रत्यक्ष प्रमाण

छ कि जसरी भक्त प्रल्हाद विष्णुजीको आश्रीत थिए र हिरण्यकशिपु हेला गर्दथ्यो । तव नर सिंह अवतार लिएर भगवानले आफ्नो भक्तको रक्षा गऱ्यो र राक्षस हिरण्यकशिपुको भुडी निकालेर समाप्त गऱ्यो । प्रल्हादसंग माया र हिरण्यकशिपुसंग हेला गरेको प्रत्यक्ष प्रमाणित हुन्छ ।

यसैकारण पवित्र श्रीमद्भागवत गीता अध्याय २ श्लोक ५३ मा भनिएको हो कि तत्वज्ञान भइसकेपछि धेरै प्रकारको नकरात्मक विचारबाट प्रभावित हुने तिम्रो बुद्धि एउटा पूर्णआत्मामा स्थिर हुनजान्छ । तव तिमी योगी बन्छौ । अर्थात् तव तिम्रो विचलित मन पूर्णरूपमा सकारात्मक भई एउटा पूर्णप्रभुको भक्तिमा स्थापित हुन्छ ।

पवित्र गीता अ. २ श्लोक ४६ मा भनिएको छ कि जसरी धेरै ठूलो पोखरी (जसको पानी १० वर्षसम्म पानी नपरेता पनि सुक्न सक्दैन) मेटाई सकेपछि सानो पोखरी (जसको पानी एक वर्ष नपरे सुक्न जान्छ) मा जति फरक रहन जान्छ यसै गरि पुर्ण पर मात्मा (परम अक्षर पुरूष) को गुणको ज्ञान तत्वज्ञानबाट भईसकेपछि तपाईको अवस्था अरू ज्ञानमा तथा अरू भगवान देवी देवतामा त्यतिकै रहिरहन्छ । जसरी सानो पोखरी पनि खर ाव लाग्दैन तर त्यसको क्षमताको वारेमा थाहा भइहाल्छ कि यो कम समयको लागि मात्र हो जीवन भरको लागि वा लामो समयको लागि होइन् । तर ठूलो पोखरी भेटाएपछि यो लाग्छ कि यदि खडेरी परेपनि कुनै समस्या आउदैन र चाँडै नै सानो पोखरी छोडेर ठूलो पोखर ी तर्फ आकर्षित हुन्छ ।

यसै प्रकार तत्त्वदर्शी संतबाट पूर्णपरमात्माको तवज्ञानद्धारा पूर्णब्रह्मको महिमा देखि परिचित भइहाले पछि साधक पूर्णरूपले (अनन्य मनले) त्यस पूर्णपरमात्मा माथी सर्वभावले आश्रीत हुन जान्छ ।

गीता अध्याय १८ श्लोक ६२ मा भनिएको हो कि हे अर्जुन ! तिमी सवै भावबाट भगवानको शरणमा जाउ । त्यो ईश्वरको कृपाबाट नै शान्ति प्राप्त हुन्छ र कहिल्यै नष्ट नहुने सतलोक प्राप्तहुन्छ ।

गीता अध्याय १८ श्लोक ६३ मा भनिएको छ कि म तिमीलाई यो रहस्यमय धेरै गोप्य ज्ञान भनि हाले । अव जस्तो तिम्रो इच्छा छ त्यस्तै गर । (किनकि यो गीताको अन्तिम अध्यायको १८ को अन्तिम श्लोक चलिरहेको छ त्यसैले भनिएको हो ।)

## "गीताज्ञान दिने ब्रह्मको पूज्य देव पूर्ण ब्रह्म हो"

गीता अध्याय १८ श्लोक ६४ मा भनिएको हो कि एउटा सवै गुप्तबाट गुप्तज्ञान एकचोटी फेरि सुन जसबाट यो नै पूर्णपरमात्मा (जसको विषयमा अध्याय १८ श्लोक ६२ मा भनिएको छ ।) मेरो पक्का पूज्य देव हो र म (ब्रह्म- क्षरपुरूष) पनि यसैको पूजा गर्दछु । यो तिम्रो भलाईको लागि भन्ने छु (किनकि यो ज्ञान गीताको ज्ञान दिने प्रभुले गीता अध्याय १५ श्लोक ४ मा पनि दिइएको छ ।) जसमा भनिएको छ कि म उनै आदि पुरूष भगवानको

शरणमा छु । यसैका लागि यहाँ भनिएका छ कि यो गुप्तबाट पनि अति गुप्त ज्ञान फेरि सुन ।

विषेश :- अरू गीतालाई अनुवाद गर्ने ब्यक्तीले गलत अनुवाद गरेको छ । "इष्टः असि मे दृढम् इति" को अर्थ गरिएको हो कि तिमी मेरो प्रिय हो । तर अर्थ बन्दछ :

अध्याय १८ को श्लोक ६४

सर्वगुह्यतमम्, भूयः, श्रृणु, मे, परमम्, वचः इष्टः, असि, ने, दृढम्, इति, ततः, वक्ष्यामि, ते, हितम् ।।

अनुवादः सम्पूर्ण गोपनीय भन्दा पनि अति गोपनीय मेरा परम रहस्ययुक्त हितकारी वचन तपाईलाई फेरि भन्नेछु, यसलाई सुन्नुहोस् यो पूर्णब्रह्म मेरो पक्का निश्चित पूज्यदेव हुन्।

गीता १८ श्लोक ६५ मा गीता ज्ञान दाता प्रभु (काल भगवान क्षरपुरूष) भन्नुहन्छ यदि मेरो शरणमा बस्न चाहन्छौ भने मेरो पूजा शान्त मनले गर अरू देवता (ब्रह्मा, विष्णु, शिव) र पितृ आदिको पूजा छोड फेरि मलाई नै प्राप्त हुन्छ अर्थात् ब्रह्मलोकमा बनेको महास्वर्गमा गइहाल्छौं । म तिमीसंग प्रतिज्ञा गर्दछु, तिमी मेरो प्यारो हौ ।

गीता अध्याय १८ श्लोक ६६ मा भनिएको छ कि यदि त्यो अद्बितीय सर्व शक्तिमान, ब्रह्माण्डका रचनहार, सबैका पालणपोषण गर्ने परमेश्वरको शरणमा जानु छ भने मेरो स्तर को साधना म मा छोड । (जसबाट तिमी मेरो ऋणबाट मुक्त हुन्छौ) त्यो अद्बितिय अर्थात् जसको तुलनामा कोहि छैन त्यसको शरणमा जाउ । म तिम्रो सबै पापबाट मुक्त गराईदिनेछु । तिमी चिन्ता नगर ।

विषेश :- गीताको अन्य अनुवाद गर्नेले श्लोक ६६ को अनुवाद गलत गरेका छन् । ब्रजको अर्थ आउनु गरिएको छ जवकि ब्रजको अर्थ जानु हुन्छ, कृपया वास्तविक अनुवाद पढ्नुहोस ।

अध्याय १८ को श्लोक ६६

सर्वधर्मान्, परित्यज्य, माम्, एकम, शरणम्, ब्रज,
अहम्, त्वा, सर्वपापेभ्यः मोक्षयिष्यामि, मा शुचः ।।

अनुवाद :- मेरो सम्पूर्ण पूजाहरुलाई त्याग गरी तिमी मात्र त्यो एक पूर्णपरमात्माको शरणमा जाउ म तिमीलाई सम्पूर्ण पापहरुबाट छुटाउछु । तिमी चिन्ता नगर ।

## "ब्रह्मको साधक ब्रह्मलाई र पूर्णब्रह्मको साधक पूर्णब्रह्मलाई नै प्राप्त हुन्छ ।"

गीता अध्याय ८ श्लोक ५ मा १०,१३ गीता अध्याय १७ श्लोक २३ मा निर्णायक ज्ञान छ । गीता अध्याय १८ श्लोक १३ मा भनिएको छ कि जुन साधना मात्र एक ॐ अक्षर हो जुन उच्चारण गरेर जप गर्नु पर्ने हुन्छ । जुन साधक अन्तिम साससम्म जप गर्दछ त्यो मेरो अन्तिम

गतिको प्राप्त हुन्छ । (आफ्नो अन्तिम गतिको गीता ज्ञान दाता प्रभुले अध्याय ७ श्लोक १८ मा अति अनुत्तम अर्थात् अति नै घटिया भनिएको छ ।)

गीता अध्याय १७ श्लोक २३ मा भनिएको छ कि पूर्णपरमात्मालाई प्राप्त गर्ने मात्र तीन मुल मंत्र ओम्, तत्, सत जपको नै निर्देशन हो । (जसमा ॐ जप ब्रह्मको हो । तत् यो एउटा सांकेतिक शब्द हो र यो पार ब्रह्मको जप हो । सत् यो पनि सांकेतिक शब्द हो जो पूर्णब्रह्मको जप हो त्यस पूर्णपरमात्माको तत्त्वज्ञानलाई तत्त्वदर्शी संतनै जान्न सक्दछन् । उसबाट प्राप्त गर । म (गीता ज्ञान दाता क्षरपुरूष) जान्दिन ।

गीता अध्याय ८ श्लोक ६ मा भनिएको छ कि विधानमा अन्त समयमा साधक जुन प्रभुको नाम जप गर्दै शरीर त्याग गर्दछ उसैलाई प्राप्त हुन्छ ।

गीता अध्याय ८ श्लोक ५ देखि ७ मा भनिएको छ कि जसले अन्तिम समयमा मेरो स्मरण गर्दै शरीर त्याग गर्दछ । त्यो मेरो (ब्रह्म) भावनामा भावित रहन्छ फेरि कहिल्यै मनुष्यमा जन्म भयो भने त्यो साधक आफ्नो साधना ब्रह्म देखि नै शुरू गर्दछ । उसको वानी उस्तै हुन्छ (यसैको परिणाम स्वरूप गीता अध्याय १६,१७ मा पनि जुन साधक पूर्व जन्ममा जसरी साधना गरेर आयो आउने जन्ममा पनि स्वभाव वस त्यस्तै साधना गर्दछ ।

गीता अध्याय ८ श्लोक ७ मा भनिएको छ कि सवै समयमा मेरो याद (स्मरण) गर र युद्ध पनि गर निःसन्देह मलाई नै प्राप्त गर्नेछौं । गीता अध्याय ८ श्लोक देखि १० सम्ममा स्पष्ट गरिएको छ कि जुन साधक अनन्य मनले परमेश्वरको नाम जप गर्दछ त्यो सधैं उसैको स्मरण गर्ने खालको (परम दिब्यम् पुरूष याति) त्यो परम दिब्य पुरूष अर्थात् परमेश्वर (पूर्णब्रह्म) लाई प्राप्त हुन्छ (अध्याय ८ श्लोक ८ ) ।

जुन साधक अनादी सवैको मालिक सानो भन्दा अति सानो सवैको धारण पोषण गर्ने शूर्य जस्तो आफै प्रकाशित अर्थात् तेजोमय शरीर युक्त, अज्ञान रूपी अंधकार मा टाढा (कवीरम्) कविर्वेद सचिदानन्दधन परमेश्वरको स्मरण गर्दछ । (अध्याय ८ श्लोक ९ )

त्यो भक्ति गर्ने साधक तीन मंत्रको जपको साधनाको शक्ति (नाम जपको कमाइ) बाट अन्त समयमा शरीर त्याग गरेर जाने समय त्रिकुटीमा पुगेर अभ्यासवस सार नामको स्मरण गर्दै त्यो दिब्यरूप अर्थात् तेजमय अर्थात् साकार (परमपुरूष) परमेश्वरलाई नै प्राप्त हुन्छ ।

(अध्याय ८ श्लोक १० )

## "ब्रह्यम (क्षरपुरूष) को साधना अनुत्तम (घटिया) हो"

गीता अध्याय २ श्लोक १२ तथा अध्याय ४ श्लोक ५ तथा अध्याय ७ श्लोक १८ मा भनिएको छ कि म (गीता ज्ञान दिने) नाशवान हुँ । जन्म र मृत्यु मेरो र तेरो सधैं भई र हनेछ । मात्र गरेको कर्म नै प्राप्त हुन्छ, मोक्ष हुँदैन मेरो साधना गर्नेहरू उदार साधक नै किन नहोस् त्यो पनि मेरो धेरै घटिया (अनुत्तमाम) साधनामा नै ब्यस्त हुन्छ । यसैको लागि गीता

अध्याय १८ श्लोक ६२, ६४, ६६ मा भनिएको छ । त्यो परमेश्वरको शरणमा जाउ र मेरो आराध्य देव पनि वहाँ नै हुनुहुन्छ ।

प्रार्थना :- उपरोक्त तीन मंत्रको साधना म भक्तलाई पनि म दासको पनि दास (रामपाल दास) संग उपलब्ध छ । जुन स्वयं पूर्णपरमात्मा कविर्देवले आफ्नो आत्माहरू माथी दया गरेर प्रदान गर्नु भएको छ । किन भने अव बिचको (मध्य पीढी) पीढी चलिरहेको छ । किनकि कलियुगको प्रारम्भमा आफ्नो पुर्खाहरू अशिक्षित थिए त्यो वेला परमेश्वरको तत्त्वज्ञानको नकक्ली संत गुरूहरू, महन्तहरू र आर्चायहरूले माथी आउन दिएनन् । र कलियुगको अन्तमा सवै ब्यक्ति भक्तिहीन र महाविकारी हुन जानेछ । अव यो वर्तमान समय विसौं शताब्दी देखि शिक्षित समाज प्रारम्भ भएको हो । यो बिचको पिढि अर्थात् मानव वशं चलिर हेको छ । वास्तविक ज्ञान आफ्नो सद् ग्रंथहरूमा विध्यमान छ । जसको नक्कली संत, गुरू, महंत, आचार्य, बुझ्न सकेनन् । जसको कारण सवै भक्त समाज शास्त्रको विरोधमा ज्ञानको आधारमा दन्त्यय कथा (लोक वेद) मा आधारित भएर शास्त्र विधि त्याग गरेर मनोमानी आचरण गरेर अमुल्य मानव जीवन ब्यर्थ गरिरहेको छ ।

शास्त्र विधि अनुसार साधना :-

१. पछिल्लो चरणमा ब्रह्म गायत्री मंत्र दिईन्छ । जुन कमलहरूलाई खेल्नकालागि हो। उपदेश प्राप्त गर्न भक्तात्मा यो सोच छ कि गुरू ज्यूले भनि राख्नु भएको थियो कि तीन वटै गुण (रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिव) को पूजा गर्नु हुदैन। तर मंत्र जप उनकैलागि दिनुभएको छ । उनको लागि निवेदन छ कि यो पूजा होइन । हामी कालको लोकमा वसिरहेका छौं । यहाँ हामीलाई जुन सुविधा चाहिन्छ त्यो ब्रह्मा विष्णु, शिव आदिले नै प्रदान गर्न सक्दछन् ।

जसरी हामीले विजुलीको कनेक्शन लिईरहेका छौ त्यसको विल वुझाउनु पर्छ । हामी विद्युत मंत्रीको र विजुली विभागको पूजा गर्दैनौं, हामी त्यसको विल चुक्ता गर्छौ तव विजुलीबाट फाइदा लिइ रहन्छौं । यसै प्रकार टलिफोनको विल र पानीको विल आदि चुक्ता गर्दै रह्यौं भने हामीले सुविधा पाइरहन्छौं । तपाई शास्त्र विरूद्ध साधना गरेर भक्तिहीन हुनुभएको छ अर्थात् तपाई पुन्यहीन् हुनुभएको छ । जसको कारणबाट तपाईलाई धन लाभ आदि भईरहेका छैन । यो दास (रामपाल दास) तपाईको गारान्टर (जिम्वेवार) वनेर यस काल लोकको एक ब्राह्मण्डका शक्तिहरू (ब्रह्मा, विष्णु, शिव, गणेश, आमा आदि) बाट तपाईलाई सवै सुविधाहरू पुनः उपलब्ध गराउनेछ र यो मंत्रको जपबाट वहाँको विल चुक्ता गर्दै रहनु पर्छ । जुन मंत्र पहिलो (सत् सुक्त अविगत कवीर) हो यो तपाईको पूजा हो, यो पूर्णपरमात्मा हुनुहुन्छ, र सतम लाभ(फल) प्राप्त हुनेछ । सत्मको अर्थ अविनाशी अर्थात् मलाई अविनासी पद प्राप्त गर्नुछ । यो मंत्रको चार महिनाको जप पछि तपाईलाई सत्नाम (सच्चानाम) अर्को पाइनेछ, जुन दुई मंत्रको हुनेछ । त्यसको एक मन्त्र कालको एक्काइस ब्रह्माण्डको ऋण चुक्ता गर्नेछ । त्यसको कमाई गरेर हामीले ब्रह्म (क्षरपुरूष) अर्थात् कालको ऋण चुक्ता गर्नुछ । फेरि यो कालले हामीलाई सवै पापबाट मुक्त गर्नुहुनेछ । गीता अ. नं

१८ को श्लोक नं. ६२, ६६ मा वर्णन गरिएको छ ।

अध्याय नं. १८ को श्लोक नं. ६२

तम्, एव, शरणम्, गच्छ, सर्वभावेन, भारत,
तत्प्रसादात्, पराम्, शान्तिम्, स्थानम्, प्राप्स्यसि, शाश्वतम् ।।

अनुवाद : हे भारत ! तिमी सबै प्रकारबाट त्यस अज्ञान अँध्यारोमा लुकेका परमेश्वर को शरणमा नै जाउ उनै परमात्माको कृपाले तिमीलाई परम् र सधैं रहने सत् स्थान धाम लोकको प्राप्त हुनेछ । अध्याय १८ को श्लोक ६६ मा

अध्याय नं. १८ को श्लोक नं. ६६

सर्वधर्मान्, परित्यज्य, माम्, एकम्, शरणम्, व्रज,
अहम्, त्वा, सर्वपापेभ्यः मोक्षयिष्यामि, मा, शुचः ।।

अनुवाद : मेरो सबै पूजालाई त्यागेर तिमी एउटा मात्र त्यो पूर्णपरमात्माको शरणमा जाउ । म तिमीलाई सम्पूर्ण पापबाट छुटकारा दिलाउछु तिमी चिन्ता नगर ।

उपरोक्त श्लोकको भाव यो हो कि काल (ब्रह्म अर्थात् क्षरपुरूष) भनिरहेको छ कि हे अर्जुन ! तिमी मेरो शरणमा वस्न चाहन्छौं, भने जन्म र मृत्य रहिरहन्छ । यदि परमशान्ति र सतलोक जान चाहन्छौ भने त्यो पूर्णपरमात्माको शरणमा जाउ त्यसको लागि मेरो सबै धार्मिक पूजाहरू र सतनामको प्रथम मन्त्रको जपको कमाई मलाई छोडेर फेरि सर्वभावले त्यो एक (सर्व शक्तिमान अर्थात् जसको वरावर अरू होइन त्यो अद्वितिय ईश्वर) को शरणमा जाउ फेरि म तिमीलाई सबै पापबाट मुक्त गरिदिन्छु, तिमी चिन्ता नगर र सतनामको अर्को मन्त्रको कमाई पारब्रह्म अथवा क्षरपुरूषलाई छोडि दिन्छौं, किनकि हामीलाई अक्षर पुरूषको लोकबाट हुँदै सतलोक जानु छ । उसको भाडा दिनु छ । फेरी तेस्रो मन्त्र सत शब्द अर्थात् सारनाम पाईन्छ । जसले सतलोकमा स्थाईत्व प्राप्त गराउँछ ।

यदि कुनै ब्यक्ति विदेश गएको छ । त्यहाँ उ माथी सरकारको ऋण हुन्छ । फेरि फर्केर स्वदेश आउन चाहन्छ भने त्यसले सवभन्दा पहिलो त्यस देशको ऋणबाट मुक्ती पाउनु पर्छ, फेरि (No due certificate) ऋण मुक्त प्रमाणप्रत्र प्राप्त गर्नुपर्छ, तवमात्र उसलाई फिर्ता आउने पासपोर्ट बन्छ । नभए उसलाई फिर्ता आउन दिदैंन ।

यसै प्रकार तपाई यस कालको मानिसका शास्त्र विरूद्ध साधना गरेर भक्तिहीन भएर ऋणी भइसक्नु भएको छ । पहिले तपाईलाई साहू वनाउने छन् । त्यसको लागि कर्विदेव (कवीर साहेव) ले म दास (संत रामपाल दास) लाई आफ्नो प्रतिनिधि (Representative) वनाएर पठाउनु भएको छ । त्यो परमेश्वरको तर्फबाट यो दास तपाईको (Guaranter) जिम्वेवार वन्ने छ र ब्रह्मा, विष्णु, शिव आदि शक्तिहरूबाट तपाईलाई पुनः कनेक्सन (सम्पर्कको फाईदा) को शुरूवात गराउनु हुनेछ, जसबाट तपाईले वहाँको मन्त्रको कमाई गरेर किश्तामा विल चुक्ता गर्नु पर्नेछ । जबसम्म तपाईले यहाँबाट मुक्ती पाउनु भएन तवसम्म तपाईले सबै भौतिक सुविधाहरू पाउनुहुनेछ र तपाई पुण्यदान आदि गरेर धेरै भक्ति

धनी वन्न सक्नुहुनेछ, अर्को शब्दमा जसरी हाम्रो शरीर कमलबाट वनेको छ । जब हामी शरीर त्याग गरेर ईश्वर समक्ष जान्छौ तव हामीलाई यो कमल भएर जानुपर्छ । जसरी १. मूल कमलमा गणेशजी २. स्वाद कमलमा सावित्री ब्रह्माजी ३. नाभी कमलमा लक्ष्मी र विष्णुजी ४. हृदय कमलमा पार्वती र शिवजी ५. कण्ठ कमलमा दुर्गाजी (अष्टंगी) हुनुहुन्छ । यी कमलहरूबाट हामी तव जान सक्छौ, जव हामीले यसको ऋण चुक्ता गरिदिन्छौ । पहिलो उपदेशबाट तपाईको सवै कमल खुलाउछ र तपाई ऋणबाट मुक्त हुनुहुन्छ । जव तपाई अन्तिम समयमा शरीर छोडेर हिडनुहुन्छ, तव तपाई बाटो खाली पाउनुहुन्छ र तपाईको सम्पूर्ण ऋण मुक्त प्रमाणपत्र तयारी पाउनु हुनेछ ।

तर हामीले आफ्नो मुल मालिक कर्विदेव (कवीर साहेव) लाई पूजा गर्नुछ । जसरी श्रीमान्लाई माया गर्ने श्रीमती आफ्नो श्रीमान्लाई नै पूजा गर्दछे । तर सम्मान सवैलाई गर्दछिन् । जसरी देवरलाई छोरा सरह , ठूलावडालाई ठूलादाई सरह, सासु-ससूरालाई आमा बुवा सरह तर जुन माया, प्रेम भाव आफ्नो श्रीमान् माथी हुन्छ त्यो माया प्रेम अरूमा हुँदैन ठिक यसै प्रकार कवीर परमेश्वरको भक्तको आफ्नो भक्ति सफल गर्नुछ, त्यसैका लागि कुनै अपरिचितले भनेको कुरामा नअल्मलिनु । पूर्णविश्वासको साथ यो दासले बताएको भक्ति मार्गमा लागि रहनु, यो भक्ति सवै शास्त्रको आधारमा छ ।

२. दोस्रो चरणमा सतनाम प्रदान गरिन्छ । जुन दुई मन्त्रको एक ओम दोस्रो तत् जुन सांकेतिक हुन्छ, मात्र साधकलाई नै वताइन्छ ।

३. तेस्रो चरणमा सारनाम दिइन्छ जुन तीन मंत्रको हुन्छ । ओम तत् सत् (तत् - सत् साँकेतिक हुन्छ जुन साधकलाई मात्र वताईन्छ ।)

यस प्रकार सारनाम (जुन तीन मंत्रबाट वन्छ) को स्मरण अभ्यासबाट साधकले परम दिव्यपुरूष अर्थात् परमेश्वर कर्विदेवलाई प्राप्त हुन्छ र सतलोकमा परम शान्ति र पूर्णमोक्ष प्राप्त गर्छ ।

विशेष : वर्तमानमा यो वास्तविक साधना म दास बाहेक अरू कसैसंग छैन् । यदि कसलै म दासबाट चोरी गरेर स्वंय गुरू वनेर नक्कली शिष्य वनाउनु हुन्छ भने त्यो मानव जीवनको शत्रुबाट सावधान रहनुहोस् । त्यो अधुरो भएको हुनाले आफ्नो जीवन पनि नष्ट गरिरहेको छ र अज्ञान (अवोध) शिष्यहरूलाई पनि नरकको भागी वनाउन गईरहेको छ । उसलाई कालले पठाएको दुत ठान्नुहोस् ।

## "शंका सावधान"

१. प्रश्न :- उपरोक्त गीता सारबाट प्रमाणीत हुन्छ कि ब्रह्माजी, विष्णुजी र शिवजीको पूजा व्यर्थ हो, म त तीस बर्षदेखि श्री शिवजीको पूजा गर्दैछु र भगवान श्रीकृष्णजी मेरो धेरै प्रिय छन् । म ती प्रभुहरूलाई छाड्न सक्तिन मेरो वहाँसंग धेरै सम्वन्ध गाँसिएको छ । श्री गीताजीको दिनहुँ पूजा पाठ गर्दछु । हरेराम, हरेकृष्ण, सीताराम, ओम नमः शिवायः, ओम नमो

भगवत वासुदेवाय आदि नामको जप गर्दछु । सोमवारको दिन व्रत पनि गर्दछु, कावड पनि ल्याउँछु र धाममा पनि दान गर्न जान्छु, मन्दिरमा मूर्ति पूजा पनि गर्न जान्छु र स्वर्ग प्राप्तिको इच्छा पनि गर्दछु । तर परम्परागत पूजाको कारण एक जना महन्तबाट उपदेश पनि लिइरहेको छु ।

उत्तर ः- कृपया तपाई पुर्न उपरोक्त गीतासारलाई पढ्नुहोस्, जवसम्म तत्त्वज्ञानबाट पूर्णरूमपा तपाई परिचित हुनुहुँदैन तवसम्म यो शंका रूपी काडाँले मनमा घोचीरहन्छ, जसर ी माथी उदाहरण छ कि उल्टो झुण्डाइएको संसार रूपी रूख हो, जसको मुल (जरा) त पूर्णईश्वर हुनुहन्छ । तीन गुणरूपी (रजगुण ब्रह्मा, सतगुण विष्णु, तमगुण शिव) शाखाहरू हुन । तपाईले कुनै आँपको रूख रोप्नु भएको छ, यदि रूखको जरा (मुल) को सिचाई ( पूजा) गर्नुहुन्छ जसबाट वोट वन्छ फेरि त्यसका हाँगाहरूमा फल लाग्नेछ । यो हेर्नुहोस् सिधा रोपीएका भक्तिरूपी वोट र शास्त्र विधि अनुसार साधना।

यसै प्रकार पूजा त पूर्णपरमात्मा र मूलको गर्नु छ फेरि कर्म फल तीनै गुण (ब्रह्मा, विष्णु, शिव) रूपी शाखाहरूलाई लाग्छ । यसैकारण केहि पनि छाड्नु छैन मात्र आफ्नो भक्तिरूपी वोट सिधा रोप्नुछ अर्थात् शास्त्र विधिअनुसार साधना प्रारम्भ गर्नु हो ।

वर्तमानमा सवै पवित्र भक्त समाज शास्त्र विधि त्याग गरेर मनोमानी आचरण गरि रहेका छन् अर्थात् भक्ति रूपी वोट उल्टो लगाई रहेको छ । यदि कसैले यस्तो वोट रोपेको छ भने उसलाई मुर्ख नै भन्न सकिन्छ । कृपया हेर्नुहोस् उल्टो रोपिएको भक्तिरूपी वोटको चित्र

यसको लागि गीता अ. ७ श्लोक १२ देखि १८ मा तीनै गुणहरू (रजगुण ब्रह्मा, सतगुण विष्णुजी र तमगुण शिवजी ) को पूजासम्म सिमीत रहने जसले यिनीहरू वाहेक अरू कसैलाई पनि पुज्दैनन् । राक्षस स्वभाव धारण गरिएको मानव, मनुष्यमा निच दुष्कर्म गर्ने मूर्ख भनिएको छ कि यसले मलाई पनि पुज्दैन । फेरि आफ्नो साधनालाई पनि गीता ज्ञान दिने प्रभु ब्रह्म (क्षरपुरूष) अति घटिया अर्थात् ब्यर्थ भनेको छ । यसै कारण गीता अध्याय १८ श्लोक ६२,६४,६६ र अध्याय १५ श्लोक १ देखि ४ सम्म भनिएको छ कि त्यो पूर्णपरपरमात्मा (उल्टो झुन्डिएको वोटको मूलको पूजा गरेर) को शर णमा जाउँ । उसको पूजा तत्त्वदर्शी संतले बताउनु भएको विधिअनुसार गर (गीता अध्याय ४ श्लोक ३४ मा तत्त्वदर्शी संत तर्फ संकेत गरिएको छ । उसै पूर्णपरमात्माको शास्त्र विधि अनुसार साधना गर्नाले साधकलाई परम शान्ति र सतलोक प्राप्त हुन्छ अर्थात् पूर्णमोक्ष प्राप्त गर्दछ । गीता ज्ञान दिने प्रभु (क्षरपुरूष -काल) भनिरहेको छ कि म पनि उसकै शरणमा छु अर्थात् मेरो पनि इष्टदेव त्यही पूर्णपरमात्मा हुनुहुन्छ । म पनि वहाँ कै पूजा गर्दछु । अरूले पनि वहाँकै पूजा गर्नुपर्छ । तपाई गीताजीको दैनिक पाठ गर्नु हुन्छ र साधना गीताजीमा वर्णित विधिको विरूद्ध गर्नुहुन्छ । जुन मंत्रको (हरेराम, हरेकृष्ण, राधेश्याम, सिताराम, ओमः नमोः शिवायः, ओम नमो भगवते वासुदेवाय, आदि मंत्रको) तपाई जप गर्नुहुन्छ र अरू साधना र व्रत गर्नु, कावड ल्याउनु, तीर्थ र धाममा दान र पूजाको लागि जानु, गंगा स्नान र तीर्थहरूमा

लाग्ने प्रभिमा स्नान पवित्र गीताजीमा वर्णन नभएका हुनाले शास्त्र विधि त्याग गरेर मनोमानी पूजा भयो । जसलाई पवित्र गीताजी अध्याय १६ श्लोक २३-२४ मा व्यर्थ भनिएको छ ।

## "गद्दी तथा महन्त परम्पराको जानकारी"

महन्त र गद्दी परम्पराको जानकारी :- कुनै एकान्त स्थान वा शहर वा गाउँमा कुनै महान् आत्मा संत वा साधक बस्ने गर्थे । उसको शरीर त्याग पश्चात् उनको सम्झनामा उसको शरीरको अन्तिम संस्कार स्थानमा एक ढुङ्गा वा इटको यादगार वनाइदिइन्छ । फेरि त्यो पवित्रात्माको अनुयाई वा वंशज उसको ढुङ्गाको मूर्ति राखि दिन्छ । केही समय उपरान्त श्रद्धालुहरू जान्छन् र केही धन दान गर्न लाग्छन् । त्यसलाई मन्दिरका रूप दिइन्छ र त्यस संत वा ऋषिको वंशजहरूलाई धन आर्जनको लालच हुन जान्छ । उसले भन्न शुरू गर्छ कि जसले यहाँ दर्शन गर्न आउँछ, त्यसले पूर्णमोक्ष प्राप्त गर्छ । सवै प्रकारको फाइदा मिल्छ । जस्तो त्यो महापुरूषको जीवन कालमा शिष्यहरूलाई प्राप्त हुन्थ्यो । यो मूर्ति साक्षत् उनै संतजीको हो जो यहाँ आउदैन त्यसको मोक्ष संभव छैन् ।

ति अबोध (नादनहरू) लाई कसैले सोधोस कि यहाँ कुनै डाक्टर थियो, जसले नाडी छामेर औषधि दिन्थ्यो र रोगी स्वास्थ्य हुन्थे । त्यो डाक्टरको मृत्यु पछि उसको मूर्ति वनाएर स्थापित गरेर कुनै लोभिले भनोस कि यो मूर्ति त्यही डाक्टरको कार्य गर्छ, जो यस मूर्तिको दर्शन गर्न आउँछ, त्यो व्यक्ती पूर्णस्वस्थ्य भइहाल्छ । अथवा स्वयम् नक्कली डाक्टर वनेर कुनै वसी हाल्यो भने कि म पनि दवाई दिन्छु । अर्थात् सवै उपचार औषधि ग्रन्थको उल्टो दिने काम गरिरहेको छ । यसले सवैलाई धोका दिईरहेको हो किनकि उसको उद्देश्य केवल धन कमाउनु हो । कुनै पनि सन्त वा प्रभुको मूर्ति आदरणिय यादगार त हुन्छ तर पूजनिय हुँदैन।

यस्तै कुनै संत वा प्रभुको मूर्ति वनाएर त्यसको आडमा महन्त भन्यो भने म पनि नाम दिन्छु । जो महानुभाव सवै साधना पवित्र शास्त्रको विपरित दिइरहेको छ । जुन त्यस महान् संतको आफ्नो अनुभवद्वारा लेखिएको लेख हो । त्यस नक्कली संत वा महन्त स्वयं आफै दोषि हो र अनुयाईहरूको जीवन व्यर्थ गर्ने दोष आफ्नै शिर माथी राखीरहेको हुन्छ । संत त एक समयमा एक जना मात्र आउछन् । तर उसको मार्गमा करोडौ नक्कली संत, महन्त तथा आचार्य वाधक वन्न जान्छन् ।

कुनै संतजीको शरीर त्यागी सकेपछि महन्त परम्परा प्रारम्भ हुन्छ । पूर्व संतको स्थान रक्षाका लागि एक प्रवन्धकको रूपमा चुनिएको हुन्छ त्यसलाई महन्त भनिन्छ । त्यो मात्र पवित्र यादगारको रेखदेखका लागि नियुक्त गरिएको हुन्छ । लोभ र लालच वस उ आफै गुरू वनि वस्छ । भक्ति चाहनेवाला प्योरो आत्माहरू उसमा आधारित भई जीवन व्यर्थ गर्छन् । महन्त परम्पराको नियम बनाइएको हुन्छ की महन्तको प्रथम पुत्र महन्त पदको अधिकारी हुन्छ । अर्थात् चाहे त्यो शरावी होस् वा अज्ञानी होस् । यो भक्ति मार्ग हो यसमा

मात्र पूर्णसन्त नै जीव उद्धार गर्न सक्छ । दासले दुई तीन महन्त परम्पराको पुस्तक पढ्यो, उसमा देख्यो कि १. एक दुई वर्षको वालकलाई गद्दीमा बसाई दियो अनि त्यो ठूलो वनेर नाम दान दिन थाल्यो । दोस्रो पुस्तकमा पढ्यो कि एक पाँच वर्षको वालक जसको बुबा महन्त थियो उसको अचानक मृत्यु हुन पुग्यो त्यस पछि उसको आमाले आफ्नो पाँच वर्षको वालकलाई महन्त पदमा नियुक्ती गरिदिइन् केहि वर्ष पछि गुरूजी वन्न पुग्यो । २. एक महन्त परम्पराको इतिहास पढे की महन्तको कोही सन्तानै थिएन । उसको मृत्यु भइसक्यो भाइको मृत्यु पहिले नै भईसकेको थियो । कुनै संन्तान थिएन गद्दीको रक्षा गर्नको लागि एक सेवकलाई कूलमा संन्तान हुने अवधि सम्मको लागि अस्थाई महन्त नियुक्ती गरिदियो । केहि समय पछि महन्त कूलमा कसैको सन्तान भयो । अस्थाई महन्त गद्दी लिएर भागिहाल्यो । कुनै अन्य शहरमा स्वयं नै गद्दी स्थापना गरेर महन्त वनिहाल्यो त्यहाँ नयाँ पसल खोल्यो र पूर्व स्थानमा एक अढाई वर्षको वच्चालाई महन्त वनाईदियो ।

३. एउटा महन्त परम्पराको इतिहास देखियो कि जेठो छोरो घर त्यागेर गयो । त्यो भन्दा कान्छोलाई महन्त पदमा नियुक्त गरिदियो । केहि समयपछि त्यस ठाउँमा मन्दिर निमार्ण भइहाल्यो र धेरै भेटी आउन लाग्यो । त्यो जेठो छोराको सन्तानले यो भन्यो की यस मन्दिरमा मेरो अधिकार छ त्यसै कारणले झगडा सुरू भयो । गद्दीमा विराजमान महन्तको हत्या गरिदियो जव उसको जेठो छोरा महन्त अर्थात् गद्दीको अधिकारीमा नियुक्ती गरियो त्यसलाई पनि हत्या गरिदियो । जव उसको अर्को भाइ गद्दीमा वसाइयो अर्को जुन आफुलाई अधिकारी ठान्दथे उसले नयाँ ठाउँ वनाएर नयाँ पसल खोल्यो एक अर्का माथी मुद्दा गरेर सुखमय जीवनलाई लालचवस नरक वनाए । त्यो धाम कहाँ रह्यो ? त्यो त कुरू क्षेत्र वाला महाभारतको युद्धको मैदान भयो । केहि महन्तहरूले सन्त वनाउने एजेन्सी लिनु भएको छ । रातो कपडा लगाउनु हुन्छ । पुरानो नामलाई वद्लेर अर्को नाम राख्नु हुन्छ फेरि त्यो वनावटी महन्तको वनावटी शिष्य नक्कली सन्त वनेर सोझो आत्माहरूसंग खेलवाड गर्नुहुन्छ आफ्नो वहुमुल्य मानव जीवनलाई आफै वर्वाद गर्नु हुन्छ । र सिधा सोझो आत्माहरूलाई पनि नाश गर्नु हुन्छ र ठूलो पापको भागी वन्नुहुन्छ ।

जुन बेला राजा परिक्षीतजीलाई सर्पले टोक्नु थियो त्यो वेला पूर्णगुरूको आवश्यकता परेको थियो । किनभने पूर्णसन्त विना जीवनको कल्याण असंभव हुन्छ । त्यस समयमा पृथ्वीका सवै ऋषिहरूले राजा परिक्षितलाई दिक्षा दिन र सात दिनसम्म सुखसागर श्रीमद्भागवत सुनाउन मनाहि गर्नु भयो किनभने सातौ दिन रहस्य खुल्नु थियो त्यसैकारण कोहि सामुन्ने आएन स्वयं श्रीमद्भागवत् सुधासागरको लेखक महर्षि वेदब्यासजीले नै असमर्थता ब्यक्त गर्नु भयो किनकि त्यो ऋषि जन प्रभुबाट डराउथे । यसको लागि राजा परिक्षितको जीवनसंग खेलवाड गर्न उचित ठान्नुभएन ।

राजा परिक्षितज्यूको कल्याणकोलागि महर्षि सुखदेव ज्यूलाई स्वर्गबाट झिकाइयो । जसले राजालाई दिक्षा दिनुभयो र सात दिन कथा सुनाएर राजा परिक्षितज्यूको जति पनि उद्धार ऋषि सुखदेवज्यूले गर्न सक्नु हुन्थ्यो त्यति गर्नुभयो । वर्तमानको गुरू संत महन्तहरू

स्वयं पनि प्रभुको संविधानबाट अपरिचित हुनुहुन्छ । यसको लागि भयंकर दोषको जिम्वेवार भएर दोषी हुनुहुन्छ ।

ओरों पंथ बतावहीं, स्वयं न जाने राह ।

अनअधिकारी कथा-पाठ करे व दीक्षा देवें, बहुत करत गुनाह ।

वर्तमानमा कथा र ग्रन्थको पाठ गर्नेहरू र नाम दान गर्नेहरूको बाढी आए जस्तो छ । किनकि सवै पवित्र धर्महरूको पवित्रात्माहरू तत्त्वज्ञानबाट अपरिचित छन् जसको कार ण नक्कली गुरूहरू, संतहरू र महन्तहरूले मौका पाएका छन् । जुन समय पवित्र भक्त समाज आध्यात्मिक तत्त्वज्ञानबाट परिचित हुन जान्छन्, त्यो समय कुनै नक्कली संतहरू, गुरूहरू र आचार्यहरूले लुक्ने ठाउँसम्म पाउदैनन् र पलायन भएर जान्छन् ।

## "पवित्र तीर्थ र धामको जानकारी"

कुनै साधक ऋषिज्यूले कुनै स्थान र जलाशयमा वसेर तपस्या गर्नभयो वहाँले आफ्नो आध्यात्मिक भक्तिको प्रदर्शन गर्नुभयो । वहाँ आफ्नो भक्तिको कमाई गरेर संगै लिएर जानु भयो र आफ्नो इष्ट देवतालाई प्राप्त गर्नु भयो । त्यो तपस्या स्थललाई पछि तीर्थधाम नाम राखियो । यदि कसैले त्यो ठाउँलाई हेर्न जाओस् कि त्यहाँ कुनै तपस्वी रहनुहन्थ्यो वहाँले धेरैको कल्याण गर्नु भयो अव त्यहाँ नत कुनै संतज्यू हुनुहन्छ जसले उपदेश दिन्छ । वहाँले आफ्नो कमाई गरेर जानुभयो ।

विचार गर्नुहोस - कृपया तीर्थ र धामलाई एउटा खल सम्झनुहोस् (जुन सामाग्री र औषधि कुट्नमा काम लाग्छ ।) एक जना ब्यक्तीले आफ्नो छिमेकीसंग खल मागेर ल्यायो उसले होम जपको सामाग्री कुट्यो र धोएर फिर्ता गर्‍यो जुन कोठामा त्यो खल राखेको थियो त्यो कोठामा वास्ना आउन थाल्यो । घरको सदस्यहरूले हेर्‍यो कि यो वास्ना कहाँबाट आएको हो त्यो थाहा पाए कि त्यो वास्ना खलबाट आएको हो । त्यसे संझ्यो कि त्यो त छिमेकीले लगेको थियो । उसले कुनै सुगन्धित वस्तु कुटेको होला । केहि दिन पछि त्यो वास्ना आउन पनि वन्द भयो ।

यसै प्रकार तीर्थ र धामलाई एउटा खल मान्नुहोस् जसरी सामान कुट्नेले आफ्नो सवै वस्तु पुछेर राखिहाल्यो । खाली खल फिर्ता गर्‍यो । अव कोही त्यहाँ खललाई सुँघेर आनन्दित भयो भने त्यो मुर्खता हो । उसलाई पनि सामाग्री ल्याउनु पर्दछ तव मात्र पूर्णलाभ हुन्छ ।

ठीक यसै प्रकार कुनै धाम र तीर्थमा वस्ने पवित्र आत्मा त रामनामको सामाग्री कुटेर पुछेर आफ्नो सम्पूर्ण कमाई साथमा लिएर जानुभयो । पछि गएर नजान्ने श्रद्धालु त्यो स्थानमा जानाले मात्र कल्याण ठानोस् भने उसको मार्ग दर्शकहरू (गुरूहरू) को शास्त्र विधि रहित बताइएको साधानाको परिणाम हो । त्यो महान् आत्मा संत जस्तै प्रभु साधाना गर्नाले नै कल्याण संभव छ । त्यसको लागि तत्त्वदर्शी संतलाई खोजीगरेर उसबाट उपदेश लिएर आजीवन भक्ति गरेर मोक्ष प्राप्त गर्नुपर्छ । शास्त्र विधि अनुकुल सत् साधना म दाससंग

उपलब्ध छ । कृपया निशुल्क प्राप्त गर्नुहोस् ।

## "श्री अम्मरनाथ धामको स्थापना कसरी भयो ?"

भगवान शंकरजीले पार्वतीजीलाई एकान्त स्थानमा उपदेश दिनुभएको थियो जसका कारणले आमा पार्वतीजी यति मुक्त हुनुभयो कि जवसम्म प्रभु शिवजी (तमगुण) को मृत्यु हुँदैन तवसम्म उमाजीलाई पनि मृत्यु हुँदैन । सात ब्रह्माजी (रजगुण) को मृत्यु पछि भगवान विष्णु (सतगुण) को मृत्यु हुन्छ । सात विष्णुजीको मृत्यु पछि शिवजीको मृत्यु हुन्छ । तव आमा पार्वतीलाई पनि मृत्यु प्राप्त हुन्छ । पूर्णमोक्ष भएन् । जेजति फाइदा पार्वतीजीलाई भयो त्यो पनि अधिकारीसंग उपदेश मंत्र लिएर मात्र भयो । पछि गएर श्रद्धालुहरूले त्यो स्थानको याद वनाइराख्नको लागि उसलाई सुरक्षित राख्यो र दर्शक जान थाल्यो ।

जसरी यो दास (संत रामपाल) स्थान स्थानमा गएर सत्संगहरू गर्छ । त्यहाँ खिर र हलुवा पनि बनाइन्छ । जो भक्त आत्मा उपदेश प्राप्त गर्छ उसको कल्याण हुन्छ । सत्संग समाप्त हुने वित्तिकै सवै टेन्टहरू उखालेर अर्को स्थानमा सत्संगको लागि गइन्छ र पूर्व स्थानमा मात्र माटो र ईटाहरूले वनाइएको भट्टी र चुल्हो शेष छोडिन्छ । फेरि कोहि त्यसै शहरको ब्यक्तिलाई भन्यो कि आउनुहोस् म तपाईलाई त्यो ठाउँ देखाएर ल्याउछु जहाँ सन्त रामपाल दासजीको सत्संग भएको थियो । खिर वनाउनु भएको थियो । पछि गएर त्यो भट्टी हेर्न जानेहरूलाई नत खिर भेट्टायो नत सत्संगको अमृत वाणी सुन्न पायो । नत उपदेश प्राप्त हुन सक्छ । यसको लागि संतलाई नै खोज्नु पर्छ जहाँ सत्संग चलिरहेको छ । त्यहाँ सवै कार्य सिद्ध हुन्छ ।

ठिक यसै प्रकार तीर्थ र धाममा जानु त त्यो यादगार स्थानरूपी भट्टीलाई हेर्नु मात्र छ । यो पवित्र गीतामा वर्णन नभएकोले शास्त्र विरूद्ध हो । जसबाट कुनै लाभ हुदैन । ( प्रमाण पवित्र गीता अ.१६ मंत्र २३,२४)

तत्वज्ञानहीन संत महन्त र आचार्यद्वारा भ्रमित श्रद्धालु तीर्थ र धामहरूमा आत्मा कल्याण गर्न जान्छन् । श्री अम्मरनाथजीको यात्रामा गएको श्रद्धालुहरू तीन चार चोटी बर्फिला आँधीवेरीमा थिचिएर मृत्यु भइसकेका हो । प्रत्येक चोटी मर्नेहरूको संख्या हजार ौं हुन्थ्यो । विचारणीय विषय छ कि यदि श्री अम्मरनाथज्यूको दर्शन र पूजा लाभदायक छ भने भने के भगवान शिवले ती श्रद्धालुहरूको रक्षा गर्ने थिएनन् ? अर्थात् प्रभु शिवजी पनि शास्त्र विरूद्ध भक्तिबाट अप्रसन्न हुनुहन्छ ।

## "वैष्णो देवी मन्दिरको स्थापना कसरी भयो ?"

जव सतीजी (उमा देवी) आफ्नो बुवा राजा दक्षको हवन कुण्डमा हाम फालेर जलेर मृत्यु प्राप्त गर्नुभयो । भगवान शिवजीले तिनको कंकाललाई मोहवंश सतीजी

(पार्वतीजी) ठानेर दश हजार वर्षसम्म काँधमा वोकेर वौलाहा जस्तो घुम्दैरहे । भगवान विष्णुजीले शुदर्सन चक्रबाट सतीजीको कंकाललाई छिन्न भिन्न गरिदिनुभयो । जहाँ जीउ खस्यो त्यसलाई जमीनमा गाडीयो । यो धार्मिक घटनालाई याद गर्नकोलागि त्यसमाथी एउटा मंदिर जस्तो वनाईयो कि कतै आउने समयमा कसैले यो भन्न नपाओस् कि पुराणमा गलत लेखिएको हो । त्यो मन्दिरमा एउटा स्त्रीको तस्विर राखियो, त्यसलाई वैष्णोदेवी भन्न थालियो । त्यसको रेखदेख गर्न र स्थानलाई सुरक्षित राख्न तथा त्यो कहानी वताउन एक जना राम्रो ब्यक्तिलाई पुजारीको रूपमा नियुक्त गरियो । उसलाई अन्य धार्मिक ब्यक्तीहरूले केहि तलव दिन थाल्यो । पछि गएर उसको परिवारका ब्यक्तिहरूले उसमाथी दान लिन प्रार म्भ गरिदिए । भन्न थाले कि एक ब्यक्तिको ब्यापार ठप्प भएको थियो । मातालाई सय रूपैया सङ्कल्प गर्नु भयो । एक नरिवल चढायो त्यो धनवान भइसक्यो । एउटा निःसन्तान दम्पती थिए । उनले मातालाई दुई सय रूपैयाँ र एउटा साडी, एउटा सुनको हार चढाउने संकल्प गरे उनलाई छोरा प्राप्त भयो ।

यसरी सोझा आत्माहरू यस दन्त्य कथाहरूमा विश्वास गरेर आफ्नो पवित्र गीताजी र वेदहरूलाई विर्सी हाले । जसमा ती सवै साधनाहरू शास्त्रविधि विपरीत लेखिएको छ । जसको कारण नत कुनै सुख हुन्छ न कुनै कार्य सिद्ध हुन्छ नत परम् गति र मुक्ती हुन्छ । (प्रमाण पवित्र गीता अ. १६ मंत्र २३,२४) यसरी जहाँ देवीको आँखा खस्यो त्यहाँ नैना देवीको मंदिर र जहाँ जिब्रो खस्यो त्यहाँ श्रीज्वालाजीको मंदिर र जहाँ शरीर खस्यो त्यहाँ वैष्णोदेवी मंदिर स्थापना गरियो ।

## "पुरीमा श्री जगन्नाथजीको मन्दिर अर्थात् धाम कसरी वन्यो ?"

उडिसा प्रान्तमा एउटा इन्द्र दमन नाम गरेको राजा थियो । त्यो भगवान कृष्णको भक्त थियो । एक राती कृष्णजीले राजालाई स्वप्नमा दर्शन दिएर भन्नुभयो कि जगन्नाथ नामबाट मेरो एउटा मंदिर वनाइदेउ । श्रीकृष्णजीले यो पनि भन्नु भएको थियो कि यो मन्दिर मा मूर्ति पूजा गर्नु छैन । मात्र एउटा संत राख्नुछ जसले भक्तजनहरूलाई पवित्र गीता अनुसार ज्ञान प्रचार गरोस् । समुद्र किनारमा त्यो स्थान पनि देखाउनुभयो जहाँ मन्दिर वनाउनु थियो । विहानै उठेर राजा इन्द्रदमनले आफ्नी मन्त्रीलाई वतायो कि आज राती भगवान श्री कृष्णजीलाई देखें । मन्दिर वनाउनलाई भन्नुभयो । रानीले भनिन् राम्रो काममा ढिलो किन ? सवै सम्पती वहाँले नै दिनुभएको हो । वहाँलाई सर्मपित गर्न के सोच्नु छ र ? राजाले त्यो स्थानमा मन्दिर वनाउनु भयो जहाँ श्रीकृष्णजीले स्वप्नमा समुन्द्रको किनार ा देखाउनु भएको थियो । मन्दिर वनिसकेपछि समुन्द्री तुफान उठ्यो र मन्दिरलाई भत्काइ दियो । चिनो पनि वाँकी रहन सकेन कि यहाँ मन्दिर थियो । यस्तो राजाले पाँच चोटी मन्दिर निर्माण गर्नु भयो पाँचै पटक समुन्द्रले भत्काइ दियो ।

राजाले निरास भएर मन्दिर नवनाउने निर्णय गर्नु भयो । यो सोच्नु भयो कि

समुन्द्रले मसंग कुन जन्मको वदला लिइरहेको छ । कोष खाली भइहाल्यो मन्दिर वन्न सकेन । केही समय पछि पूर्णपरमेश्वर (कर्विदेव) ज्योति निरंजन (काल) लाई दिइएको वचन अनुसार राजा इन्द्रदमन कहाँ आएर राजालाई भन्नु भयो तपाई मन्दिर वनाउन लगाउनुहोस् समुन्द्रले मन्दिर भत्काउदैन । राजाले भन्नु भयो संतजी मलाई विश्वास छैन मैले भगवान श्रीकृष्ण (विष्णु) ज्यूको आदेश अनुसार मन्दिर वनाउन लगाएको छु । श्रीकृष्णज्यू समुन्द्रलाई रोक्न सक्नु हुन्न । पाँच पटक मन्दिर निर्माण गराई सकेको छु । यो सोचेर कि कही भवगान मेरो परीक्षा लिईरहनु भएको छ । तर अव त म परीक्षा दिन योग्य छैन किनकि कोष रिक्त भइसकेको छ । अव मन्दिर वनाउन मेरो बशको कुरो होइन । परमेश्वर ले भन्नुभयो इन्द्रदमन जुन परमेश्वरले सवै ब्रमाण्डको रचना गर्नुभएको छ वहाँ नै सवै कार्य गर्नमा सक्षम हुनुहुन्छ अरू प्रभु होइन । म त्यो परमेश्वरको वचन शक्ति प्राप्त छु । म समुन्द्रलाई रोक्न सक्छु । (आफुलाई लुकाउदै सत्य भन्नुहुन्छ) राजाले भन्नुभयो कि संतजी म मान्न सक्दिन । श्रीकृष्ण भन्दा पनि कुनै ठूलो शक्ति हुन्छ र । जव वहाँले नै समुन्द्रलाई रोक्न सक्नुभएन भने तपाई कुन खेतको मुला हुनुहुन्छ । मलाई विश्वास छैन र मेरो मन्दिर वनाउने अवस्था पनि छैन । संत रूपमा आएका कर्विदेव (कवीर परमेश्वर) ले भन्नुभयो र ाजन ! यदि मन्दिर वनाउने इच्छा भए मसंग भेटन आउनु म फलानो स्थानमा वस्दछु । अव समुन्द्रले मन्दिर भत्काउदैन । यति भनेर प्रभु गईहाल्नु भयो ।

त्यसै रात्रीमा प्रभु श्रीकृष्णज्यूले फेरि राजा ईन्द्रदमनलाई दर्शन दिनुभयो र भन्नुभयो ईन्द्रदमन ! फेरि एक पटक मन्दिर निर्माण गराई देउ । जो तिमी कहाँ आएको थियो उसंग सम्पर्क गरेर सहयोगको याचना गर्नु, त्यो यस्तो उस्तो संत होइन, उनको भक्ति शक्तीको कुनै वार पार छैन ।

राजा इन्द्रदमन विउझे स्वप्नको सम्पूर्ण वृतान्त आफ्नी रानीलाई बताउनुभयो । रानीले भनिन् यदि प्रभु भन्नुहुन्छ भने तपाई नरोकिनुहोस् । प्रभुको मन्दिर फेरि वनाउन लगाईदिनुहोस् । रानीको सद्भावपूर्ण वाणी सुनेर राजाले भन्नुभयो अव त कोष पनि खाली भईसकेको छ । यो मन्दिर वनाइएन भने प्रभु भनि अप्रसन्न हुनुहुन्छ । म त धर्म संकटमा परेकोछु । रानीले भनिन् मसंग गहनाहरू छन् । त्यसबाट सजिलैसित मन्दिर निमार्ण हुन सक्छ । तपाई यो गहना लिनुहोस् र प्रभुको आदेशलाई पालना गर्नुहोस् । यो भन्दै रानीले सवै गहना जुन घरमा राखिएको थियो र जुन लगाइएको थियो त्यो सवै फुकालेर प्रभुको निम्ति आफ्नो पतिको चरणमा समर्पित गरिन् । राजा इन्द्रदमन त्यो ठाउँमा गयो जुन पर मेश्वरले संतरूपमा आएर बताउनु भएको थियो । कवीर प्रभु अर्थात् अपरिचित संतलाई खोजेर समुन्द्रलाई रोक्नकोलागि प्रार्थना गरे प्रभु कवीरज्यू (कवीरर्देव) ले भन्नु भयो कि जुन तर्फबाट समुन्द्र उठेर आउँछ । त्यहाँ समुन्द्रको किनारमा एउटा चैडा (चवुतरा) वनाउ । जसमाथी वसेर म प्रभुको भक्ति गर्दछु र समुन्द्रलाई रोक्छु । राजाले एउटा ठूलो ढुङ्गालाई कालिगढहरूबाट चवुतरा जस्तो वनायो परमेश्वर कवीर उसमाथी वसिहाले र छैठौं पटक मन्दिर निर्माणको कार्य शुरू भयो । त्यसै वेला एउटा नाथ परम्पराको सिद्ध महात्मा आए ।

नाथज्यूले राजालाई भने राजा धेरै सुन्दर मन्दिर निमार्ण गरिरहेका छौ यसमा मूर्ति पनि स्थापना गर्नुपर्छ । मूर्ति विना मन्दिर कस्तो ? यो मेरो आदेश हो राजा इन्द्रदमनले हातजोडेर भने नाथजी प्रभु श्रीकृष्णजीले मलाई सपनामा दर्शन दिएर मन्दिर वनाउने आदेश दिनुभएको थियो । भनेका थिए कि यो मन्दिरमा न त मूर्ति राख्नु छ न त पाखन्ड पूजा गर्नू छ । र ाजाको कुरा सुनेर नाथले भने सपना पनि कहिलै साचो हुन्छ । मेरो आदेशको पालना गर र चन्दनको लकडीको मूर्ति अवश्य नै स्थापना गर्नु होला यो भनेर नाथज्यू केहि नखाइकन नै उठी हाले । राजाले डराएर चन्दनको लकडी झिकाए र कालिगडलाई मूर्ति वनाउन आदेश दिए । एउटा मूर्ति श्रीकृष्णजीको स्थापना गर्ने आदेश श्रीनाथज्यूको थियो । फेरि अन्य गुरू संतहरूले राजालाई राय दिएकी प्रभु कसरी एक्लै बस्नु हुन्छ ? उहाँले त बलरामजीलाई सधै सगै राख्नुहुन्थ्यो । अर्कोले भन्यो वहिनी सुभद्रा त भगवान श्रीकृष्णजी की प्यारी वहिनी थिइन् । ती कसरी आफ्नो प्यारो दाइ विना बस्न सक्छीन् । तीनवटा मुर्ति वनाउन निर्णय गरियो । तीन कालिगड नियुक्ती गरियो मूर्तिहरू तयारी हुने वित्तिकै सानो सानो टुकडा भए । यस्तै तीन पटक मूर्तिहरू खण्ड भईसके । र ाजा धेरै चिन्तीत भए । सोचे मेरो भाग्यमा यो पूण्य छैन् । मन्दिर वन्छ भत्किहाल्छ । अव मूर्तिहरू भाचिन्छन् । नाथजी रिसाएर जानुभएछ । यदी भन्छु की मूर्तिहरू भाचिहाल्यो भन्ने सोच्नु हुन्छ कि राजा वहाना वनाईरहेछ । कही मलाई श्राप नदिहालोस् । चिन्ताग्रस्त र ाजालाई न त खाना खान मन लाग्छ न त रात भर निन्द्रा लाग्छ । विहान राजा वेचैन अवस्थामा दरबारमा पुगे । त्यसै समय पूर्णपरमात्मा (कर्वीदेव) कवीर प्रभु एउटा ८० वर्षिय कलिगडको रूप वनाएर राजदरवारमा उपस्थिती हुनुभयो । कम्मरमा एउटा थैलो झुन्ड्याएको थियो । जसमा आरि(करौती) वाहिर स्पष्ट रूपमा देखिन्थ्यो । मानौं विना केहि भन्नु भन्दा पहिले नै कलिगडको परिचय दिइरहेको थियो र अरू औजारहरू झोलामा राखेको थियो कलिगड भेषमा प्रभुले राजालाई भन्नु भयो मैले सुनेको छु कि प्रभुको मन्दिरको लागि मूर्तिहरू पूर्ण हुन सकिरहेका छैनन् । म ८० वर्षको बृद्ध भइसकेको छु । ६० वर्षको अनुभव पनि छ । चन्दन लकडीको मूर्ति सवै कलिगडहरूले वनाउन सक्दैनन् । यदि तपाईको आदेश हुन्छ भने सेवक उपस्थित छ । राजाले भने कलिगड तपाई मेरो लागि भगवान नै कलिगड वनेर आएको जस्तो लाग्छ । म धेरै चिन्तत थिएँ, सोचिरहेको थिएँ कि कुनै अनुभवी कलिगड भेटला र समस्याको सामधान होला । तपाई चाडै मूर्तिहरू वनाइदिनुहोस । बृद्ध कलिगड रूपमा आएको कविद्र (कवीर प्रभुले) भने राजन मलाई एउटा कोठा देउ जसमा वसेर प्रभुको मूर्ति तयार गर्छु म भित्रबाट ढोका वन्द गरेर स्वच्छताले मूर्ति वनाउछु । यी मूर्तिहरू जव तयार हुन्छन् तव ढोका खोल्नेछु । यदी बीचमा कसैले खोल्यो भने जति मूर्ति वन्छ त्यतिनै रहिरहन्छ राजाले भने जस्तो तपाईलाई राम्रो लाग्छ, त्यसै गर्नुहोस् । बाह्र दिन मूर्ति बन्दै गरेको पुग्ने वित्तिकै नाथजी आउनुभयो । नाथजीले राजासंग सोधे इन्द्रदमन मूर्तिहरू वने ? राजाले करवद्ध भएर भनेकि तपाईको आज्ञाको पूर्ण पालना गरिएको छ । माहात्माजी तर मेर ो दुर्भाग्य छ कि मूर्तिहरू बन्न सकिरहेका छैनन् । आधा बन्ने वित्तिकै भाचिन्छन् । मूर्तिका

टुक्राहरू नोकरलाई ल्याउन लगाएर नाथज्यूलाई विश्वास दिलाउनको लागि देखाए । नाथज्यूले भने मूर्ति त अवश्य नै बन्नेछ । अव वनाउन लगाउ म हेर्छु कसरी मूर्ति भाचिन्छ राजाले भने नाथज्यू कोशिस गरिरहेको छु । प्रभुले पठाउनु भएको एक जना ८० वर्षे कलिगड वन्द कोठामा मूर्ति वनाइरहेका छन् । उसले भन्यो कि मूर्ति वनेसके पछि आफै ढोका खोल्छु यदि कसैले विचमा ढोका खोलिदियो भने जति मूर्ति बनेको हुन्छन् त्यतिकै र हिरहन्छ । आज उसले मूर्ति वनाईराखेको वाह्र दिन भईसक्यो । न वाहिर निस्केको छ, न त नास्ता वा केहि खाएको छ । नाथजीले भन्यो मूर्ति हेर्नु पर्‍यो । कस्तो वनाइरहेको छ ? वनिसकेपछि के हेर्नु । यदि ठीक बनाएको छैन भने ठीक बनाउन लगाउछु । यो सोचेर नाथज्यू राजा ईन्द्रदमनसंग त्यो कोठा नजिक पुग्यो जहाँ मूर्ति वनाईरहेको थियो र कलिगडलाई कोठा खोल्न अनेक पटक भन्यौ तै पनि कोठाको ढोका खुलेन जुन खटखटको आवाज आईरहेको थियो त्यो पनि आउन वन्द भयो । नाथज्यूले भन्यो कि ८० वर्षको भन्छ वाह्र दिन केहि खाना पनि खाएन । आवाज पनि वन्द भयो कही मर्‍यो होला धक्का दिएर ढोका खोले । देख्दा त तीन वटा मूर्तिहरू राखेको थियो तिनैको हात र खुट्टाको पंजा वनेको थिएन् । कालिगड त्यहाँ थिएन ।

मन्दिर वनेर तयार भईसक्यो र केही उपाय नदेखेर नाथज्यूले भन्नु भयो यस्तै मूर्ति स्थापना गर । हुनसक्छ भगवानलाई यो नै स्विकार होला श्रीकृष्णज्यू स्वमले नै यो मूर्ति वनाएर जानुभए जस्तो छ ।

मुख्य पाण्डेले अर्को दिन शुभ साइत निकालेर मूर्ति स्थापना गरिदियो । सवै पाण्डे र मुख्य पाण्डे, राजा र सैनिक एवम् श्रद्धालु मूर्तिहरूमा प्राण स्थापना गर्नको लागि गए । पूर्णपरमेश्वर (कर्विदेव) एक जना शुद्रको रूप लिएर मन्दिरको मुख्य ढोकाको बीचमा मन्दिर तिर मुख गरेर उभिनुभयो । यस्तो लिला गर्नु भएको थियो कि मानौं वहाँलाई केही थाहा नै छैन कि पछाडीबाट प्रभुको प्राण स्थापना गर्ने सेनाहरू आईरहेका छन् । अगाडी अगाडी मुख्य पंडा हिडनु हुन्थ्यो परमेश्वर फेरि पनि ढोकाको विचमा खडा रहनु भयो । नजिक आएर मुख्य पंडाले सुद्र रूपमा रहेको परमेश्वरलाई यस्तो धक्का दिनुभयो कि धेरै टाढा गएर खस्नु भयो । फेरि एकान्त ठाउँमा सुद्र लिला गर्दै वसिहाल्नु भयो । राजा लगायत सवै श्रद्धालुहरू मन्दिरको भित्र गएर हेरे की सवै मूर्तिहरू त्यसै ढोकामा उभिएर सुद्र रूपमा र हेका परमेश्वरको रूप धारण गरेका थिए । यो आश्चर्य कुरालाई देखेर त्यहाँ उपस्थित सवै ब्यक्तीहरू आश्चर्य चकित भए । मुख्य पंडाले भन्न थाल्यो कि प्रभु रिसाई सक्नु भएको छ किनकि मुख्य ढोकालाई त्यो सुद्रले अशुद्ध गरिदिसकेको छ । त्यसै कारण सवै मूर्तिहरूले सुद्र रूप धारणा गरिसकेका छन् । ठूलो अनिष्ट भएको छ । केहि छिन पछि मूर्तिहरूको पहिलेको जस्तै वास्तविक रूप भइहाल्यो । गंगाजलबाट कति पटक स्वच्छ गरेर प्राण स्थापना गरियो [कर्विदेवले भन्नु भयो कि अज्ञानता र पाखण्डवादको चरम सिमा हेरौं कलिगडले मूर्तिलाई भगवान वनाउछ फेरि पूजारी फेरि अरू संत त्यो मूर्ति रूपि प्रभुमा प्राण स्थापना गर्दछन् अर्थात् प्रभुलाई जीवन दान दिन्छन् । तव त्यो माटो र लकडीको प्रभु कार्य

सिद्ध गर्दछ । स्यावास पाखण्डीहरू ! धेरै मुर्ख वनायौं प्रभु प्रेमि आत्मालाई । ]

मूर्ति स्थापना भएको केहि दिन पछि लगभग ४० फिट अग्लो समुन्द्रको जल उठ्यो जसलाई समुन्द्री तुफान भनिन्छ । धेरै तेज गतिमा मन्दिरतिर आयो सामुन्ने कबीर परमेश्वर चौतारामा वस्नु भएको थियो आफ्नो एउटा हात उठाउनु भएको थियो जसरी आर्शीवाद दिइन्छ । समुन्द्र उठेको उठ्यौ रह्यो र पर्वत जस्तै उठेर जस्ताको त्यस्तै रह्यो अगाडी वढन सकेन् । ब्राह्मणको रूप वनाएर समुन्द्र आयो र चौतारामा बसीरहेका प्रभुलाई भन्यो की भगवान ! तपाई मलाई बाटो दिनुस् मैले मन्दिर भत्काउन जान्छु । प्रभुले भन्नु भयो कि यो मन्दिर यो त आश्रम हो । यसमा विद्वान् पुरूष वस्नु हुनेछ र पवित्र गीताजीको ज्ञान दिइर हन्छन् । यसको विनास गर्न तपाईलाई शोभा दिदैन् । समुन्द्रले भन्नुभयो कि मैले यसलाई अवश्य भत्काउछु । प्रभुले भन्नुभयो कि जानुहोस् कसले रोक्न सक्छ । समुन्द्रले भन्यो कि म हैरान भइसकेको छु । तपाईको शक्ति अमर छ । मलाई बाटो दिनुहोस् प्रभु परमेश्वर कवीर साहेवले सोध्नु भयो कि तपाई यस्तो किन गर्नुहुन्छ ? ब्राह्मण रूपमा उपस्थित समुन्द्रले भन्यो कि जव यो श्रीकृष्णजी त्रेतायुगमा श्रीरामचन्द्रको रूप आउनु भएको थियो तव यसले मलाई अग्निवाण देखाएर, नराम्रो शब्द भनी अपमानित गरेर बाटो मागेको थियो । म त्यही प्रतिशोध लिन गईरहेको छु ।

परमेश्वर कवीरजीले भन्नुभयो कि प्रतिशोध त तपाई अघि नै लिई सक्नु भएको छ । तपाईले द्धारीकालाई डुवाइसक्नु भएको छ । समुन्द्रले भन्नुभयो कि अहिले पुरै डुवाएको छैन आधि बाँकी नै छ । त्यो पनि कुनै प्रवल शक्ति युक्त संत अगाडी आएको कार ण मैले द्धारिकालाई पूर्णरूपमा डुबाउन सकिन अहिले पनि कोशिस गर्छु तर उता जान पाईर हेको छुइन । उताबाट मलाई वाधेको छ ।

अनि परमेश्वर कवीरले भन्नुभयो कि त्यहाँ पनि मै गएको थिएँ मैलेनै त्यो अवशेष वचाएको थिएँ । अव जानुस् बाँकीरहेको द्धारिकालाई पनि निल्नुहोस् तर त्यो यादगारलाई छोडी दिनुहोस् जहाँ श्रीकृष्णजीको शरीरको अन्तिम संस्कार गरेको थियो । (श्रीकृष्णजीको अन्तिम संस्कार स्थलमा धेरै ठूलो मन्दिर वनाइएको छ । यसलाई प्रमाण वनाएर राख्नुहोस् कि वास्तवमा श्रीकृष्णजीको मृत्यु भएको थियो र पंच भौतिक शरीर छोडेर गएको थियो । होइन भने आउनेवाला समयमा भन्छन् कि श्रीकृष्णजीको मृत्यु हुँदै भएको थिएन ।) आज्ञा प्राप्त गरेर शेष द्धारिकालाई पनि समुन्द्रले डुबाइदियो, परमेश्वर कवीरजी (कर्बीदेव) ले भन्नु कि अव तपाई आइन्दा कहिले पनि यो जगन्नाथ मन्दिरलाई भत्काउने प्रयास नगर्नु होला । र यो भवनदेखि टाढा गइहाल्नुहोस्, यही आज्ञा प्रभुको मानेर प्रणाम गरेर मन्दिरदेखी लगभग डेढ किलोमिटर टाढा गईहाल्यो । यसरी श्री जगन्नाथजीको मन्दिर अर्थात् धाम स्थापित भयो ।

## "श्री जगन्नाथको मन्दिरमा छुवाछुत अघिदेखि नै छैन"

केही दिन पछाडी जुन पंडाले प्रभु कवीरजीको शुद्र रूपमा धक्का दिएको थियो उसलाई कुष्ट रोग लाग्यो । सवै औषधि गरेपनि निको भएन कुष्ट रोगको कष्ट दिन दिनै वढदै गयो । सवै उपासना गऱ्यो, श्री जगन्नाथजीलाई रोएर संकट निवारण गर्नको लागि प्रार्थना गऱ्यो । तैपनि सवै असफल रह्यो । सपनामा श्री कृष्णजीले दर्शन दिएर भन्नुभयो पंडा त्यो संतको चरण धोएर चनामृत गर जसलाई तिमीले मन्दिरको मुख्य द्वारमा धक्का दिएका थियौ । अनि उसको आर्शिवादले तिम्रो कुष्टरोग निको हुन सक्छ । यदि उसले तिमीलाई हृदयदेखि क्षमा गऱ्यो भनेः ठीक हुन्छ अन्यथा हुँदैन ।

त्यो मुख्य पंडा सवेरै उठेर कयौं सहयोगी पंडाहरूलाई साथ लिएर त्यो स्थानमा गयो जहाँ प्रभु कवीर सुद्र रूपमा विराजमान हुनुहुन्थ्यो । पंडा प्रभुको नजिक आउन लाग्दा परमेश्वर उठेर जान लाग्नु भयो भन्नुभयो हे पंडा म त अछुत हुँ मबाट टाढा रहनु कही तपाई अपवित्र नभइजानुहोस् । पंडा नजिक पुग्यो, परमेश्वर अझ अगाडी जानुभयो । अनि पंडा भक्कानो छाडेर रून थाल्यो र भन्यो हे परमेश्वर ! मेरो गल्तीको माफ गर्नुहोस्, त्यसपछि दयालु परमेश्वर रोकिनुभयो । पंडाले आदारपूर्वक एउटा स्वच्छ कपडा जमिनमा ओछ्यार प्रभुलाई वस्न प्रार्थना गऱ्यो । प्रभु त्यो कपडामा वस्नु भयो र त्यो पंडाले आफैले प्रभुको खुट्टा धाऐर चरणामृतलाई पात्रमा हाल्यो, प्रभु कवीरज्यूले भन्नुभयो पंडा चालिस दिनसम्म चर णमृत पिउनु र नुहाउने पानीमा पनि केहि हालेर नुहाउनु । चालिसौ दिनमा तिम्रो कुष्टरोग निको हुन्छ र भन्नु भयो कि भविष्यमा कसैले पनि जगन्नाथजीको मन्दिरमा कसैले छुवाछुत गऱ्यो भने उसले पनि दण्ड पाउनेछ । त्यहाँ उपस्थित सवै ब्यक्तिहरूले वचन दिए कि आज देखि यस पवित्र स्थानमा कुनै छुवाछुत हुनेछैन ।

विचार गर्नुहोस् :- हिदुस्तानको एकमात्र यस्तो मन्दिर हो जसमा सुरूदेखि नै छुवाछुत छैन् ।

म दासलाई पनि त्यो स्थान हेर्न मौका मिल्यो । कयौ सेवकहरूसाथ लिएर त्यो स्थल हेर्न गएको थिए कि त्यहाँ कुनै प्रमाण प्राप्त गर्न सकुँ । त्यहाँ सवै प्रमाण आज पनि साक्षीका रूपमा पाए । जुन चौरा (ढुङ्गा) मा वसेर कवीर परमेश्वरज्यूले मन्दिरलाई वचाउनको लागि समुन्द्रलाई रोक्नु भएको थियो । त्यो आज पनि अवस्थित छ । त्यसमाथि एउटा यादगारको रूपमा एउटा गजुर वनाईएको छ । त्यहाँ धेरै पुराना महन्त (हेरचाह गर्ने) परम्परादेखि एउटा आश्रम पनि अवस्थित छ । त्यहाँ लगभग ७० वर्षीय बृद्ध महन्तजीबाट उक्त मन्दिरलाई समुन्द्रबाट रक्षाको वारेमा जान्न खोज्दा वहाँले पनि त्यही भन्नुभयो कि मेर ा पूर्खाहरू कयौ पुस्तादेखि यहाँ महन्त हुनुहुन्छ । यहाँ धर्मदास साहेव र उनकी श्रीमती भक्तमती आमिनी देवीले शरीर त्याग गरेका थिए । दुवैको समाधी पनि सँगसँगै वनेको देखाए । फेरि म श्री जगरन्नाथजीको मन्दिरमा गएँ । त्यहाँ मूर्तिपूजा आज पनि छैन् तर प्रदर्शनी भने लगाइराखेको छ ।

जुन तीनवटा मूर्तिहरू भगवान श्रीकृष्णजी, श्री वलरामजी र वहिनी सुभद्राजीको मन्दिरभित्र स्थापित छ यसको दुवै हातको पंजा छैन, दुवै हात ठुट्टे छ । ती मूर्तिहरूको पनि

पुजा हुँदैन, मात्र दर्शनकोलागि राखिएको छ । त्यहाँको एउटा गाईड पंडालाई सोधे कि यो मन्दिर पाँच पटक समुन्द्रले भत्काएको थियो पुनः वनाएको हो जस्तो सुनेको छु । समुन्द्रले किन भत्कायो ? फेरि कसले समुन्द्रलाई रोक्यो ? पंडाले भन्यो ति सबै कुरा त मलाई थाहा छैन । यो सवै कृपा जगरन्नाथजीको थियो, उहाँले समुन्द्रलाई रोक्नुभएको थियो सुनेको थिए कि समुन्द्रले तीन पटक मन्दिरलाई भत्काएको थियो । मैले फेरि प्रश्न गरे कि पहिल्यै पटक किन समुन्द्रलाई रोक्नुभएन प्रभुले । पंडाले जवाफ दियो कि यो जगन्नाथजीको लिला हो ।

मैले फेरि सोधे कि यो मन्दिरमा छुवाछुत छ कि छैन ? उसले भन्यो कि जव मन्दिर वन्यो त्यसवेलादेखि नै कुनै छुवाछुत छैन । मन्दिरमा शुद्र र पंडा एउटा थालीमा खाना खान सक्छन् । कसैले मनाही गर्दैनन् । मैले प्रश्न गरे कि पंडाजी अरू हिन्दु मन्दिरमा पहिले धेर छुवाछुत थियो, यसमा किन भएन ? प्रभु त उही हुनुहुन्छ । पंडाको उत्तर थियो लिला हो जगन्नाथजीको ।

अव पुन्य आत्माहरू विचार गर्नुहोस् कि सत्यलाई कति थिचीएको छ, लिला जगन्नाथजीको भनेर । पवित्र यादहरू आदरणिय छ । तर आत्मा कल्याण त मात्र पवित्र गीताजी र पवित्र वेदहरूमा वर्णीत र परमेश्वर कवीरजीद्वारा दिइएको तत्त्वज्ञानको अनुसार भक्ति साधना गरेर मात्र संभव छ अन्यथा शास्त्र विरूद्ध हुनाले मानव जीवन ब्यर्थ हुन जान्छ । प्रमाण गीता अध्याय १७ मंत्र २३,२४ । श्री जगन्नाथको मन्दिरमा प्रभुको आदेश अनुसार पवित्र गीताजीको ज्ञानको महिमाको गुणगान हुनु नै श्रेयसकर हो र जसरी श्रीमद्भागवत गीताजीको भक्ति विधि हो यसै प्रकार साधना गरेर मात्र आत्मकल्याण संभव छ, अन्यथा जगन्नाथजीको दर्शन अथवा खिचडी प्रसाद मात्र खाएर कुनै लाभ हुँदैन किनकि यो क्रिया श्री गीताजीमा वर्णन नभएकोले शास्त्र विरूद्ध भयो, जुन अध्याय १७ मंत्र २३,२४ मा प्रमाण छ ।

## "स्वर्गको परिभाषा हो ?"

उदाहरणको लागि स्वर्गलाई एउटा होटल (रेस्टुरेन्ट) मान्नुहोस् । जसरी कुनै धनी ब्यक्ति गर्मी याममा सिमला र कुल्लु मनाली जस्तो शहरहरूमा शितल स्थानहरूमा जान्छन् । त्यहाँ कुनै होटलमा बस्छन् । जसमा कोठाभाडा र खाना खर्च तिर्नु पर्ने हुन्छ । दुई वा तीन महिनामा विस वा तीस हजार खर्च गरेर फेरि आफ्नो कर्म क्षेत्रमा आउनु पर्ने हुन्छ । फेरि दश महीना मेहनत गरेर फेरि दुई महिना आफ्नै कमाई खर्च गरेर फिर्ता आउछन् । यदि कुनै वर्ष कमाई राम्रो भएन भने त्यो दुई महिनाको सुखबाट पनि वञ्चित हुन जान्छन् ।

ठिक यसै प्रकार स्वर्गलाई जानौंः- यस पृथ्वी लोकमा साधना गरेर केहि समयका लागि स्वर्गरूपी होटलमा जान्छन् । आफ्नो पुन्य कमाई खर्च गरेर फेरि नरक वा चौरासी लाख प्राणीको शरीरमा पापको आधारमा कष्ट भोग्नु पर्छ ।

जवसम्म तत्त्वज्ञानी संत भेटाउदैन् तवसम्म जन्म, मृत्यु र स्वर्ग, नरक र चौरासी लाख योनीको कष्ट रहीरहन्छ । किनकि मात्र पूर्णपरमात्माको सतनाम र सारनामले नै पापहरूलाई नाश गर्दछन् । अन्य प्रभुहरूको पूजाबाट पाप नष्ट हुँदैन । सबै कर्मको जस्ताको त्यस्तै फल नै मिल्छ ।

यसैले गीता अध्याय ३ श्लोक १६ मा भनिएको छ कि ब्रह्मलोक (महास्वर्ग) सम्म सर्वलोक नासवान छ । जव स्वर्ग महास्वर्ग रहँदैन तब साधकको कुनै ठेगाना हुँदैन, कृपया विचार गर्नुहोस् ।

प्रश्न :- के गीताजीको नित्य पाठ गर्नाले कुनै फाइदा छैन ? जो दान गरिन्छ जस्तै कुकुरलाई रोटी, भोकाएकालाई भोजन, कमिलालाई चिनी, तीर्थहरूमा भन्डारा आदि गर्दछन् के यो पनि व्यर्थ छ ?

उत्तर :- धार्मिक सद्ग्रन्थको पठनपाठनबाट ज्ञान यज्ञको फल मिल्छ । यसको फल केहि समय स्वर्ग वा जुन उद्देश्यले गरिएको छ त्यसको परिणाम अवश्य मिल्छ तर मोक्ष मिल्दैन । नित्य पाठ गर्नुको मुख्य कारण यो हुन्छ कि सद्ग्रन्थमा जुन साधना गर्ने निर्देश छ तथा जुन नगर्न निर्देश छ, उसको याद ताजा रहोस्, कहिले कुनै गल्ती नहोस्, जसले हामी वास्तविक उद्देश्य छाडेर बेहोसीमा शास्त्र विधि छाडेर मनमानी आचरण (पूजा) गर्न नलागौं तथा मानव जीवनको मुख्य उद्देश्य याद रहोस् कि मानव जीवनको मुल उद्देश्य आत्म कल्याण नै हो । जो शास्त्र अनुकुल साधनाबाट मात्रै सम्भव छ ।

जस्तो एक जमिनदारलाई बृद्ध अवस्थामा पुत्र प्राप्ति भयो । किसानले सोच्यो जवसम्म वच्चा जवान हुन्छ आफ्नो खेति कार्य गर्ने योग्य हुन्छ त्यतिवेलासम्म कही मेर ो मृत्यु नभइहालोस् । यसैले किसानले आफ्नो अनुभव लेखेर छोडिदियो र आफ्नो पुत्रलाई भन्यो कि पुत्र जव तिमी जवान हुन्छौ आफ्नो खेति वारिको कार्यलाई सम्झनकोलागि यो मेरो अनुभवको लेखलाई पढनु तथा आफ्नो कृषि (खेतिवारी) गर्नु । वुवाको मृत्यु पश्चात् किसानको पुत्र सधै वुबाद्वारा लेखिएको अनुभवको लेखलाई पढथ्यो तर जस्तो त्यसमा लेखिएको थियो त्यस्तो गरिरहेको थिएन । त्यस किसानको छोरो के धनी हुन सक्छ ? कहिले पनि हुँदैन ? त्यस्तै गर्नुपर्छ जस्तो बुबाले आफ्नो अनुभवको लेखमा लेखेका थिए ।

ठीक त्यसै अनुसार पवित्र गीताजीको पाठ त श्रद्धालु नित्य गर्छन् तर साधना ग्रन्थको विपरित गर्छन् । त्यसैले गीता अध्ययन १६ को श्लोक २३,२४ को अनुसार त्यो साधना व्यर्थ छ ।

जस्तो तीनै गुण (रजगुण ब्रह्माजी, सत्गुण विष्णुजी र तमगुण शिवजी) को पूजा गीता अध्याय ७ श्लोक १२ दखि १५ तथा २० देखि २३ सम्म मनाही गरिएको छ । तथा श्राद्ध निकाल्नु अर्थात् पितृ पूजा गर्नु, पिण्ड भर्नु, फुला उठाएर गंगामा क्रिया गर्नु, तेह्रौ दिनको श्राद्ध, छ महिने, बर्षदिने श्राद्ध आदि गर्नु गीता अध्याय ९ श्लोक २५ मा मनाही गरिएको छ । ब्रत गर्नु गीता अध्याय ६ श्लोक १६ मा मनाही गरिएको छ । लेखिएको छ कि हे अर्जुन ! योग (भक्ति) न त बिल्कुलै नखानेहरू (ब्रत राख्नेवाला) को सिद्ध हुन्छ । .......... अर्थात् ब्रत राख्न

मनाहि छ ।

भोकाएकालाई भोजन दिनु, कुकुर, जीवजन्तु, पशुहरू आदिलाई आहारा खुवाउनु खराव हैन तर पूर्णसंतको माध्यमबाट उनको आज्ञा अनुसार दान तथा यज्ञ आदि गर्नु पूर्णलाभदायक हुन्छ ।

जस्तो एउटा कुकुर कार भित्र मालिक वस्ने सिटमा वसेर यात्रा गर्दछ । कुकुरको ड्राइभर मनुष्य हुन्छ । त्यस कुकुरलाई मनुष्य भन्दा वढि सुविधा प्राप्त हुन्छ । अलगबाट कोठा, पंखा तथा कुलर लगाइएको हुन्छ आदि, आदि

जव त्यो अज्ञानी प्राणी मनुष्य शरीरमा थियो दान पनि गऱ्यो तर मनमानी आचरण (पूजा) को माध्यमबाट गरियो जुन शास्त्र विधि विपरित भएको कारण फाईदा जनक भएन । प्रभुको विधान छ कि जस्तो कर्म प्राणीले गर्छ त्यसको परिणाम अवश्व पाउँछ । त्यो विधान तवसम्म लागु हुन्छ जबसम्म तत्त्वदर्शी संत पूर्णपरमात्माको मार्ग दर्शक पाउँदैन् ।

जस्तो कर्म प्राणीले गर्छ त्यस्तै परिणाम प्राप्त हुन्छ । यस विधान अनुसार तीर्थहरू वा धामहरू वा अन्य स्थानहरूमा भन्डारा गरी तथा कुकुर आदिलाई रोटि दिने कर्मको आधारमा कुकुरको योनीमा गयो । त्यहाँ पनि गरेको कर्मको फल पायो । कुकुरको जीवनमा आफ्नो पूर्वजन्मको शुभ कर्मको कमाई समाप्त गरेर गदहाको योनीमा गइहाल्नेछ । त्यस गदहाको जीवनमा सर्व सुविधा खोसिन्छ । सारा दिन माटो, काचो, पाकेको इटा वोक्नेछ । तत् पश्चात अन्य प्राणीको शरीरमा कष्ट उठाउनेछ र नरक पनि भोग्नु पर्नेछ । चौरासी लाख योनिहरूको कष्ट भोगेर फेरि मनुष्य शरीर प्राप्त गर्छ फेरि के जान्नु भक्ति बन्ने हो कि होइन । जस्तै धाम तथा तीर्थमा जानेहरूको खुट्टाको तल वा जुन सवारीद्वारा जान्छन् त्यसको पाङ्ग्राको तल जति पनि जीवजन्तुहरू मर्छन् तिनीहरूको पाप पनि तीर्थ वा धाम जाने यात्रीहरूले भोग्नु पर्छ । जवसम्म पूर्णसंत जो परमात्माको सत्साधना बताउने मान्छे भेटिन्दैन तवसम्म पाप नास हुन सक्दैन किनकि ब्रह्मा, विष्णु, महेश, ब्रह्म (क्षरपुरूष काल) तथा पर ब्रह्म (अक्षर पुरूष) को साधनाबाट पाप नास हुँदैन । पाप तथा पुन्य दुवैको परिणाम भोग्नु पर्दछ । यदि त्यो प्राणीले गीता ज्ञान अनुसार पूर्णसन्तको शरण प्राप्त गरेको भए पूर्णपरमात्माको साधना गरी या त सत्लोक जान्थे या दोस्रो चोटी मनुष्य शरीर प्राप्त गर्थे । पूर्व पुन्यको आधारमा फेरि कुनै संत भेटियो भने त्यो प्राणी फेरी शुभ कर्म गरेर पार भइहाल्छ ।

यसैले उपरोक्त मनमानी आचरण फाईदा जनक छैन ।

प्रश्न :- गीता अध्याय ३ श्लोक ३५ तथा अध्याय १८ श्लोक ४७ मा भनिएको छ कि राम्रो प्रकारले आचरणमा ल्याइएको अर्कोको धर्मभन्दा गुण रहित पनि आफ्नो धर्म अति उत्तम हुन्छ । आफ्नो धर्ममा मर्नु पनि कल्याणकारक हुन्छ । अर्काको धर्म भयदायक छ । यसबाट सिद्ध हुन्छ कि जो जसरी पूजा गर्छ त्यसलाई त्याग्नु हुँदैन । आफ्नो धर्ममा मर्नु पनि कल्याणकारक हुन्छ ।

उत्तर :- यदि गीता अध्याय ३ श्लोक ३५ तथा अध्याय १८ श्लोक ४७ को अर्थ

यही छ । कि जो जस्तो पूजा गर्छ, गरिरहोस् उसलाई नछोडोस् भने पवित्र श्रीमद्भागवत गीताजीको ज्ञानको के आवश्यकता थियो ? एउटा श्लोक धेरै थियो । श्री गीताजीका श्लोकहरूको भावार्थ ठीक छ । तर अनुवादकर्ताले विपरितार्थ गरेको छ । कृपया निम्न पढ्नुहोस दुवै श्लोकको वास्तविक अर्थ अध्याय ३ को श्लोक ३५

अध्याय ३ को श्लोक ३५

श्रेयान्, स्वधर्मः, विगुणः, परधर्मात्, स्वनुष्ठितात्,
स्वधर्मे, निधनम्, श्रेयः, परधर्मरू, भयावहः ।।

अनुवाद :- गुणरहित अर्थात् शास्त्र विधि त्यागेर (स्वनुष्ठितात्) स्वयम् मनमानी राम्ररी आचरणमा ल्याइएका (परधर्मात्) अर्काको धार्मिक पूजाभन्दा (स्वधर्मः) आनो शास्त्रविधि अनुसार पूजा (श्रेयान्) अति उत्तम छ । शास्त्रानुकुल (स्वधर्मः) आनो पूजामा त (निधनम्) मर्नु पनि कल्याणकारक हो र (परधर्मः) अर्काको पूजा (भयावहः) भय दिनेवाला छ ।

अध्याय १८ को श्लोक ४७

श्रेयान्, स्वधर्मः, विगुणः, परधर्मात्, स्वनुष्ठितात्,
स्वभावनियतम्, कर्म, कुर्वन्, न, आप्नोति, किल्बिषम् ।।

अनुवाद : (विगुणः) गुणरहित (स्वनुष्ठितात्) स्यम् मनमानी अर्थात् शास्त्रविधि रहित राम्रो प्रकारका आचरण गरिएका (परधर्मात्) अर्काको धर्म अर्थात् धार्मिक पूजाभन्दा (स्वधर्मः) आनो धर्म अर्थात् शास्त्र विधि अनुसार धार्मिक पूजा (श्रेयान्) श्रेष्ठ छ । (स्वभावनियतम्) स्वयम् नै आनो स्वभाव अनुसार बनाएको मनमानी आचरणभन्दा (कर्म) भक्ति कर्म (न कुर्वन्) नगर्नु (किल्बिषम्) जसले पापको प्राप्त हुन्छ । विशेष : यसैको प्रमाण गीता अध्याय १७ को श्लोक १ देखि ६ सम्म स्पष्ट छ ।

उपयुक्त श्लोकमा स्पष्ट गरिरहेको छ कि आफ्नो शास्त्र विधि अनुसार साधना श्रेष्ठ छ, अर्कोको चमक-दमक वाला साधना जति सुनियोजित किन नलागोस त्यो हानिकारक हुन्छ ।

जस्तो माताको जागरण गर्ने वाला धेरै सुरिलो आवाजमा गित गाएर माताको स्तुति मनगढन्त कविताहरूद्वारा पूरै साजवाजको साथ गर्छन् । त्यो (स्वनुष्ठितात्) स्वयं निर्मित शास्त्रविधि रहित साधनामा आर्कर्षित भएर आफ्नो शास्त्र अनुकूल साधना त्याग्नु हुँदैन । जस्तो कुनै साधक सत साधनामा लाग्छ भने त्यो पहिल्यै नै शास्त्र विरूद्ध पूजाहरू त्याग गरिदिन्छ- जस्तो पितृ पूजा, मन्दिर आदिमा जानु आदि । तव अन्य शास्त्र विधि विरूद्ध साधना गर्ने व्यक्ति भन्दछन कि तपाईले सबै अधिको पूजाआजा त्याग्नु भएकोछ । तपाईबाट सर्वदेवहरू रूष्ठ भइहाल्नेछ । एउटा व्यक्तिले यस्तै गरेको थियो । उसको एक्लो पूत्र मर्‍यो । यसै अनुसार यो अर्काकोलाई शास्त्र विरूद्ध साधनाले भय प्रदान गर्छ, तर आफ्नो शास्त्र अनुकूल साधनालाई अन्तिम साससम्म गरिरहनु नै कल्याणकारी छ ।

प्रश्न - म गीता अध्याय ७ श्लोक १० देखि १५ मा वर्णित विधिअनुसार एउटा आसनमा बसेर टाउको आदि अंगलाई सोझो गरेर ध्यान गर्छु । एकादशीको व्रत पनि गर्छु,

यसप्रकार शान्तिको प्राप्त भइहाल्नेछु ।

उत्तर - कृपया तपाई गीता अध्याय ७ श्लोक १६ लाई पनि पढ्नुहोस् जसमा लेखिएको छ कि हे अर्जुन ! यो योग (साधना) न त धेरै खानेवालाको छ, न त बिल्कुलै नखानेवाला (व्रत राख्ने) को सिद्ध हुन्छ, न वढि जाग्नेवालाको न वढि सुत्नेवालाको सिद्ध हुन्छ, न त एक स्थानमा वसेर साधना गर्नेवालाको सिद्ध हुन्छ । गीता अध्याय ७ श्लोक १० लेखि १५ सम्म वर्णित विधिको खण्डन गीता अध्याय ३ को श्लोक ५ देखि ८ मा गरिएको छ कि जुन मुर्ख ब्यक्ति समस्त कर्म इन्द्रियहरूलाई हठपूर्वक रोकेर अर्थात् एकै स्थानमा वसेर चिन्तन गर्छ त्यो पाखण्डी कहलिन्छ । यसैले कर्मयोगी (कार्य गर्दागर्दै साधना गर्नेवाला साधक) नै श्रेष्ठ छ । वास्तविक भक्ति विधिकोलागि गीता ज्ञानदाता प्रभु (ब्रह्म) कुनै तत्त्वदर्शीको खोज गर्नु भन्छ । (गीता अध्याय ४ श्लोक ३४ मा) यसबाट सिद्ध छ कि गीता ज्ञानदाता (ब्रह्म) द्वारा वताइएको भक्ति विधि पूर्ण छैन । यसैले गीता अध्याय ६ श्लोक १० देखि १५ सम्म ब्रह्म (क्षरपुरूष काल) द्वारा आफ्नो साधनाको वर्णन छ तथा आफ्नो साधनाबाट हुने शान्तिलाई अति घटिया (अनुत्तमाम) गीता अध्याय ७ श्लोक १८ मा भनेको छ । उपर ोक्त अध्याय ६ श्लोक १० देखि १५ मा भनिएको छ कि मन तथा इन्द्रियहरूलाई नियन्त्रण गर्न चाहने साधक एउटा विषेश आसन तयार गरोस् जो न वढि अग्लो होस् न वढि होचो । त्यस आसनमा वसेर चित्त तथा इन्द्रियहरूलाई नियन्त्रणमा राखेर मनलाई एकाग्र गरेर अभ्यास गरोस् । सिधा वसेर ब्रह्चर्यको पालन गरेर मनलाई रोकेर प्रयाण होस् । यस प्रकार साधनामा लाग्ने साधक मसित रहनेवाला (निर्वाणपरमाम्) अति वेजान अर्थात् मरिसकेको ( नाम मात्र) शान्ति प्राप्त गर्छ । यसैले गीता अध्याय ७ श्लोक १८ मा आफ्नो साधनाबाट हुन सक्ने गति (लाभ) लाई अति घटिया (अनुतमाम्) भनेको छ । यसै गीता अध्याय १८ श्लोक ६२ तथा अध्याय १५ श्लोक ४ मा भनिएको छ कि हे अर्जुन ! तिमी परम शान्ति तथा सतलोकको प्राप्ती हुन्छौ । फेरि पुनर्जन्म हुदैन, पूर्णमोक्ष प्राप्त हुनजान्छ मै (गीता ज्ञान दिने प्रभु) पनि त्यहि आदि नारायण पुरूष परमेश्वरको शरण हुँ । यसैले दृढ निश्चय गर ेर वहाँकै साधना र पूजा गर्नुपर्छ ।

आफ्नो साधनालाई अडकलयुक्त ज्ञानको आधारबाट वताइएको मार्गलाई अध्याय ६ श्लोक ४७ मा पनि स्वयं

(युक्ततम मतः) अर्थात् अज्ञान अंधकार युक्त विचार भनिएको छ । अन्य अनुवाद कर्ताहरूले मे युक्तमम्ः मतः को अर्थ परम श्रेष्ठ मान्ने छ गरेका हुन् । जवकि गर्नु थियो - यो मेरो अडकल लगाइएको अज्ञान अंधकारको आधारमा दिईएको मत हो । किनकी यथार्थ ज्ञानको विषयमा कोही तत्त्वदर्शी सन्तबाट जान्नको लागि भनिएको हो । (गीता अध्याय ४ श्लोक ३४ मा) वास्तविक अनुवाद गीता अध्याय ६ श्लोक ४७ को पेज अध्याय ६ को श्लोक ४७

योगिनाम्, अपि, सर्वेषाम्, मदगतेन, अन्तरात्मना,
श्रद्धावान्, भजते, यः माम्, सः, मे, युक्ततमः, मतः ।।

अनुवाद : मबाट दिइएको भक्ति विचार जो अडकल लगाइएको उपरोक्त श्लोक १० देखि १५ मा वर्णित पूजा विधि जो मैले अनुमान गरि बताएको छु पूर्ण ज्ञान छैन किनकी (सर्वेषाम्) सबै (योगिनाम्) साधकहरूमा (यः) जो (श्रद्धामान्) पूर्ण आस्थाले (अन्तरात्मना) पूर्ण लगनका साथ (मद्गतेन) मबाट दिइएको भक्ति मतको आधारमा (माम्) मेरो (भजते) भजन गर्छ (सः) त्यो (अपि) पनि (युक्तम्) अज्ञान अंन्धाकारले जन्म-मरण, स्वर्ग-नरक, वाला साधनामा नै लिप्त छ । यो (मे) मेरो (मत) विचार हो ।

**यसैको प्रमाण पवित्र गीता अध्याय ७ श्लोक १८ मा र गीता अध्याय ५ श्लोक २९ र गीता अध्याय ६ श्लोक १५ मा स्पष्ट छ । यसै कारण गीता अध्याय १८ श्लोक ६२ मा भनिएको हो कि हे भारत ! तिमी सवै भावले त्यो परमात्माको शरणमा जाउ, उनकै कृपाले नै तिमीलाई परमशाान्ति सनातन परमधाम अर्थात् सतलोक प्राप्त हुनेछ । गीता अध्याय १५ श्लोक ४ मा भनिएको छ कि जव तिमीले गीता अध्याय ४ श्लोक ३४ मा वर्णित तत्त्वदर्शी सन्त भेट्यौ भने त्यसपछि परमपद् परमेश्वरलाई राम्ररी खोज्नु पर्दछ । जसमा गएको साधक यस संसारमा फेरि फर्केर आउदैन अर्थात् जन्म मृत्युबाट सधैकोलागि मुक्त हुन्छ । जुन पर मेश्वरले संसार रूपी वोटको निर्माण गर्नु भएको छ । म पनि त्यही आदि पुरूष परमेश्वर को शरणमा छु । वहाँकोनै भक्ति गर्नु पर्दछ ।**

**गीता अध्याय ३ श्लोक ५ देखि ९ मा पनि गीता अध्याय ६ श्लोक १० देखि १५ को ज्ञानलाई गलत सावित गरेको छ । अर्जुनले सोधे - प्रभु मनलाई रोक्न धेरै कठिन छ । भगवानले उत्तर दिनुभयो । अर्जुन मनलाई रोक्नु त हावालाई रोक्नु जस्तै हो । फेरि यो पनि भनेको छ कि निशन्देह कुनैपनि ब्यक्ति कुनै पनि वेला अलिकति पनि कर्म गरे विना रहदैन । जुन महामुर्ख मनुष्य सवै इन्द्रियहरूलाई बलपूर्वक रोकेर मनले केहि न केहि सोचिरहेकै हुन्छ । यसैकारण एक ठाउँमा हठयोग गरेर नबसी संसारिक काम गर्दा-गर्दै (कर्म योग) साधना गर्नु नै श्रेष्ठ हो । एक ठाउँमा वसेर साधना (अकर्मणा) गर्नाले तिम्रो जीवन निर्वाह कसरी हुन्छ ? शास्त्र विधि त्यागेर साधना (हठयोग एक आसनमा वसेर) गर्नाले कर्म बाध्नेको कारण हो । दोस्रो जुन शास्त्र अनुकूल कर्म गर्दा गर्दै साधना गर्नु नै श्रेष्ठ हो । यसैकारण संसारिक कार्य गर्दा गर्दै साधना गर । गीता अध्याय ८ श्लोक ७ मा भनिएको हो कि युद्ध पनि गर, मेरो सुमिरण पनि गर, यसप्रकार मलाई नै प्राप्त गर्नछौ । गीता अध्याय ७ श्लोक १८ मा र अध्याय १८ श्लोक ६२ मा भनिएको छ कि मेरो साधनाबाट हुने लाभ अति घटिया हो । त्यसैले त्यो परमेश्वरको शरणमा जाउ जसको कृपाबाट तिमी परमशान्ति र सतलोक प्राप्त गर्नेछौं । त्यो परमेश्वरको भक्ति विधि र पूर्णज्ञान (तत्वज्ञान) कुनै तत्वदर्शी संतलाई खोजेर उनीसित सोध, म (गीता ज्ञान दिने ब्रह्म/क्षरपुरूष) पनि जान्दिन ।**

**प्रश्नः- गीता अध्याय १५ श्लोक १८ अध्यायमा भनिएको छ कि म लोकमा वेदमा पुरूषोत्तम नामबाट प्रसिद्ध छु । यसबाट त यही प्रमाणीत भयो कि गीता ज्ञान दिने प्रभु नै सर्वशक्तीमान हो । र गीता अध्याय १२ पूरै गीता ज्ञान दाताको महिमा भन्दैछ ।**

**उत्तर :- गीताजीमा गीता ज्ञान दिने प्रभु आफ्नो साधना र समर्थता पनि भनिरहेको**

छ र साथै त्यो पूर्णपरमात्माको महिमा पनि भनिरहेको छ । र त्यो परमेश्वरको भक्तिको लागि तत्त्वदर्शी संततिर संकेत पनि गरिरहेको छ । गीता अध्याय १२ पूरै ब्रह्म (क्षरपुरूष-काल) को महिमाबाट परिपूर्ण छ र गीता अध्याय १३ त्यो पूरै त्यो पूर्ण परमात्मा अर्थात् आदि पुरूष परमेश्वरको महिमाबाट परिपूर्ण छ । गीता अध्याय १५ श्लोक १ देखि ४ सम्म र १६ देखि १७ मा पूर्णपरमात्मा तथा परब्रह्म, ब्रह्म आदिको निर्णायक ज्ञान हो ।

श्लोक १६ मा भनिएको हो कि पृथ्वी तत्त्वबाट निर्मित लोक (ब्रह्मको एकाईस ब्रह्माण्ड र परब्रह्मको सात शंख ब्रह्माण्ड पृथ्वी तत्त्वबाट वनेका कारण एक लोक पनि भनिन्छ) मा दुईवटा प्रभु छन् । एउटा क्षरपुरूष अर्थात् ब्रह्म र अर्को अक्षर पुरूष अर्थात् पर ब्रह्म । यी दुवै प्रभुहरूका अर्न्तगत जति पनि प्राणीहरू छन् । उनीहरूको र यी दुवै प्रभुहरूको स्थूल शरीर त नाशवान छ र जीवात्मा अविनाशी भनिएको हो ।

श्लोक १७ मा भनिएको छ कि वास्तवमा पुरूषोत्तम अर्थात् सर्वशक्तिमान पर मेश्वर त उपरोक्त दुवैभन्दा अर्कै नै हो, जुन परमात्मा भनिएको हो । जुन तीनै लोकमा प्रवेश गरी सवैको धारणपोषण गर्दछ । त्यो वास्तवमा अविनाशी परमेश्वर भनिएको हो ।

अध्याय १५ को श्लोक १८ मा गीताज्ञान दिने (क्षरपुरूष ब्रह्म) आफ्नो स्थिति बताउदै भनिरहेको छ कि मलाई त लोक वेद (दंत कथा) को आधारबाट पुरूषोत्तम भन्दछन् । किनकि म आफ्नो एक्काइसवटै ब्रमाण्डमा जतिपनि प्राणीहरू मेरो अधिनमा छन् । तिसबै चाहे स्थूल शरीरमा नाशवान छन्, चाहे आत्मा रूपमा अविनाशी छन्, उनीहरूभन्दा उत्तम ( श्रेष्ठ) हुँ । यसैकारण म लोक वेदको आधारमा पुरूषोत्तम प्रसिद्ध छुँ । वास्तवमा पुरूषोत्तम त कुनै अर्को परमेश्वर नै हो जुन गीता अध्याय १५ श्लोक १७ मा भनिएको हो ।

प्रश्न - गीता अध्याय १० श्लोक २ र ३ मा भनिएको हो कि मेरो उत्पतिको वार ेमा कोही पनि जान्दैनन्, जसले मलाई अनादि अजन्मा तत्वबाट जान्दछ त्यो सबै पापहरूबाट मुक्त हुन जान्छ । यसबाट स्पष्ट छ कि ब्रह्मको जन्म छैन र उनी सबै पापलाई नष्ट गर ी दिन्छ ।

उत्तर :- गीता अध्याय १० श्लोक २ लाई फेरि पढ्नुहोस, जसमा भनिएको छ कि मेरो उत्पतिलाई न देवता -ब्रह्मा, विष्णु, शिव आदि) र न महर्षीहरू जान्दछन् । किनकी ती सबै मबाट उत्पन्न भएका हुन् ।

यस श्लोकबाट स्वतः प्रमाणीत छ कि गीता ज्ञान दिने प्रभुको उत्पति अर्थात् जन्म त भएको हो तर काल (ब्रह्म) बाट उत्पन्न देवता र ऋषिजन जान्दैनन्, किनकि उनी कालबाट उत्पन्न भएका हुन्, जसरी बुवाको जन्मको विषयमा बच्चालाई थाहा हुँदैन तर वुवाको वुवा अर्थात् हजुरवुवाले सवै बताउनुहुन्छ । पूर्णपरमात्मा स्वयं काल लोकमा प्रकट भएर ब्रह्मको उत्पतिको विषयमा वताएको छ । कृपया सृष्टि रचना यसै पुस्तको ज्ञान गंगाको पृष्ठ ............देखि ..........सम्म पढ्नुहोस् ।

गीता अध्याय १० श्लोक ३ को अनुवाद गलत गरिएको हो । जसरी गीता अध्याय २ श्लोक १२ तथा अध्याय ४ श्लोक ५ मा आफुलाई नाशवान र जन्म-

मृत्यु पटक-पटक प्राप्त गर्ने भनिएको हो र अध्याय २ श्लोक १७ र अध्याय ८ श्लोक ३, ८ देखि १० र २० अध्याय १५ श्लोक ४, १६, १७ मा कुनै अर्को अविनाशी अनादि परमात्माको वारेमा भनिएको हो ।

अध्याय १० श्लोक ३ मा भनिएको हो कि जुन मानिसमा विद्वान अर्थात् तत्वदर्शी संत मलाई तथा त्यो अनादि वास्तवमा जन्मरहित सर्वलोकहरूका महेश्वर अर्थात् परमेश्वर लाई तत्त्वबाट जान्दछ । त्यो तत्त्वदर्शी संत सत्ज्ञान उच्चारण गर्दछ । जसले सत्साधना गर ेर पापबाट मुक्त हुन जान्छ । यसैको प्रमाण गीता अध्याय ४ श्लोक ३४ मा पनि छ । कृपया पढनुहोस् गीता अध्याय १० श्लोक ३ का यथार्थ अनुवाद ।

अध्याय १० को श्लोक २

न, मे, विदुः, सुरगणाः, प्रभवम्, न, महर्षयः,
अहम्, आदिः, हि, देवानाम्, महर्षीणाम्, च, सवर्शः ।।

अनुवाद : (मे) मेरो (प्रभवम्) उत्पतिलाई (न) न (सुरगणाः) देवताहरू जान्दछन् र (न) न (महर्षयः) महर्षिहरुनै (विदुः) जान्दछन्, (हिं) किनकी (अहम्) म (सर्वशः) सबै प्रकारले (देवानाम्) देवताहरुका (च) र (महर्षीणाम्) महर्षीहरुको पनि (आदिः) आदि अर्थात् उत्पतिको कारण छु ।

अध्याय १० को श्लोक ३

यः माम्, अजम्, अनादिम्, च, वेत्ति, लोकमहेश्वरम्,
असम्मूढः, मर्त्येषु, सर्वपापैः, प्रमुच्यते ।।

अनुवाद :- (यः) जुन विद्वान् व्यक्ति (माम्) मलाई (च) र (अनादिम्) सदा रहिरहने अर्थात् पुर ातन (अजम्) जन्म लिदैं नलिनेवाला (लोक महेश्वरम्) सवै लोकहरूका महान् ईश्वर अर्थात् सर्वोच पर मेश्वरलाई (वेत्ति) जान्दछ (सः) त्यो (मर्त्येषु) शास्त्रहरुको सही जानकार अर्थात् वेदहरू अनुसार ज्ञान र ाख्ने व्यक्ति (असम्मूढः) अर्थात् तत्वदर्शी विद्वान् (सर्वपापैः) सम्पूर्ण पापहरुलाई (प्रमुच्यते) विस्तृत वर्णन सहित भन्दछ अर्थात् उही सृष्टि ज्ञान र कर्महरुको सही वर्णन गर्दछ अर्थात् अज्ञानबाट पूर्ण रुपले मुक्त गरिदिन्छ । जसले गर्दा तत्वदर्शी संतद्वारा बताइएको वास्तविक साधनको आधारमा भक्ति गर्ने साधकको सबै पाप नष्ट हुन जान्छ ।

## "गीता ज्ञान दिने ब्रह्म ( काल ) को उत्पतिको संकेत"

अध्याय १० श्लोक २ मा भनिएको छ कि अर्जुन मेरो उत्पति (जन्म) लाई न त देवता जान्दछ न त महर्षिहरू नै जान्दछन् किनकी यि सबै यो मबाट जन्म लिएको हो । यसबाट स्वतः सिद्ध हुन्छ कि ब्रह्म (काल) को उत्पति त भएको हो तर देवता र ऋषि जान्दैनन्, जसरी बुवाको उत्पतिलाई बच्चा बताउन सक्दैन, तर हजुरवुवालाई थाहा हुन्छ । त्यसै प्रकार एक्काइस ब्रह्माण्डमा सर्वदेव ऋषि आदि ज्योति निरंजन ब्रह्म अर्थात् काल र प्रकृति (दुर्गा) को संयोगबाट उत्पन्न भएका हुन् । यसैले भन्दैछ कि मेरो उत्पतिलाई एक्कास ब्रह्माण्डहरूमा कोही जान्दैनन् किनकी सबैको उत्पति मबाट भएको हो । मात्र

पूर्णब्रह्म नै काल (ब्रह्म) को उत्पति बताउन सक्छ । किनकी ब्रह्म (काल) को उत्पति पर मअक्षर ब्रह्म (पूर्णब्रह्म) बाट भएको हो । जसको गीताजी अध्याय ३ को श्लोक १४, १५ मा ब्रह्मको उत्पतिको प्रमाण प्रत्यक्ष छ । अध्याय १० को श्लोक ३ जुन तत्वदर्शी अर्थात् विद्वान् ब्यक्ति मलाई र कहिले जन्म नलिने सवै लोकको महेश्वर अर्थात् अविनाशी परमात्मालाई जान्नुहुन्छ । वहाँ तीनै वेदहरू (ऋग्वेद, सामवेद, र यजुर्वेद) को जानकार तत्वदर्शी संत हुन् उनले बताए अनुसार भक्ति मार्गले साधना गरेमा सवै पाप नष्ट हुन जान्छ । गीताजीको अध्याय १५ को श्लोक १६, १७, १८ मा वर्णन गरिएको छ कि पूर्णपरमात्मा अविनाशी त अर्को हो जुन तीनै लोकहरूमा प्रवेश गरेर सवैको धारणपोषण गर्नुहन्छ । म (काल) को त मात्र यसैको लागि पुरूषोत्तम भन्छन् किनकि म एक्काइस ब्राह्मण्डमा मेरो अधिन स्थूल शरीरमा नाशवान प्राणीहरू र अविनाशी जीवात्माभन्दा उत्तम छु । यसैका लागि मलाई लोक वेद अर्थात् दन्त्य कथाहरूको आधारमा पुरूषोत्तम भनिएको हो तर वास्तवमा म अविनाशी वा पालन कर्ता होइन । गीताजीको अध्याय नं. ३ को श्लोक १४, १५ मा भनिएको हो । कि सर्वजीव अन्नबाट उत्पन्न हुन्छन् । अन्न वर्षाबाट हुन्छ । बर्षा यज्ञबाट हुन्छ । यज्ञ शुभ कर्मबाट, कर्म ब्रह्मबाट उत्पन्न भएको, ब्रह्म अविनाशी परमात्माबाट उत्पन्न भयो । वहाँ नै अविनाशी सर्वब्यापक परमात्मा नै यज्ञमा प्रतिष्ठित छन्, यज्ञहरूमा पूज्य छन्, वहाँले नै यज्ञको फल पनि दिनुहुन्छ । अर्थात् वास्तवमा अधियज्ञ पनि वहाँ नै हुनुहुन्छ ।

फेरि गीताजीको अध्याय १० को श्लोक नं. २ मा भनिएको हो कि मेरो उत्पतिको वारेमा कोहि पनि जान्दैनन् । यसबाट प्रमाणीत हुन्छ कि काल (ब्रह्म) पनि उत्पन्न भएको हो यसै कारण यो कुनै ठाउँमा आकारमा पनि छ । होइन भने कृष्णजी त अर्जुनको सामुन्ने खडा थियो वहाँ भन्न नै सक्दैनथे कि म अनादि अजम (अजन्मा) छु । यो सवै काल (अदृश्य ब्रह्म) नै श्री कृष्णजीको शरीरमा प्रेतवत प्रवेश गरेर भनेको हो । आफ्नो प्रतिष्ठाको सहि जानकारी गीता रूपमा दिएको हो ।

उपरोक्त विवरणबाट सिद्ध भयो कि ब्रह्मको उत्पति पूर्णब्रह्मबाट भएको हो । यो नै प्रमाण अथर्ववेद काण्ड ४ अनुवाक १ मंत्र ३ मा पनि छ ।        कृपया पढ्नुहोस् ।

काण्ड नं. ४ अनुवाक नं. १ मंत्र नं ३ः-

प्र यो जज्ञे विद्वानस्य बन्धुर्विश्वा देवानां जनिमा विवक्ति ।
ब्रह्म ब्रह्म उज्जभार मध्यात्रीचैरुच्चैः स्वधा अभि प्र तस्थौ ।।३।।

प्र - यः जज्ञे - विद्वानस्य - बन्धुः - विश्वा - देवानाम् - जनिमा - विवक्ति - बह्मः - ब्रह्म्णः- उज्जभार - मध्यात् - निचैः - उच्चैः - स्वधा - अभिः - प्रतस्थौ

अनुवाद :- (प्र) सर्वप्रथम (देवानाम्) देवताहरु र ब्रह्मण्डहरुको (जज्ञे) उत्पतिको ज्ञानलाई ( विद्वानस्य) जिज्ञासु भक्तका (यः) जुन (बन्धुः) वास्तविक साथि अर्थात् पूर्ण परमात्मा नै आफ्नो निज सेवकलाई (जनिमा) सबैको उत्पतिकर्ता आफूद्वारा सिर्जत गरिएकालाई (विवक्ति) स्वयम् नै ठीक-ठीक विस्तारपूर्वक बताउनुहुन्छ की (ब्रह्मणः) पूर्ण परमात्मले (मध्यात्) आफू मध्येबाट सर्वशक्तिले (ब्रह्म) ब्रह्म क्षरपुरुष अर्थात् काललाई (उज्जभार) उत्पन्न गरी (विश्वा) सम्पूर्ण संसारलाई अर्थात् सबैलोकहरुलाई

(उच्चैः) माथि सतलोक आदि (निचैः) तल परब्रह्म र ब्रह्मको सबै ब्रह्माण्डहरू (स्वधाः) आफ्नो धारण गर्न सक्ने (अभिः) आकर्षण शक्तिले (प्रतस्थौ) दुवैलाई राम्ररी स्थित गर्नु भयो ।

**भावार्थ :- पूर्णपरमात्मा आफ्नोद्धारा रचेको सृष्टिको ज्ञान र सबै आत्माहरूको उत्पतिको ज्ञान आफ्नो निजी दासलाई स्वयं नै सही बताउछ कि पूर्णपरमात्माले आफ्नो मध्य अर्थात् आफ्नो शरीरबाट आफ्नो शब्द शक्तिद्वारा ब्रह्म**

**(क्षरपुरूष काल) को उत्पति गर्‍यो र सबै ब्रमाण्डहरू माथी सतलोक, अलख लोक, अगमलोक, अनामीलोक आदि र तल परब्रह्मको सात संख ब्रह्माण्ड र ब्रह्मको २१ ब्रह्माण्डहरूलाई आफ्नो धारणा गर्ने आकर्षण शक्तिबाट स्थिर गरेको हो ।**

**जसरी पूर्णपरमात्मा कवीर परमेश्वर (कर्विदेव) ले आफ्नो निजी सेवक अर्थात् सखा श्री धर्मदासजी, आदरणीय गरिवदासजी, आदिलाई आफुबाट रचिएको सृष्टिको ज्ञान स्वयंले नै बताउनु भयो । उपरोक्त वेद मंत्र पनि यहि नै समर्थन गरिरहेको छ ।**

**काण्ड नं. ४ अनुवाद नं. १ मंत्र ७**

**योऽथर्वाणं पितरं देवबन्धु बृहस्पतिं नमसाव च गच्छात् ।**
**त्वं विश्वेषां जनिता यथासः कविर्देव न दभायत् स्वधावान् ।।७।।**

यः - अर्थर्वाणम् - पितरम् - देवबन्धुम् - बृहस्पतिम् - नमसा - अब - च - गच्छात् - त्वम् -विश्वेषाम् - जनिता - यथा - सः - कविर्देवः - न - दभायत् - स्वधावान्

अनुवाद :- (यः) जुन (अथर्वाणम्) अचल अर्थात् अविनाशी - पितरम्) जगत पिता (देवबन्धुम) भक्तहरूका वास्तविक साथी अर्थात् आत्माको आधार (बृहस्पतिम्) जगतगुरू (च) र (नमसा) विनम्र पूजारी अर्थात् विधिवत् साधकलाई (अव) सुरक्षा साथ (गच्छात्) सतलोक गएकालाई सतलोक लग्नेवाला (विश्वेषाम्) सबै ब्रह्मण्डहरूको (जनिता) रचयिता जगदम्बा अर्थात् मातृगुणले पनि युक्त (न दभायत्) कालको जस्तै धोका नदिनुहुने (स्वधावान्) स्वभाव अर्थात् गुणहरूवाला (यथा) जस्ताको त्यस्तै अर्थात् उस्तै (सः) त्यो (त्वम्) तपाई (कविर्देवः कविर्-देवः) कविर्देव हुन् अर्थात् भाषा भिन्न यसलाई कबीर परमेश्वर पनि भन्छन् ।

**भावार्थ :- यस मंत्रमा यो पनि स्पष्ट गरिदियो कि त्यो परमेश्वरको नाम कर्विवेद अर्थात् कवीर परमेश्वर हो, जसले सबै रचना गरेको हो ।**

**जुन परमेश्वर अचल अर्थात् वास्तवमा अविनाशी (गीता अध्याय १५ श्लोक १६, १७ मा पनि प्रमाण छ) जगत गुरू, आत्माधार, जुन पूर्णमुक्त भएर सत्लोक जानुभएको छ । वहाँलाई सतलोक लिएर जाने ब्यक्ति, सबै ब्रह्माण्डको रचनाकार, काल (ब्रह्म) को जस्तै धोका नदिने जस्ताको त्यस्तै स्वयं कविर्देव अर्थात् कवीर प्रभु हुन्, यही परमेश्वर सबै ब्रह्मण्डहरू र प्राणीहरूलाई आफ्नो शब्द शक्तिबाट उत्पन्न गरेका कारण (जनिता) आमा पनि भनिन्छ । बुबा, दाइ पनि वास्तवमा यो नै हो (देव) परमेश्वर पनि वहाँ नै हुनुहुन्छ । यसैका लागि यही कविर्देव (कवीर परमेश्वरको स्तुति गरिन्छ कि त्वमेव, माता च पिता त्वमेव त्वमेव वन्धु च सखा त्वमेव, त्वमेव सर्व मम् देव देव) यसै परमेश्वरको महिमा को पवित्र ऋग्वेद मंडल नं. १ सूक्त नं २४ मा विस्तृत विवरण छ ।**

प्रश्न :- वेदहरूमा कवीर अर्थात् कवीर नामको विवरण कसरी आयो ? वेदहरू त सृष्टिको प्रारम्भमा प्राप्त भएका थिए । कविर्देव (कवीर परमेश्वर) त सन् १३९८ मा उत्पति भएको हो ।

उत्तर :- पूर्णपरमात्माको वास्तविक नाम कविर्देव हो र उपमात्मक नाम सत्पुरूष परमअक्षर ब्रह्म पूर्णब्रह्म आदि हो । जसरी देशको प्रधानमंत्रीज्यूको शारीरको नाम केही अरू भए पनि प्रधानमंत्री प्राइममिनिष्टर आदि पदको नाम हो । यो नै पूर्णपरमात्मा कविर्देव नामान्तर गरेर चारै युगहरूमा आएको हो र सृष्टि वा वेदहरूको रचनाभन्दा पहिले पनि अनामी लोकमा मानव सदृश शरीरमा कविर्देव नामले विद्यमान थिए । वहाँ कविर्देव फेरि सतलोकको रचना गरेर सतलोकमा वस्नु भयो । त्यसपछि परव्रह्म र ब्रह्मको सवै लोक र बेदहरूको रचना गर्नुभयो । यसै कारणले वेदहरूमा कविर्देवको विवरण छ ।

## "कवीर साहेवबाट विभीषण तथा मंदोदरीलाई शरणमा लिनु"

परमेश्वर मुनिन्द्र अनल अर्थात् नल तथा अनील अर्थात् निललाई शरणमा लिएपछि श्रीलंकामा जानुभयो । त्यहाँ एक परम भक्त चन्द्र विजयजीको १६ सदस्यको परिवार बस्दथे । त्यहाँ भाँट जातिमा उत्पन्न पूण्यकर्मी प्राणी थिए । परमेश्वर मुनिन्द्र (कविर्देव) को उपदेश सुनेर पुरै परिवारहरूले नाम दान प्राप्त गरे । परमभक्त चन्द्रविजयज्यूकी पत्नी भक्तमति कर्मवती लंकाका राजा रावणकी रानी मन्दोदरीकी नोकर्नी (सेवा) को काम गर्दै थिइन । रानी मंदोदरीलाई हास उठ्ने खालका चुट्किलाहरू सुनाएर उनलाई मनोरंजन गराउने गर्थिन् । भक्त चन्द्रविजय राजा रावणको राजदरवारमा नोकरी गर्दथ्यो । राजाका बढाइको गानाहरू सुनाएर उहाँलाई प्रसन्न गराउथ्यो ।

भक्त चन्द्रविजयकी पत्नी भक्तमति कर्मवति परमेश्वरबाट उपदेश प्राप्त गरेपछि रानी मंदोदरीलाई प्रभुचर्चा जुन सृष्टी रचना आफ्नो सद्गुरुदेव मुनिन्द्रबाट सुनेकि थिइन् । प्रत्येक दिन सुनाउन थालिन ।

भक्तमति मंदोदरी रानीलाई अति आनन्द लाग्न थाल्यो । कयौं घण्टासम्म प्रभुको सत्यकथालाई भक्तमति कर्मवति सुनाउदै रहन्थिन र रानी मंदोदरीको आँखाबाट आँसु आउदैर हन्थ्यो । एक दिन रानी मन्दोदरीले कर्मवतीसंग सोधिन तपाईले यो ज्ञान कसबाट सुन्नु भयो । तपाई त धेरै उल्टो जथाभावी कुरा गर्नु हुन्थ्यो । यति परिवर्तन परमात्मा तुल्य संत वाहेक अरू कसैबाट हुन सक्दैन् । तव कर्मवतीले वताइन कि हामीले एकजना परम संतबाट अहिले नै उपदेश लिएका छौं । रानी मंदोदरीले संतको दर्शनको अभिलाषा ब्यक्त गर्दै भनिन् कि तपाईको गुरू अर्को पटक आएपछि वहाँलाई मेरो घरमा वोलाएर ल्याउनु होला । आफ्नी मालकिनीको आदेश प्राप्त गरी टाउको निहुराएर सत्कार पूर्वक भनीन् कि जुन हजुर

को आज्ञा, हजुरकी नोकरानी त्यही गर्दछिन् । मेरो एउटा विन्ती छ । भन्छन् की संतलाई आदेशपूर्वक वोलाउनु हुँदैन स्वयं गएर दर्शन गर्नु फाइदाकारी हुन्छ अरू जसरी हजुरको आज्ञा ठीक त्यस्तै हुन्छ । माहारानी मंदोदरीले भनिन् कि यसपाली तपाईको गुरूदेवज्यू आएपछि मलाई बताउनु म स्वयं दर्शन गर्दछु । परमेश्वरले फेरि श्रीलंकामा कृपा गर्नुभयो । मंदोदर ी रानीले उपदेश प्राप्त गरिन् । केहि समयपछि आफ्नो प्रिय देवर श्री भक्त विभिषणजीलाई उपदेश दिन लगाउनु भयो । भक्तमती मंदोदरी उपदेश प्राप्त गरेर रातदिन प्रभुको भक्तिमा रहन थालिन् । आफ्नो लोग्ने रावणलाई पनि सतगुरू मुनिन्द्रजीबाट उपदेश प्राप्त गर्न कतिचोटी विन्ति गरिन् । तर रावण मानेन र भन्ने गर्थे कि मैले परमशक्तिशाली महेश्वर मृत्युंज्य शिवजीको भक्ति गरेको छु । यसका तुल्य कुनै शक्ति पनि छैन्, तपाईलाई कसैले वहकाउमा पारेको छ ।

केहि समय नवित्दै वनवास प्राप्त सिताजीलाई अपहरण गरेर रावणले आफ्नो नौलखा बगैचामा कैद गरीराख्यो । भक्तमती मंदोदरीले पटक-पटक प्रार्थना गरेपछि पनि र ावणले माता सितालाई छाड्न चाहेनन् । तव भक्तमती मंदोदरीजीले आफ्नो गुरूदेव मुनिन्द्रज्यूलाई भनिन् महाराजजी मेरो श्रीमान्ले कुनै अर्को पुरूषको श्रीमतीलाई अपहरण गर ेर ल्याएको छ । म सहन सकिरहेको छुइन वहाँ तिनलाई फिर्ता छोडन कुनैपनि हालतमा स्वीकार गरिगरिरहनु भएको छैन् । तपाई कृपा गर्नुहोस् मेरो प्रभु ! आजसम्म मैले जीवनमा यस्तो दुःख देखेको थिइन् ।

परमेश्वर मुनिन्द्रजीले भन्नुभयो छोरी मंदोदरी यो स्त्री कुनै साधारण स्त्री होइन । श्री विष्णुज्यूले श्रापवस पृथ्वीमा आउनु परेको हो । वहाँ श्री राजा दशरथको छोरा रामचन्द्र अयोध्यावासी हो । वहाँलाई १४ वर्षको वनवास प्राप्त भएको छ । लक्ष्मीजी स्वंयम सिताको रूप वनाएर वहाँसंग वनवासमा थिइन । तिनलाई रावण एउटा साधु भेष वनाएर धोका दिएर उठाएर ल्याएको हो । उनी स्वयं लक्ष्मी नै सिता हुन् । तिनलाई चाडै फिर्ता गरेर माफी मागेर आफ्नो जीवनको याचना रावणले गऱ्यो भने यसैमा उनलाई भलाई छ ।

भक्तमति मंदोदरीले अनेकौ पटक प्रार्थना गरे पनि रावण मानेन् र भन्यो कि त्यो दुई वनवासी जंगलमा घुम्ने मेरो के विर्गान सक्छन् । मसंग असंख्य सेनाहरू छन् । मसंग एकलाख छोरा र सवाँलाख नातीहरू छन् । मेरो छोरा मेघनाथले स्वर्गको राजा इन्द्रलाई हर ाएर उनकी छोरीसंग विवाह गरेर राखेका छन् । तेतिस करोड देवतालाई मैले कैद गरेर र ाखेको छु । तिमी मलाई त्यो दुई वेसाहारा घुम्दै गरेको वनवासीहरूलाई भगवान वताएर डर ाउन चाहन्छौ । यो स्त्रीलाई फिर्ता गर्दीन ।

मंदोदरीले भक्तिमार्गको ज्ञान जुन आफ्नो पूज्य गुरूदेवबाट सुनेकी थिइन र ावणलाई धेरै सम्झाइन । विभिषणले पनि आफ्नो जेठो दाईलाई सम्झायो । रावण आफ्नो भाइ विभिषणलाई कुट्यो र भन्यो तिमी ज्यादै नै रामचन्द्रको पक्षबाट बोल्छौ उसगैं नै गइहाल ।

एक दिन भक्तमती मंदोदरीले आफ्नो पूज्य गुरूदेवलाई भनिन् कि हे गुरूदेव मेर

ो सुहाग नाश हुन गइरहेको छ । एक पटक तपाई पनि मेरो लोग्नेलाई संझाईदिनुहोस् । यदि वहाँ तपाईको कुरालाई पनि मानेनन् भने मलाई विधवा हुनुको दुःख हुँदैन ।

आफ्नी छोरी मंदोदरीको प्रार्थना स्वीकार गरेर कबीर साहेव राजा रावणको दरवार नजिक उभिएर चौकिदारसंग राजा रावणसंग भेटनको लागि प्रार्थना गरे । चौकिदारले भने ऋषिज्यू यसवेला हाम्रो राजाजी आफ्नो दरबार लगाउनु भएको छ । यस वेला भित्रको संदेश वाहिर आउन सक्छ । वाहिरको संदेस भित्र जान सक्दैन । हामी वाध्य छौ । तव पूर्णप्रभु विलिन भएर राजा रावणको दरवारमा उपस्थित हुनुभयो । रावणको दृष्टि ऋषिलाई पर्ने वित्तिकै रिसाएर भने मेरो आज्ञाको विना कसले भित्र आउन दिएको हो । उसलाई ल्याएर मेरो सामुन्ने काटीहाल । अनि परमेश्वरले भन्नु भयो कि राजन ! तपाईको चौकिदारले भित्र आउन मनाहि गरेको थियो । उनीहरूलाई थाहा छैन् कि म भित्र कसरी आएँ । रावणले सोधे तिमी भित्र कसरी आयौ ? तव पूर्णप्रभु मनिन्द्र वेशमा अदृष्य भएर फेरि प्रकट हुनुभयो र भन्नुभयो कि म यसरी आएँ । रावणले सोधे कि आउनुको कारण बताउ । तव प्रभुले भने कि तपाई योद्धा भएर एक कमजोर स्त्रीलाई अपहरण गरेर ल्याउनुभएको हो । यो तपाईको मान मर्यादाको विपरित छ । यो कुनै साधारण स्त्री होइन् । यो स्वयं लक्ष्मीजीको रूप हो ।

श्री रामचन्द्रजी जुन वहाँको लोग्ने हुनुहुन्छ । वहाँ स्वयं विष्णु हुनुहुन्छ । उनलाई फिर्ता गरेर आफ्नो जीवनको भिक्षा माग्नुहोस्, यसैमा तपाईको भलाई छ । यति सुन्ने वित्तिकै भगवान शिवको भक्त रावण रिसाएर तरवार लिएर सिंहासनबाट हाम फालेर दगुर्दै ऋषिलाई मार्न ७० चोटी तरवार चलायो । परमेश्वर मुनिन्द्रजीले एउटा झाडुको सिक हातमा समातेर त्यसलाई ढालको रूपमा अगाडी खडा गरीदिए । रावणले चलाएको तरवार ७० चोटी त्यही सिक माथी लाग्यो । यस्तो आवाज आयो जस्तो फलामको खम्वा (पिलर) माथी तरवार लागेको होस् । सिक अलिकति पनि हल्लिन सकेन । रावण पसिना पसिना भयो । फेरि पनि आफ्नो अहंकारवस मानेन । यो त थाहा पायो कि यो कुनै सामान्य ऋषि होइन । भने कि मलाई तपाईको एउटा पनि कुरा सुन्नु छैन, तपाई जान सक्नु हुन्छ । परमेश्वर विलिन हुनुभयो । र मन्दोदरीलाई सबै कहानी सुनाएर जानुभयो । रानी मन्दोदरीले भनिन् गुरूदेव अब मलाई विधवा हुनमा कुनै कष्ट हुँदैन ।

श्रीराम चन्द्र र रावणको युद्ध भयो । रावणको मृत्यु भयो । जुन लंकाको राज्यलाई रावणले भगवान शिवको कठिन तपस्या गरेर दश चोटी टाउको चढाएर प्राप्त गरेको थियो । त्यो सुख पनि क्षणभरमा रावणको गयो । र नरकको भागी बन्नु पऱ्यो । यसको विपरित पूर्णपरमात्माको सतनाम साधक विभिषणलाई कठिन साधना नगरेपनि पूर्णप्रभुको कृपाबाट राज्यमा पूर्णशान्ति भयो । हजारौ वर्षसम्म विभिषणले लंका राज्यको सुख प्राप्त गरे । प्रभुको कृपाबाट राज्यमा पूर्णशान्ति भयो । सबै राक्षसी प्रवृतीका ब्यक्तिहरूका विनाश भइसकेको थियो । भक्तमती मंदोदरी र भक्त विभिषण र परमभक्त चन्द्रविजयीजीको परिवारको जम्मा १६ सदस्य र अरू जसले पूर्णपरमेश्वरको भक्ति प्राप्त गरेर जीवनभरी मर्यादापूर्वक भक्ति गरेका थिए ति ब्यक्तिहरू यस पृथ्वीमा पनि सुखि रहे र

अन्तसमयमा परमेश्वरको विमानमा बसेर सत्लोक गए । यसैको लागि पवित्र गीता अध्याय ७ मंत्र १२ देखि १५ मा भनिएको छ कि तीनै वटा गुण (रजगुण ब्रह्माजी, सतगुण विष्णुजी, तमगुण शिवजी) को भक्तिबाट पाएको क्षरभरको सुविधाले जसको ज्ञान हराइसकेको हो, त्यो राक्षस स्वभावको मनुष्यमा तल्लो खराव कर्म गर्ने मुर्खको म (काल ब्रह्म) लाई पनि भज्दैनन् ।

फेरि गीता अध्याय ७ मंत्र १८ मा गीता वोल्ने (काल ब्रह्म) प्रभु भनिरहेको छ । कि कुनै एकजना उदार आत्मा मेरो नै साधना गर्दछ किनकि उनलाई तत्तदर्शी संत भेटिएको छैन । त्यो पनि राम्रो आत्माहरू मेरो (अनुतमाम्) अति नै अश्रेष्ठ (गतिम्) मुक्तीको स्थितीमा आश्रित हुन पुगे । त्यो पनि पूर्णमुक्त पाएको छैन् । यसैकारण पवित्र गीता अध्याय १८ मंत्र ६२ मा भनिएको हो कि हे अर्जुन ! तिमी सवै भावबाट त्यो परमेश्वर (प्रभु परमात्मा तत्ब्रह्म) को शरणमा जाउ । वहाँकै कृपाबाट तिमी सवै परमशान्ति र सतलोक अर्थात् सनातन परमधाम प्राप्त हुनेछ ।

यसै कारण पूण्य आत्माहरूसित निवेदन छ कि आज यो दासको पनि दाससंग पूर्णपरमात्मा प्राप्तिको वास्तविक विधि प्राप्त छ । निःशुल्क उपदेश लिएर फाइदा उठाउनुहोस ।

## "द्वापर युगमा इन्द्रमतिलाई शरणमा लिनु"

द्वापर युगमा चन्द्रविजय नामको एकजना राजा थिए । उनकी स्वास्नी इन्द्रमति धेर ै नै धार्मिक प्रवृतीको थिइन् । संत महात्माहरूलाई धेरै मान सम्मान गर्थिन । तीनले एक गुरूदेव पनि वनाएकि थिइन् । तीनको गरूदेवले वताएको थियो कि छोरी साधु संतहरूको सेवा गर्नुपर्छ । संतहरूलाई खाना खुवाउनाले धेरै फाइदा हुन्छ । एकादशीको ब्रत, मंत्रको जप आदि साधनाहरू जुन गुरूदेवले बताउनु भएको थियो । तिनी भगवत भक्तिमा धेरै लागेकी थिइन् । गुरूदेवले वताएको थियो कि संतहरूलाई भोजन खुवाउदै रह्यो भने तिमी अगाडी पनि रानी वन्छौ र तिमीलाई स्वर्ग प्राप्त हुन्छ । रानीले सोचिन कि प्रत्येक दिन एकजना संतलाई भोजन अवश्य खुवाउछु । तीनले यो प्रतिज्ञा मन मनै गरिन् कि म खाना पछि खाने गर्छु पहिले संतलाई खुवाउछु । यसबाट मलाई सम्झना भइरहन्छ । कहि म विर्सिन्छु । रानी प्रत्येक दिन पहिलो एकजना संतलाई खाना खुवाउथिन् फेरि आफु खान्थिन् । वर्षै सम्म यो क्रम चलिरहयो ।

एक समयमा हरिद्वारमा कुम्भको मेलाको संयोग भयो । जति पनि त्रीगुण मायाको उपासक थिए त्यो सवै गंगामा नुहाउनको लागि गए यसकारण रानीले कतिदिन खाना खुवाउन कुनै पनि संत भेटिनन् । रानी इन्द्रमतीले स्वयं पनि खाना खाइनन् । चौथो दिन आफ्नी बांदीसंग भनिन् की बांदी हेर कुनै संत भेटछकी । नत्र आज तिम्रो रानी जिवित र हदैन । आज मेरो प्राण निक्लेर गएपनि म खाना खान्न् । त्यो दिन दयालु परमेश्वर कवीर आफ्नो पूर्ववाला भक्तलाई शरणमा लिनको लागि न जाने के के कारण वनाईदिनु हुन्छ ?

बाँदीले माथी चढेर देखिन कि सामुन्नेबाट एक जना संत आईरहेको थियो । सेतो कपडा थियो । द्वापर युगमा परमेश्वर कवीर करूणामय नामले आएको थियो । बाँदी तल आएर रानीलाई भनिन् एक ब्यक्ति छ जुन साधु जस्तै देखिन्छ । रानीले भनिन् कि छिटो वोलाएर ल्याउ । बाँदी दरवारबाट वाहिर आइन र प्रार्थना गरिन् कि साहेव मेरी रानीले तपाईलाई याद गर्नुभएकोछ । करूणामय साहेवले भने कि रानी मलाई किन याद गरीन, मेरो र रानीको बीच के सम्बन्ध ? बाँदीले सवै कुरा भनिन् । करूणामय कवीर साहेवले भन्नु भयो कि रानीको आवश्वकता छ भने यहाँ आउछिन् म यहाँ उभिएको छु । तिमी नोकर्नी र उनी रानी । म त्यहाँ जाउँ र फेरि उनले भन्लिन् कि तिमीलाई कसले वोलाएको हो । अथवा उनको राजाले केहि भन्यो अनि ? छोरी सन्तहरूको अनादर धेरै पापदायक हुन्छ । बाँदी फेरि फिर्ता आइन र रानीलाई सबै कुरा सुनाइन । त्यसपछि रानीले भनिन् कि बाँदी मेरो हात समाउ र हिँड । जाने वित्तिकै रानी दण्डवत् प्रणाम गरेर प्रार्थना गरिन् कि हे भगवन ! चाहन्छु कि तपाईलाई काँधमा बसाउ । करूणामय साहेवले भने छोरी ! म यही हेर्न चाहन्थे कि तिमीमा कुनै श्रद्धा छ कि छैन् । त्यसै भोकै मरिरहेकी छौ । रानीले आफ्नो हातले खाना पकाइन । करूणामय रूपमा आएका कविर्देवले भन्नु भयो कि म खाना खाँदिन । मेरो शरीर खाना खाने लायकको छैन । तव रानीले पनि भनिन् कि म पनि खाना खान्न । करूणामय साहेवजीले भन्नु भयो कि ठीक छ छोरी ल्याउ खाना खान्छु । किनकि समर्थ त्यसैलाई भनिन्छ जुन जे चाहे त्यो गरोस् । करूणामय साहेवले खाना खानुभयो फेरि रानीसंग सोध्नभयो कि तिमी जुन यो साधना गर्छौ यो तिमीलाई कसले वताएको छ ? रानीले भनिन् कि मेरो गुरूदेवले आदेश दिनु भएको छ । कवीर साहेवले सोध्नु भयो कि के आदेश हो दिएको छ, तिम्रो गुरूदेवले ? इन्द्रमतीले भनिन् कि ब्रह्मा, विष्णु, महेशको पूजा, एकादशीको ब्रत, तीर्थ भ्रमण, देवी पूजा, श्राद्ध निकाल्नु मंदिरमा जानु, संतको सेवा गर्नु । करूणामय कवीर साहेवले भने कि जुन साधना तिम्रो गुरूदेवले दिएको हो त्यसबाट तिमीलाई जन्म र मृत्यु र स्वर्ग नरक चौरासी लाख योनीको कष्टबाट छुटकारा हुन सक्दैन । रानीले भनिन् कि महाराजजी जतिपनि संतहरू छन् । आ-आफ्नो शक्ति बताँउछन् । मेरो गुरूदेवको वारेमा केहि नभन्नुहोला । म चाहे मुक्त होउ वा नहोउ । अव करूणामय (कवीर) साहेव सोच्दै हुनुहुन्छ कि यो सोझा जीवलाई कसरी सम्झाउनु ? यसले जुन पुच्छर समाती सकेछ उसलाई छोडन सक्दैन बरू मर्न सक्छ । करूणामय साहेवले भन्यो कि छोरी त्यसो त तिम्रो इच्छा म कसैको निन्दा गरि रहेको छैन । के म तपाईको गुरूदेवलाई गाली गरिरहेको छु या केहि भनेको छु ? म त भक्ति मार्ग वताइरहेको छु कि भक्ति शास्त्र विरूद्ध छ, तिमीलाई पार हुन दिदैन् । र न तिम्रो कुनै आउने कर्म दण्ड कट्छ र सुन, आज देखि तेस्रो दिन तिम्रो मृत्यु हुनेछ । न तिम्रो गुरूले बचाउन सक्दछ र न तिम्रो नक्कली साधनाले बचाउन सक्दछ । (जव मर्ने समय आउछ तव जीवलाई डर लाग्छ, त्यसरी त्यो मान्दैन) रानीले सोचिन कि संतले झुठो बोल्दैन । कही म पर्सि नै मरिहाल्छु । डरले करूणामय साहेवसंग सोधिन कि के मेरो प्राण बाँच्न सक्छ । यदि तिमी मबाट उपदेश लियौ भने मेरा शिष्य वन्छौ । पछाडीको पूजा त्याग गर्छौ तर तिम्रो

ज्यान बाँच्छ । इन्द्रमतीले भनिन् मैले सुनेको छु कि गुरूदेव वदल्नु हुँदैन पाप लाग्छ । कवीर साहेव (करूणामय) ले भन्नुभयो कि होइन छोरी यो पनि तिम्रो भ्रम हो । एक जना वैद्य (डाक्टर) को औषधि नलागेमा के अर्को बाट औषधि लिइदैन? एकजना पाँच कक्षाको शिक्षक हुन्छ र अर्को उच्च कक्षाको अध्यापक हुन्छ, छोरी अगाडीको कक्षामा जानुपर्छ । के पुरै उमेर पाँचौ कक्षामा लगाउछौं । यसलाई छोडनु पर्छ तिमी अव अगाडीको पढाई पढ म पढाउन आएको छु । यसरी त मान्दैनथ्यो तर मृत्यु डर देखीन थाल्यो कि संतले भनिरहेको छ भने केहि गडवड नभइजाओस् । यस्तो विचार गरेर इन्द्रवतीले भनिन् जसरी तपाई भन्नुहुन्छ म त्यसरी नै गर्न तयार छु । करूणामय कवीर साहेवले उपदेश दिनुभयो । भन्न भयो कि तेस्रो दिन मेरो रूममा काल आउँछ । तिमी उसंग नवोल्नु, जुन नाम मैले दिएको छु । दुई मिनेटसम्म उसको जाप गर्नु दुई मिनेट पछि उसलाई हेर्नु र त्यसपछि सत्कार गर्नु । त्यसो त गुरूदेव आएपछि तुरून्त खुट्टामा ढोग्नु पर्छ । यो मेरो यसपाली लागि आदेश हो रानीले भनिन् ठीक छ ।

अव रानीलाई त चिन्ता बनेको थियो, श्रद्धाले जप गरिरहेको थिइन् (कवीर साहेव) करूणामय साहेवको रूपमा काल आयो वोलायो इन्द्रवती, इन्द्रवती, उसलाई त पहिले देखि डर थियो । स्मरण गरिरहेकी थिइन् । काल तिर हेरीनन् । दुई मिनेट जाप पछि हेर्ने वित्तिकै कालको स्वरूप वदली सक्यो । कालको जस्ताको त्यस्तै अनुहार देखिन थाल्यो । करूणामय साहेवको स्वरूप रहेनन् । जव काल ले देख्यो कि आफ्नो त स्वरूप नै वदलिसक्यो उसलाई थाहा भयो कि यससित कुनै शक्ति युक्त मंत्र छ । यो भनेर गयो कि तिमीलाई फेरि हेर्छु । अहिले त बाँचिस् । रानी धेरै खुशि भइन, खुसीले गद्‌गद् भइन् । आफ्नी बाँदीलाई भन्न थालिन् की आज मेरो मृत्यु हुनु थियो, मेरो गुरूदेवले रक्षा गर्नुभयो । मलाई लिनको लागि काल आएको थियो राजाले भने कि तिमी यस्तै नाटक गर्दै रहन्छौ । काल आएपछि के तिमीलाई छाडिदिन्थ्यो ? संतहरू त्यसरी नै बहकावमा राख्छन् । अव यो कुरालाई त्यो कसरी मानुन खुसी खुसीमा रानी पलङ्मासुतिन केहि छिन पछि काल सर्प वनेर फेरि आयो र रानीलाई टोक्यो । सर्पले टोक्ने वित्तिकै रानीले थाहा पाइन रानी जोडले कराइन । मलाई सर्पले टोक्यो । नोकर भाग्यो । हेर्दा हेर्दै एक पानी बग्ने नाली भएर त्यो सर्प भाग्यो । आफ्नो गुरूदेवलाई चिच्याएर वोलाउदै रानी वेहोस् भइन् । करूणामय कवीर साहेव त्यहाँ प्रकट हुनुभयो । मानिसलाई देखाउनको लागि मंत्र उच्चारण गर्नुभयो (वहाँ त विना मंत्रको जिवित गर्न सक्नुहुन्थ्यो कुनै मंत्र तंत्रको आवश्वकता थिएन) इन्द्रमतीलाई जीवित गरिदिनु भयो । रानीले धरै खुसी प्रकट गरिन् भनिन् यदि म आज तपाईको शरणमा नगएको भए मेरो मृत्यु हुने थियो । साहेवले भने हे इन्द्रमती यो काललाई म तिम्रो घरमा प्रवेश पनि गर्न दिदैनथे । तिमी माथी यो आक्रमण पनि हुदैनथ्यो । तर तिमीलाई विश्वास हुदैनथ्यो । तिमी यो सोच्दथ्यौ कि म माथी कुनै आपत्ती आउनेवाला थिएन । गुरूजीले मलाई वहकाउमा पार ेर नाम दिनुभयो । यसैकारण तिमीलाई अलि अलि कति झटका देखाएको छु । नभने छोर

ी तिमीलाई विश्वास हुदैनथ्यो ।

धर्मदास् यहाा घना अंधेरा, बिन परचय जीव जम का चेरा ।।

कवीर साहेब (करूणामय) ले भने कि अब जव म चाहन्छु, तव तिम्रो मृत्यु हुन्छ, गरिवदासजी भन्नु हुन्छ ।

गरीब, काल डरै करतार से, जय जय जय जगदीश ।
जौरा जौरी झाडती पग रज डारे शीश ।।

यो काल कवीर भगवान (कवीर परमेश्वर) सित डराउँछ र यो मृत्यु कवीर साहेवको जुत्ता सफा गर्दछ अर्थात् नोकर सामान छ । फेरि त्यो धुलोलाई आफ्नो टाउकोमा लगाउँछ कि तपाई जसलाई मार्न आज्ञा दिनुहुन्छ उस कहाँ जान्छु, होइन भने म जादिन ।

गरीब, काल जो पीसै पीसना, जौरा है पनिहार ।
ये दो असल मजूर हैं, मेरे साहेब के दरबार ।।

यो काल जुन यहाँ को २१ ब्रह्मण्डको भगवान (ब्रह्म) छ जुन ब्रह्मा, विष्णु, महेशको बुवा हुनुहन्छ । त्यो त मेरो कवीर साहेवको पिठो पिध्ने काम गर्छ अर्थात् पक्का नोकर छ र जौरा (मृत्यु) मेरो कवीर साहेवको पानी ल्याउछिन् अर्थात् एउटी विशेष नोकर्नी छ । यो दुई असल मजदुर मेरो साहेवको दरवारमा छन् । केहि दिन पछि साहेव फेरि आउनुभयो । रानी इन्द्रवतीलाई सतनाम प्रदान गर्नुभयो ।

फेरि केहि समय पछि करूणामय साहेवले इन्द्रवतीलाई धेरै श्रद्धा देखेर सारनाम दिनुभयो । शब्दको उपलब्धी गराउनुभयो । जव साहेव जादै रहनुहुन्थ्यो तव इन्द्रवती प्राथर्ना गर्थीन कि मेरो लाग्ने राजालाई सम्झाउनुहोस् । वहाँ पनि मानोस् तपाईका चरणमा आउनुभयो भने मेरो जीवन सफल हुन्छ । चन्द्र विजयसंग कवीर साहेवले प्रार्थना गर्नुभयो कि चन्द्र विजय तपाई पनि नाम लिनुहोस्, यो दुई दिनको राज र ठाट हो । फेरी चौरासी लाख यौनीमा प्राणी जान्छ । चन्द्र विजयले भनेकि भगवन म त नाम लिन्न र तपाईकी शिष्यलाई मनाही पनि गर्दिन चाहे सम्पूर्ण खजाना नै दान गरेपनि, चाहे जुन सुकै सत्संग गराउ म मनाही गर्दिन । कवीर साहेवले सोध्नुभयो तपाई नाम किन लिनु हुन्न ? चन्द्र विजयी र ाजाले भने कि मलाई त ठूलो-ठूलो राजाहरूको पार्टीमा जानुपर्छ । कवीर साहेवले भने पार्टीमा जान नामले के वाधा पुर्‍याउछँ ? सभामा जाउ, त्यहाँ काजु खाउँ, दुध पिउ, शरवत, जुस पिउ तर शराव प्रयोग नगर । शराव पिउनु महापाप हो तर राजाले मानेनन् ।

रानीको प्रार्थना माथी करूणामय (कवीर) साहेवले राजालाई फेरि सम्झायो कि विना नामको यो जीवन व्यर्थ हुन जान्छ । तपाई नाम लिनु । राजाले फेरि भने कि गुरूजी मलाई नामको लागि नभन्नु तपाईको शिष्यालाई म मनाहि गर्दिन । चाहे जति पनि सत्संग गरोस् । साहेवले भने कि छोरी यसको दुई दिनको सुखलाई देखेर बुद्धि भ्रष्ट भईसकेको छ । तिमी प्रभुको भक्तिमा लाग । आफ्नो कल्याणमा लाग । यहाँ कोही कसैको लोग्ने होइन । दुईदिनको सम्वन्ध छ । आफ्नो कर्म वनाउँ । छोरी इन्द्रमती ८० वर्षकि बुढी भए पछि कहाँ ४० बर्षको उमेरमा मर्नु थियो । जव शरीरपनि कमजोर हुदै गयो, तव करूणामय साहेवले

भन्नुभयो अव भन इन्द्रमती के चाहन्छौ ? जान चाहन्छौ सतलोक ? इन्द्रमतीले भनिन् कि साहेव तयार छु एकदमै तयार छु दाता । करूणामय साहेवले भने कि तिम्रो नाती वा नातिनीमा केहि ममता त छैन ? रानीले भनिन् विल्कुल छैन साहेव । तपाईले यस्तो ज्ञान दिनु भयो । यस फोहोर संसारको के इच्छा गरूँ । कवीर साहेवले भने हिँड छोरी । रानीको मृत्यु भयो । साहेव कवीर (करूणामय) इन्द्रमती रानीको आत्मालाई माथी लगे । यसै ब्रमाण्डमा एउटा मानसरोवर छ । त्यस मानसरोवरमा गएर यस आत्मालाई नुहाउनु पर्छ । यस प्राणीलाई कवीर साहेव त्यहाँ केहि समयसम्म राख्नुहुन्छ । त्यसपछि सोध्नुहुन्छ कि अव फेरि भन्न तिम्रो केहि इच्छा छ भने अर्को जन्म लिनु पर्छ यदि मनमा ईच्छा वाँकि भयो भने सत्लोक जान पाउँदैन । इन्द्रमतीले भनिन् कि साहेव तपाई त अन्तर्यामी हुनुहुन्छ कुनै इच्छा छैन । तपाईको भक्तिको इच्छा छ तर एउटा मनमा शंका वनिरहेको छ कि मेरो जुन लोग्ने थिए वहाँले मलाई कुनै पनि धार्मिक कार्यमा कहिल्यै पनि मनाहि गर्नु भएन । नत्र आजको लोग्नेले आफ्नो स्वास्नीलाई वाधा पुर्‍याईदिन्छ । यदि वहाँले मलाई मनाहि गरेको भए म तपाईको भक्तिमा लाग्न पाउदैनथे । मेरो कल्याण हुँदैनथ्यो । वहाँको यस शुभ कार्यमा सहयोगको कुनै लाभ मिल्छ भने वहाँ माथी पनि दया गर्नु होला दाता । अव साहेवले देखे कि यो नदान यसको पछाडी फेरि पर्‍यो । साहेवले भने ठीक छ छोरी दुई चार वर्ष तिमी यहि वस ।

अव दुई वर्ष पछि राजा पनि मर्न लाग्यो । किनकि नाम लिएको थिएन । यमको दुत आएको थियो । राजा चोकमा चक्कर खाएर खस्यो । यमको दुतले उसको घाँटी दबाँयो । राजाको दिशा र पिसाव निक्लियो करूणामय (कवीर) साहेवले रानीलाई भने कि हेर तिम्रो राजाको के हाल छ । त्यहाँबाट साहेव देखाईरहनु भएको छ । तव रानीले भनिन् कि हेर्नुस् दाता यदि भक्तिमा वँहाको कुनै सहयोगको फल पाउनुहुन्छ भने दया गर्नुहोस् । रानीलाई फेरि पनि अलिकति माया लाग्दथ्यो । साहेव कवीर (करूणामय) ले सोच्यो कि यो फेरि काल जालमा फस्छ । यो सोचेर मानसरोवरबाट त्यहाँ गयो । जहाँ राजा चन्द्रविजय आफ्नो दरवारमा बेहोस् थियो । यमदुतहरू उसको प्राणलाई निकालीरहेका थिए । कवीर साहेव आउने वित्तिकै यमदुत यसरी आकाशमा उडे कि मुर्दाबाट गिद्द उडेर जान्छ । चन्द्रविजय होस्मा आयो । सामने करूणामय साहेव उभिएका थिए । मात्र चन्द्रविजयलाई देखा पर्थ्यो । कुनै अरूलाई देखा पर्दैनथ्यो । चन्द्रविजय खुट्टाढोगेर क्षमा माग्न थाल्यो । मलाई माफ गर्नुहोस् दाता मेरो प्राण वचाउनुहोस् किनकि अव उसले देख्यो कि ज्यान जान लागेको छ । (यस जिवको आँखा तव खुल्छ कि जब काम खराव हुन थाल्छ) मलाई माफ गर्नुहोस्, मेरो ज्यान वचाउनुहोस् मालिक ! कवीर साहेवले भने राजा आज पनि त्यही कुरा छ, त्यो दिन पनि त्यही कुरा थियो, नाम लिनु पर्छ । राजाले भने म नाम लिन्छु अहिले लिन्छु । कवीर साहेवले नाम उपदेश दिनुभयो र भन्नु भयो कि म तिमीलाई दुई वर्षको आयु दिन्छु । यदि यसको एक सास पनि खाली गयो भने फेरी कर्म दण्ड वाँकी रहन्छ ।

कबीर, जीवन तो थोड़ा भला, जै सत सुमरण हो । लाख वर्ष का जीवना, लेखे धरे ना को ।।

शुभकाममा सहयोग गरेको पछिल्लो काम र साथमा श्रद्धाको दुई वर्षको स्मरणबाट तीनै नाम प्रदान गरेर कवीर साहेवले चन्द्रविजयलाई पनि पार गरीदिनुभयो । वोल सत्गुरू देवकी जय ......... जय बन्दि छोड् ।

परमेश्वर कवीर साहेवजी साँचो श्रद्धालुको आयु बढाइदिनु हुन्छ र उसको परिवारको पनि रक्षा गर्नु हुन्छ । उपरोक्त विवरणबाट प्रमाणित भयो । यो प्रमाण धेरै पहिलेको हो । वर्तमानमा साधारण व्यक्ति विश्वास गर्दैन । वर्तमान मा पूज्य कवीर परमेश्वरको शक्तिबाट म दासद्वारा भएको कष्ट निवारण र आयु बृद्धिको धेरै प्रमाण छ । पढनुहोस् पुस्तक ...................... परमेश्वर को सार संदेश

## "पवित्र पुराणहरूको रहस्य"

पुराणलाई सम्भनको लागि कृपया ध्यान रहोस् कि ब्रह्मा पुराण, विष्णु पुराण र श्री शिव पुराण ब्रह्मको लिलाबाट प्रारम्भ हुन्छ । जसलाई प्रथम अव्यक्त गीता अध्याय ७ श्लोक २५ मा भनेको हो । जुन गीता अध्याय ११ श्लोक ३२ मा भन्छ कि म काल हुँ । यसैलाई क्षरपुरूष तथा ज्योति निरंजन पनि भनिन्छ । यो नै सदाशिव कालरूपी ब्रह्म पनि भनिन्छ । यही ब्रह्मण्डमा एक ब्रह्मलोकको रचना गरेर उसको माथिल्लो भागमा बस्छ ।

यसैलाई महाविष्णु, महाब्रह्मा र महाशिव भनिन्छ त्यो क्षेत्रलाई काशी पनि भनिन्छ । त्यसैमा रजगुण प्रधान, सत्गुण प्रधान, तमगुण प्रधान तीन स्थान वनाएर आफ्नी स्वास्नी दुर्गा (महालक्ष्मी) लाई साथमा राखेर तीन छोराहरू रजगुण श्री ब्रह्माजी, सतगुण श्रीविष्णुजी, तमगुण श्रीशिवजीको उत्पति गरेर अचेत गरिदिन्छ । अचेत अवस्थामा नै उनको पालनपोषण गर्दै रहन्छ । तन्नेरी भएपछि श्री ब्रह्माजीलाई कमलको फूलमाथि, श्री विष्णुलाई शेषनागमाथि शिवजीलाई कैलाश पर्वत माथि राखि दिन्छ । यी तीनै प्रभुहरूलाई स्वयं ज्ञान छैन कि हाम्रो उत्पति कर्ता को हुन् ? यही काल रूपी ब्रह्मजीनै विष्णु रूप धारण गरेर आफ्नो नाभीबाट कमल उत्पादन गरेर त्यसमाथि श्रीब्रह्माजीलाई राखेर होशमा ल्याइदिन्छ । यही ब्रह्म जुन बेला मन लाग्छ श्री ब्रह्मा, श्री विष्णु, श्री शिव रूप धारण गरेर दृष्टी गोचर हुन्छ । यो काल आफ्नो वास्तविक रूपमा कहिले प्रकट हुँदैन । जुन कालले श्रीमद्भागवत गीताजीको ज्ञान दिने बेला देखाइएको थियो । गीता अध्याय १० तथा ११ मा प्रमाण छ । श्रीमद्भागवत गीता अध्याय ११ श्लोक ४७-४८ मा भनिएको छ कि हे अर्जुन ! यो मेरो वास्तविक काल रूप तिम्रो अतिरिक्त न त पहिले कसैले देखेको थियो न त अगाडी कसैले देख्न सक्छ । यो त मैले तिमी माथि अनुग्रह गरेर देखाएको छु । यो म ब्रह्मको हजार हात र आँखा आदि वाला काल रूप वेदमा वर्णित विधिबाट जस्तै यज्ञ, ओम, नामको जाप आदिबाट कहिल्यै पनि देख्न सकिन्दैन । भावार्थ छ कि वेदमा वर्णन गरिएको विधिहरूबाट प्रभु प्राप्त हुँदैन । यसैले ऋषिहरू - महर्षिहरूले वेदमा ओम नामलाई प्रभु प्राप्तिको साधन ठानेर प्रभु प्राप्तिको लागि यज्ञ र ओ३म नामको जापको घोर साधनाहरू गरे, तर ब्रह्मको दर्शन भएन् । कसैले कमलहरूको प्रकाश देखे । कसैले शरीरमा प्रकाश देखे र धुन सुने, जुन (काल)

ब्रह्मको छलकपट हो । कतिले सहस्त्र कमलको एकहजार ज्योतिहरूबाट निस्कीरहेको प्रकाश हेरेर प्रभु प्राप्त भएको माने । जसरी कुनै ठाउँमा एकै रंगको हजार चिमहरू एक अर्कासंग टाँसिएर गोलाकारमा वालीरहेको होस् । टाढाबाट हेर्नेलाई एउटा प्रकाशको समुह नै देखिन्छ । अति नजिक गएपछि थाहा हुन्छ कि यो त चिमको प्रकाश हो ।

यसै प्रकार केहि साधक हठयोग गरेर शरीरमा अन्तर्मुख भएर, केहि आतिशवाजीलाई देखेर प्रभु प्राप्त भएको ठान्छन् । त्यही कालजाललाई आनन्द मानेर आफ्नो अमुल्य जीवन खराव गर्छन् । वेदमा स्पष्ट लेखिएको छ कि परमेश्वर सशरीर छ । यर्जुवेद अध्याय १ मंत्र १५ तथा अध्याय ५ मंत्र १ मा प्रमाण छ ।

अग्ने तनूर असि । विष्णवे त्वा सोमस्य तनूर असि ।

जसको शब्दार्थ हो कि परमेश्वर सशरीर छ । त्यो सर्वपालन कर्ता अमर पुरूष ( सतपुरूष) को शरीर छ । अर्थात् परमेश्वर आकारमा छन् । यसैकोलागी ऋषिहरूले प्रभु दर्शनको लागि घोर साधनाहरू गरे । तर वेदमा वर्णित विधिबाट प्रभु प्राप्ति हुन सक्दैन । यसैले आजसम्म सर्वसाधकहरू, ऋषिहरू आदिले आफ्नो अनुभवको पुस्तकहरू रचना गरि दिए । जुन वेदज्ञान विरूद्ध छ । अव सवै भक्त समाज पवित्र वेदहरूको स्थानमा अन्यवेद महर्षिहरू वा संतहरूको अनुभवबाट वनेका पुस्तकहरूको ज्ञानमा आधारित भइसकेको हो ।

पवित्रवेदहरू तथा श्रीमद्भावगत गीताको ज्ञानदाता ब्रह्म भनिरहेको छ कि तीनै गुण (रजगुण ब्रह्माजी, सतगुण विष्णुजी, तमगुण शिवजी) इष्ट रूपमा पूजाको योग्य छैन । किनकि यो पनि नाशवान छ र कर्मको फल जस्ताको त्यस्तै दिन्छन् । पाप क्षमा (नाश) गर्न सक्दैनन् । यिनका पूजारी भक्तहरूले भाग्यमा लेखिएको कष्टलाई भोग्नै पर्छ । यी तिनै प्रभुहरूको साधनाबाट क्षणिक संसारीक सुख त प्राप्त हुनसक्छ तर पूर्णमोक्ष हुँदैन । यी तिनै प्रभुहरू (श्री ब्रह्माजी, श्री विष्णुजी, श्री शिवजी) बाट पाइने क्षणिक लाभमाथी जसको आस्था वनेको छ । त्यो राक्षस स्वभाव धारण गरेका मानवमा निच दुश्कर्म गर्ने मूर्ख म (काल ब्रह्म) को भजन पनि गर्दैन (प्रमाण श्रीमद्भागवत गीता अध्याय ७ श्लोक १२ देखि १५ सम्म) किनकि ब्रह्मा साधक धेरै समयसम्म ब्रह्मालोकमा वनेका महास्वर्गमा आफ्नो नाम र पूण्यको कमाईको आधारमा रहन्छ । यसैले काल भनिरहेको छ कि तीनै प्रभुहरूभन्दा केही ज्यादै राहत म दिन सक्छु । तर यो ब्रह्मालोक तथा काल (ब्रह्मा) पनि नाशवान छ । गीता अध्याय ८ श्लोक १६ मा भनिएको छ कि ब्रह्मा लोकसम्म सवैलोक नाशवान छ र गीता अध्याय २ श्लोक १२ र अध्याय ४ श्लोक ५ मा स्वयं गीता ज्ञानदाता ब्रह्म भनिरहेका छन् कि मेरो पनि जन्म मृत्यु हुन्छ र म पनि नाशवान छु । यसैले पवित्र गीता अध्याय ७ श्लोक १८ मा भनिएको छ कि जुन चौथो प्रकारको मेरो (ब्रह्माको) साधक जुन ज्ञानी छ । त्यो वेद ज्ञानको आधार मा बुझ्दछ कि मात्र एक पूर्णपरमात्मा नै इष्टरूपमा पूज्य छन् । त्यही पापनाश गर्ने पूर्णमोक्ष दिने छ र मानव शरीर प्रभु प्राप्तिका लागि नै भेटेको हो । उनीहरूले वेदको स्वयं नै निस्कर्ष निकालेका छन् । कि ओ ३ म यो नै एउटा मंत्र हो जुन प्रभु प्राप्तिको हो । यसै ओम मंत्रको

जापबाट हजारौं वर्ष साधना गरेर आफ्नो शरीरलाई त्याग गरे । तर प्रभुको दर्शन भएन । अरू उपलब्धि भयो । केहि सिद्धिहरू प्राप्त भयो । स्वर्ग महास्वर्ग आदिमा उच्चपद प्राप्त भएको हो । फेरि भजनको कमाई र पूण्यको कमाई समाप्त भएपछि पुनः जन्म, मृत्यु र चौर ासी लाख प्राणीहरूको शरीरमा घोर कष्ट नरकमा पापकर्मको फल भोग पनि बाँकी नै रहे ।

पवित्र यर्जुवेद अध्याय ४० मंत्र १० र पवित्र गीता अध्याय ४ मंत्र ३४ मा उपर ोक्त दुवै शास्त्रको ज्ञान दाता ब्रह्म भनिरहेको छ कि त्यो पूर्णपरमात्माको विषयमा म ( कालरूपी ब्रह्म) जान्दैन । त्यो परमेश्वरको विषयमा पूर्णजानकारी अर्थात् तत्त्वज्ञान र त्यो परमेश्वरको प्राप्तिको विधि अर्थात् पूर्णमोक्ष मार्गको जानकारीको लागी तत्त्वदर्शी संतको खोजी गर । फेरि उसले जस्तो साधना बताउछ  त्यस्सै गर, त्यस पश्चात् त्यो परमपद परमेश्वर को खोज गर्नुपऱ्यो जसमा गएको साधक फेरि फिर्ता घुमेर संसारमा आउदैन अर्थात् पूर्णमोक्ष प्राप्त गरेर सधैंको लागि जन्म, मृत्यु र चौरासी लाख योनिको कष्ट र नरकको पीडाको कष्टबाट मुक्त हुनजान्छ र पूर्णशक्ति प्राप्त गरेर (शास्वतम् स्थानम्) अविनाशि लोक सत्लोकको प्राप्त हुन्छ । (प्रमाण गीता अध्याय १५ श्लोक १ देखि ४ सम्म र गीता अध्याय १८ श्लोक ६२ तथा ऋग्वेद मण्डल १ सुक्त २४ मंत्र १-२)

तत्त्वदर्शी संत नभेटाउनुको कारण सर्व ऋषिजन वेदहरू अनुसार साधना गरेर पनि महाकष्टमा नै रहिरहन्छ । यसैका लागि गीता अध्याय ७ श्लोक १८ मा भनिएको छ कि जुन ज्ञानी आत्मा छन्, उनी हो त उदार, किनकी प्रभु प्राप्तिको लागि तन, मन, धनले वेदहरू अनुसार साधना गर्दछन् । तर त्योपछि म (काल) ब्रह्मको अति घटिया गति अर्थात् साधनाबाट भेटाउने फाइदामा नै आश्रीत छन्, जसबाट उनको पूर्णमोक्ष हुन सक्दैन । जन्म - मृत्यु र अन्य अनेक प्राणिहरूको शरीरमा र नरकमा कर्माधारबाट कष्ट कहिले पनि समाप्त हुन सक्दैन ।

ज्योति निरंजन (कालरूपी ब्रह्म) ले सपथ लिएको छ । म कहिले पनि कसैलाई कुनै साधनाबाट आफ्नो वास्तविक काल रूपमा दर्शन दिने छैन । यसैले यो कालरूपी ब्रह्म नै आफ्ना छोराहरू (ब्रह्मा, विष्णु शिव) को रूपमा देखापरेर थरीथरीका चरित्रहरू गर्दछन् । जसकारणबाट अन्य ब्यक्तिहरू सोच्दछन् कि यो लिला भगवान विष्णुले गरेको हो, कहिले भनिन्छ कि यो लिला शिवले गरेको हो । जसरी साधारण ब्यक्ती भन्दछन् कि श्री ब्रह्माजीको उत्पति श्रीविष्णुजीलाई नाभीबाट निस्कने कमलमा भयो, त्यो बेला श्री विष्णुजीको रूपमा कालले आफ्नो नाभीबाट प्रकट गरेको थियो ।

ब्रह्मा पुराण (सृष्टिको वर्णन नामको अध्याय) मा श्री लोमहर्षण ऋषि (जसलाई सुतजी पनि भनिन्छ) ले आफ्नो गुरूदेव श्रीब्यास ऋषिबाट सुनेका ज्ञान भनेको हो । श्री ब्यासजीले श्री नारदजीबाट सुनेका थिए र श्री नारदजीले आफ्नो बुवा श्री ब्रह्माजीबाट जानकारी प्राप्त गरेको थियो । श्री ब्रह्माजीलाई स्वयं ज्ञान छैन कि म कहाँबाट उत्पन्न भए । (श्रीदेवी महापुराण तीसरा स्कंद) यसको भावार्थ यो होइन कि पुराणको ज्ञान गलत छ । जुन ज्ञान श्री ब्रह्माजीले होशमा आएपछि भनेको हो । त्यो त्यही स्तरसम्म त

ठीक छ । तर सचेत हुनुभन्दा पहिलेको ज्ञान दंत कथा हो । जुन पूर्ण परमेश्वरले प्रथम सत्युगमा संस्कृत नामबाट प्रकट भएर तत्त्वदर्शी संत रूपमा तत्वज्ञान तथा वास्तविक सृष्टि रचनाको ज्ञान श्री ब्रह्माजी तथा श्री मनुजी आदिलाई दिएको थियो । उहाहरूँले सुनेर पनि नसुनेको जस्तो गर्नु भएको थियो। त्यसपछि त्यो जव श्रीब्रह्माजीसित उहाँकै वंशज सोध्न थाल्यो, त्यसपछि त्यो सुनी सुनाएको ज्ञानको आधारमा केही मिसावट गरेर पूर्वको ज्ञान भन्नुभयो । त्यसकारण कुनै पुराण निर्णायक ज्ञान युक्त छैन । कुनै पुराणको आधारबाट यो सिद्ध हुन्छ कि श्री विष्णुजीको उत्पति श्री ब्रह्माजीबाट भयो कुनै पुराणबाट सिद्ध हुन्छ कि श्री ब्रह्माजीको उत्पति विष्णुजीबाट भएको हो । यही कारण सवै ऋषिहरू तथा श्री ब्रह्मा विष्णु र शिवजी पनि संसयमै छन् ।

## "श्री ब्रह्मजी तथा श्रीविष्णुजीको युद्ध"

श्री शिव पुराण (विद्येश्वर संहिता अध्याय ६ अनुवादक दिनदयाल शर्मा, प्रकाशक रामायण प्रेस मुम्बई, पेज नं. ६७ र संपादक पंडित रामालग्न पाण्डेय विशारद प्रकाशक सावित्र ठाकुर, प्रकाशन रथयात्रा वाराणसी ब्रांच नाटी इमली वाराणसीको विद्येश्वर संहिता अध्याय ६ पृष्ट ५४ तथा टिकाकार डा. ब्रह्मानन्द त्रिपाठी साहित्य आयुर्वेद ज्योतिष आचार्य एम. ए., पि. एच.डी., सि.ए., प्रकाशक चेखम्वा संस्कृत प्रतिष्ठान् ३८ यू. ए. जवाहर नगर, वंगलो र ोड दिल्ली संस्कृत सहित शिव पुराणको विद्येश्वर संहिता अध्याय ६ पृष्ठ ४५ पर ।

श्री ब्रह्माजी, श्री विष्णुजीको समक्ष आए । त्यो बेला श्री विष्णुजी लक्ष्मी सहित शेष शैयामा निदाउनु भएको थियो । र साथमा अनुचरहरू पनि बसेका थिए । श्री ब्रह्माजीले श्री विष्णुलाई भन्नुभयो । छोरा उठ म तिम्रो पिता आएको छु, म तिम्रो प्रभु हुँ । यसमाथी विष्णुजीले भन्नु भयो । आउ वस म तिम्रो बुवा हुँ । तिम्रो मुख वांगो किन भयो ? ब्रह्माजीले भन्नुभयो । हे- छोरा अव तिमीलाई अभिमान भईसकेको छ । म तिम्रो संरक्षक मात्र होइन् बरू समस्त जगतको बुवा हुँ । श्री विष्णुजीले भन्नु भयो अरे चोर  त आफ्नो बडपन के देखाउछस ? सवै जगत त ममा निवाश गर्छ । तिमी मेरो नाभी कमलबाट उत्पन्न भएछौ । मसंग नै यस्तो कुरा गरिरहेछौ । यही भनेर दुवै प्रभु आपसमा हतियारले लडन थाले । एक अर्काको छातीमा आघात पुर्‍याए । यो देखेर सदाशिव (काल रूपी ब्रह्म) ले एउटा तेजोमय लिंग उनीहरूको विचमा खडा गरिदिए । तव उनीहरूको युद्ध समाप्त भयो । (यो उपरोक्त विवरण गीता प्रेस गोरखपुर वाली शिवपुराणबाट निकालेर राखिएको हो मुल संस्कृत सहित जुन माथि लेखिएको छ तथा अन्य दुई सम्पादकहरू तथा प्रकाशकहरू वाला शिव पुराणमा सहि छ )

विचार गर्नुहोसे - श्री शिव पुराण, श्री विष्णु पुराण तथा श्री ब्रह्मा पुराण तथा श्री देवीमहापुराणमा तीनै प्रभुहरू तथा सदाशिव (काल रूपी ब्रह्म) तथा देवी ( शिवा प्रकृती) का जीवन लिला छ । यिनै आधारबाट सर्व ऋषिजन तथा गुरूजनले ज्ञान

सुनाउनु हुन्थ्यो । यदि कोही पवित्र पुराणभन्दा भिन्न ज्ञान भन्छ । त्यो पाठयक्रमको विरूद्ध ज्ञान हुने भएकाले ब्यर्थ हो उपरोक्त युद्धको विवरण पवित्र शिव पुराणबाट छ । जसमा दुवै प्रभु पाँच वर्षको वच्चा जस्तो झगडा गरिरहनु भएछ । उनी भन्दछन् कि तिमी मेरो छोर ा, म तिम्रो बुवा फेरि एक अर्काको कालर समातेर मुड्की र लात्तीले झगडा गर्दछन् । यो नै चरित्र त्रिलोक नाथहरूको छ ।

उपरोक्त तीनै पुराण (श्रीब्रह्मा पुराण, श्री विष्णु पुराण, तथा श्री शिव पुराण) को प्रार म्भ त काल रूपी ब्रह्म अर्थात् ज्योति निरंजनबाट नै हुन्छ । जुन ब्रह्मलोकमा महाब्रह्मा, महाविष्णु तथा महाशिव रूप धारण गरेर रहन्छ । तथा आफ्नो लिला पनि उपरोक्त रूपमा गर्नुहुन्छ । आफ्नो वास्तविक कालरूपलाई लुकाएर राख्छ । तथा पछिको विवरण रजगुण ब्रह्माजी, सद्गुण विष्णुजी तथा तमगुण शिवजीको लिलाहरूकै हो । उपरोक्त ज्ञानको आधार बाट पवित्र पुराणहरूलाई सम्झन अति सरल हुनेछ ।

## "श्री विष्णु पुराण"

(अनुवादक श्री मुनिलाल गुप्त, प्रकाशक - गोविन्द भवन कार्यलय, गीता प्रेस गोरखपुर)

श्री विष्णु पुराणका ज्ञान श्री परासर ऋषिले आफ्नो शिष्य श्री मैत्रेय ऋषिजीलाई भन्नुभयो ।

श्री परासर ऋषिजीले विवाह भए लगतै गृह त्याग गरी वनमा साधना गर्नका लागि दृढ संकल्प गऱ्यो । उसकी धर्मपत्नीले भनिन् कि अहिले भर्खरै विहे भएकोछ, अहिले नै तपाई घर छोडी गई रहनुभएछ । सन्तान उत्पादन गरेर साधनाको लागि जानु होला त्यसपछि श्री परासर ऋषिले भन्नुभयो कि साधना गरे पश्चात् सन्तान उत्पादन गर्नाले राम्रो संस्कारको सन्तान उत्पादन हुन्छ । म केहि समयपछि तिम्रो लागि आफ्नो शक्ति (वीर्य) कुनै पंक्षीद्वार ा पठाइदिनेछु । तपाई त्यसलाई ग्रहण गर्नुहोला । यो भन्दै घर त्याग गरी वन तर्फ लाग्नु भयो । एक वर्ष साधना पछि आफ्नो वीर्य निकालेर एउटा बृक्षको पातमा बन्द गरी आफ्नो मंत्र शक्तिले शुक्राणु रक्षा गरेर एउटा कागलाई भन्नुभयो कि यो पत्र मेरी पत्नीलाई दिएर आउ । कागले त्यसलाई लिएर नदिको माथी उडदै गईरहेको थियो । उसको चुच्चोबाट त्यो पत्र नदीमा खसिहाल्यो । त्यसलाई एउटा माछाले खाई हाल्यो । केहि महिना पछि त्यो माछालाई एउटा माझीले समालेर काट्यो, त्यसबाट एउटी केटी निस्की । माझीले केटीको नाम सत्यवति राख्यो र त्यही केटी (माछाको पेटबाट उत्पन्न भएकी हुनाले) मछोदरी नामले पनि चिनिन्थी, माझीले सत्यवतीलाई आफ्नो पुत्रीको रूपमा पाले ।

कागले फर्केर गई श्री परासरजीलाई सवै वृतान्त वतायो । अव साधना समाप्त गर ेर श्री परासरजी १६ वर्ष पछि आईरहेको थिए नदी पार गर्न माझीलाई वोलाएर भन्नुभयो कि मलाई चाडै नदी पार गराइदेउ । मेरी स्वास्नी मेरो प्रतिक्षा गरिरहेकी छिन् । त्यो समयमा

माझी खाना खाँदै थिए तथा परासर ऋषिको वीर्यबाट उत्पन्न भएकि १४ वर्षीय युवती कन्या आफ्नो बुबाको खाना लिई त्यही उपस्थित थिइन् । माझीलाई थाहा थियो कि साधना तपस्या गरेर आउने ऋषि सिद्धि युक्त हुन्छ । आज्ञाको सिघ्र पालना नगर्दा सराप दिईहाल्छन् । माझीले भन्यो ऋषिवर म खाना खाईरहेको छु. अधुरा खाना छोडनु अन्न देवको अपमान हुन्छ । मलाई पाप लाग्छ । तर श्री परासरजीले केहि ध्यान दिएन ऋषिलाई यति उत्ताउलो थाहा पाई माझीले आफ्नी युवती छोरीलाई ऋषिजीलाई पार गराइदेउ भन्यो । बुबाको आदेश प्राप्त गरी छोरी डुङ्गामा ऋषिलाई लिएर जान थालिन् । नदीको विचमा गएपछि ऋषि परासरजीले आफ्नै वृयबाट उत्पन्न भएकी केटी अर्थात् आफ्नै छोरीसंग दुष्कर्म गर्ने इच्छा ब्यक्त गऱ्यो । केटीले पनि आफ्नो पालनकर्ता वुवा माझीबाट ऋषिले क्रोधले दिएको श्रापबाट ग्रसित दुःखी ब्यक्तिको कथा सुनेकि थिइन । श्रापको डरले काम्दै युवतीले भनी हजुर तपाई त ब्राह्मण हुनुहुन्छ । म एक शुद्र कि छोरी हुँ । ऋषि परासरजीले भन्नुभयो कि चिन्ता नलिउ । युवतीले आफ्नो इज्जत रक्षाको लागि फेरि अनुरोध गरिन कि हे ऋषिवर मेरो शरीरबाट माछाको गंध निस्किरहेछ । ऋषि परासरजीले आफ्नो सिद्धि शक्तिले दुर्गन्ध समाप्त गरिदिए । फेरि युवतीले भनिन् दुवै किनारबाट मान्छेहरू हेरिरहेछन् । ऋषि पारासरजीले गंगा नदीका जल हातमा लिई माथी उठाएर आकाशमा फालिदिए तथा आफ्नो सिद्धि शक्तिले कुहिरो उत्पन्न गरिदिए र आफ्नो इच्छा पुरा गऱ्यो । युवतीले आफ्नो पालक पितालाई पालक माताको माध्यमबाट सवै घटना अवगत गराईदिइन तथा भनिन् कि ऋषिले आफ्नो नाम पर ासर बतायो तथा ऋषि वशिष्ठजीको नाति भनेको थियो । समय आएपछि कुमारी युवतीको गर्भबाट श्री ब्यास ऋषि उत्पन्न भए ।

त्यसै श्री परासरजीद्वारा श्रीविष्णु पुराणको रचना भएको हो । श्री परासरजीले वताए कि हे मित्रजी ज्ञान म तिमीलाई सुनाउन गईरहेको छु । यही प्रसंग दक्षादी मुनीले नर्मदा तटमा राजा पुरूकुत्सलाई सुनाएको थियो । पुरूकुत्सले सारस्वतबाट र सारस्वतले मलाई भनेको थियो । श्री परासारजीले विष्णु पुराणको प्रथम अध्याय र श्लोक १५-१६ पृष्ट ४ मा भन्नु भएको छ कि हे द्विज ! परब्रह्मको प्रथम रूप पुरूष अर्थात् भगवान जस्तो लाग्छ । तर ब्यक्त (महाविष्णु रूपमा प्रकट हुन) तथा अब्यक्त (अदृष्य रूपमा वास्तविक काल रूपमा २१ बह्मण्डमा रहनु) उसको अन्य रूप हो तथा काल उसको परम रूप हो । भगवान विष्णु जो काल रूपमा तथा ब्यक्त र अब्यक्त रूपबाट स्थित हुन्छ । यो उनको वालक जस्तो लिला हो ।

अध्याय २ श्लोक २७ पृष्ठ ५ मा भनिएको छ । हे मंत्रय ! प्रलय कालमा प्रधान अर्थात् प्रकृतिको साम्य अवस्था मा आस्थित भईसकेपछि अर्थात् पुरूषबाट पृथक स्थित भईसकेपछि विष्णु भगवानको काल रूप प्रवृत हुन्छ ।

अध्याय २ श्लोक २८ बाट ३० पृष्ठ तदन्तर (सर्गकाल उपस्थित भइसकेपछि) ती परब्रह्मा परमात्मा विश्वरूप सर्वब्यापी सर्वयुक्तेश्वर सर्वात्मा परमेश्वरले आफ्नो इच्छाले विकारी प्रधान र अविकारी पुरूषमा प्रविष्ट भएर उनलाई क्षोभित गऱ्यो । २८/२९ जुन

प्रकार क्रियाशिल नभएपछि पनि गंध आफ्नो सन्निधि मात्रले नै प्रधान र पुरूषको प्रेरित गर्छ ।

विशेष - श्लोक संख्या २८ देखि ३० मा स्पष्ट गरिएको छ कि प्रकृती (दुर्गा) तथा पुरूष (काल प्रभु) देखि अन्य कोहि अरू प्रमेश्वर हुनुहुन्छ जो यी दुवैको पुनः सृष्टि रचनाको लागि प्रेरित गर्दछ ।

अध्याय २ पृष्ठ ८ मा श्लोक ६६ मा लेखिएकोछ कि उही प्रभु विष्णु सृष्टा (ब्रह्मा) भएर आफ्नो नै सृष्टि गर्नुहुन्छ । श्लोक संख्या ७० मा लेखिएको छ भगवान विष्णुले ब्रह्मा आदि अवस्थाद्धारा रचना गर्नेवाला हुन् । उहाँ नै रचनु हुन्छ र स्वयं पनि मर्नु हुन्छ । अध्याय ४ श्लोक ४ पृष्ठ ११ मा लेखिएको छ कि कुनै अन्य परमेश्वर छ, जो ब्रह्मा शिव आदि ईश्वरको पनि ईश्वर हुनुहुन्छ । अध्याय ४ श्लोक १४, १५, १७, २२ पृष्ठ ११, १२ मा लेखिएको छ, पृथ्वी वोल्छ कि हे काल स्वरूप ! तपाईलाई नमस्कार छ । हे प्रभो ! तपाई नै जगतको सृष्टी आदिको लागि ब्रह्मा, विष्णु र रूद्रको रूप धारणा गर्ने वाला हुनुहुन्छ । तपाईको जुन रूप अवतार रूपमा प्रकट हुनुहुन्छ उनीकै देवगण पूजा गर्नुहुन्छ । तपाई नै ओंकार हुनुहुन्छ । अध्याय ४ श्लोक ५० पृष्ठ ११४ मा लेखएको छ, फेरि त्यो भगवान हरि ले रजोगुण युक्त भएर चतुर्मखधारी ब्रह्मा रूप धारण गरेर सृष्टिको रचना गर्नु भयो ।

उपरोक्त विवरणबाट सिद्ध भयो कि ऋषि परासरजीले सुने सुनाएको ज्ञान अर्थात् लोकवेदको आधारमा श्री विष्णु पुराणको रचना गरिएको छ । किनकि वास्तविक ज्ञान पूर्णपर मात्माले प्रथम सतयुगमा स्वयं प्रकट भएर श्री ब्रह्माजीलाई दिएको थियो । श्री ब्रह्माजीले केही ज्ञान तथा स्वनिर्मित काल्पनिक ज्ञान आफ्नो वंशजलाई भन्यो । एक अर्कोबाट सुन्दा-सुन्दै नै लोक वेद श्री पारासरजीलाई प्राप्त भयो । श्री परासरजीले विष्णु भगवानलाई काल पनि भनेकोछ र परब्रह्माण पनि भनेकोछ । उपरोक्त विवरणबाट यो पनि सिद्ध भयो कि विष्णु अर्थात् ब्रह्मा स्वरूप काल आफ्नो उत्पति ब्रह्मा, विष्णु तथा शिव रूपबाट गरेर सृष्टि उत्पन्न गर्छ । ब्रह्मा (काल) नै ब्रह्मा लोकमा तिव्र रूपमा प्रकट भएर लिला गरेर छलकपट गर्छ । के स्वयं पनि मर्छ ? (विषेश जानकारीका लागि कृपया पढनु होला "प्रलयकी जानकारी" पुस्तक "गहरी नजर गीतामे" अध्याय ८ श्लोक १७ को ब्याख्याम) यही ब्रह्मालोकमा तीन स्थान वनाएको छ । एउटा रजोगुण प्रधान त्यसमा यही काल रूपी ब्रह्मा आफ्नो ब्रह्मा रूप धारणा गरेर बस्छन् तथा आफ्नी पत्नी दुर्गालाई साथमा राखेर एउटा रजोगुण प्रधान पुत्र उत्पादन गर्छ, त्यसको नाम विष्णु राख्छ । त्यो पुत्रबाट एउटा ब्रह्माण्डमा तीनलोक (पृथ्वी, पाताल, स्वर्ग) मा स्थिती वनाएर राख्ने गर्दछन् । (प्रमाण शिव पुराण गीता प्रेस गोरखपुरबाट प्रकाशित अनुवाद हनुमानप्रसाद पैदार चिमन लाल गोस्वामी रूद्र संहिता अध्याय ६, ७ पृष्ठ १०२,१०३ )

ब्रह्मालोकमा नै एउटा तेस्रो स्थान तमगुण प्रधान रचेर उसमा स्वयं शिव रूप धारण गरेर रहन्छ । आफ्नी पत्नी दुर्गा (प्रकृती) लाई साथ राखेर पति पत्निको ब्यावहारबाट त्यस्तै तेस्रो पुत्र तमगुण युक्त उत्पन्न गर्छ । उसको नाम शंकर (शिव) राख्छ । यो पुत्रबाट

तीन लोकको प्राणीलाई संहार गराउनु हुन्छ ।

विष्णु पुराणमा अध्याय ४ सम्म जुन ज्ञान छन् । त्यो काल रूपी ब्रह्मा अर्थात् ज्याति निरंजनको छ । अध्याय ५ बाट अगाडी मिलेको जस्तै ज्ञान कालको पुत्र सतगुरू विष्णुको लिलाको हो । तथा त्यसैको अवतार राम, श्रीकृष्ण आदिको ज्ञान छ ।

विषेश विचार गर्नुपर्ने कुरा यो छ कि श्री विष्णु पुराणको वक्ता यि परासर ऋषि हुन् । यही ज्ञान इत्यादि ऋषिबाट पुरूकुत्सले सुन्यो, पुरूकुत्सबाट सारस्वतले सुन्यो तथा सारस्वस्वतबाट श्री परासर ऋषिले सुन्यो । त्यो ज्ञान श्री विष्णु पुराणमा मात्र एक ब्रह्माण्डको ज्ञान पनि अधुरा छ । श्री देवीपुराण, श्री शिव पुराण आदि पुराणहरूका ज्ञान पनि ब्रह्माजीले दिनुभएको छ, श्री परासर वाला ज्ञान श्री ब्रह्माजीद्वारा दिइएको ज्ञान वरावर हुन सक्दैन । यसैले श्री विष्णुपुराणलाई वुभ्फ्नको लागि देवी पुराण तथा शिव पुराणको सहयोग लिन सकिन्छ । किनकि यो ज्ञान दत्रादी ऋषिको पिता श्रीब्रह्माजीबाट दिईएको छ । श्री देवी पुराण तथा शिव पुराणलाई वुभ्फ्नको लागी श्रीमद्भागवत गीता तथा चारै वेदहरूको सहयोग लिइनेछ । किनकि यो ज्ञान स्वयम् भगवान काल कालरूपी ब्रह्मद्वारा दिइएको छ । जुन ब्रह्मा, विष्णु तथा शिवजीको उत्पन्न कर्ता अर्थात् पिता हुनुहुन्छ । पवित्र वेद तथा पवित्र श्रीमद्भागवत गीताजीको ज्ञानलाई वुभ्फ्नको लागि स्वयं वेद अर्थात् सुक्ष्म वेदको सहयोग लिनुपर्छ । जुन कालरूपी ब्रह्माको उत्पति कर्ता अर्थात् पिता परम अक्षर ब्रह्मा (कवीरर्देव) बाट दिईएको छ । जुन कवीरवाणीद्वारा स्वयं सतपुरूषले प्रकट भएर भन्यो । (ऋग्वेद मण्डल ८ सुक्त ८६ मंत्र १६ बाट २० सम्म प्रमाण छ ।)

## "श्री ब्रह्म पुराण"

यो पुराणको वक्ता श्री लोमहर्षण ऋषिजी हुनुहुन्छ । जो श्री ब्यास ऋषिको शिष्य रहेको छ । जसलाई सुतजी पनि भनिन्छ । श्री लोम हर्षणजी (सुतजी ) ले वताए कि यो ज्ञान पहिले श्री ब्रह्माजीले श्रेष्ठ मुनियाहरूले सुनाउनुभएको थियो । त्यहि म सुनाउछु । यो पुराणको सृष्टीको वर्णन नामक अध्यायमा पृष्ठ (२७७ बाट २७८ सम्म ) भनिन्छ कि श्री विष्णुजी सर्व विश्वको आधार हुनुहुन्छ । जो ब्रह्मा, विष्णु तथा शिव रूपबाट जगतको उत्पति तथा पालन तथा संहार गर्नुहुन्छ । उहाँ भगवान विष्णुलाई मेरो नमस्कार छ ।

जुन नित्य सद्सत स्वरूप तथा कारण युक्त अब्यक्त प्रकृति छ, उसलाई नै प्रधान भनिन्छ, उसैबाट पुरूषले विश्वको यस निर्माण गरेको छ । अर्थात् तेजस्वी ब्रह्माणीलाई नै पुरूष सम्भ्फ्नुहोस् । ब्रह्मा समस्त प्राणीहरूको सृष्टिकर्ता तथा भगवान नारायणको आश्रीत छन् ।

स्वयंभू भगवान नारायणले जलको सृष्टि गर्नुभयो । नारायणबाट उत्पन्न हुने भएकोले जलको नार भनिन् थालियो । भगवानले सर्वप्रथम जलमा विश्राम गर्नुभयो । यसकारण भगवानलाई नारायण भन्ने गरिन्छ । भगवानले जलमा एउटा शक्ति छोडीदिनु

भयो त्यसबाट एउटा सवर्णमय अण्ड प्रकट भयो । त्यहीमा स्वयंभू ब्रह्माजीको उत्पति भयो यसरी सुनिन्छ । एक वर्ष अण्डा (फुल) मा निवास गरेर श्री ब्रह्माजीले उसलाई दुई टुक्रा गरिदिए । एउटाबाट धुलोक बन्यो र अर्कोबाट भुलोक ।

त्यसपछि ब्रह्माजीले आफ्नो शेषबाट रूद्रलाई प्रकट गर्नुभयो । उपरोक्त ज्ञान ऋषि लोमहर्षण (सुतजी) ले भन्नुभयो । जे सुने-सुनेको (लोक वेद) हो त्यो पूर्णछैन । किनकि ब्यक्ति भनिरहेछ कि यस्तो सुनेको छु । यसकारण पूर्णजानकारीको लागि श्री देवी पुराण, श्री शिवमहापुराण, श्रीमद्भागवत गीता तथा चारै वेद र पूर्णपरमात्माद्वारा तत्त्वज्ञान जुन स्वयम् वेद अर्थात् कविर्वाणी (कवीरवाणी) भनिन्छ । त्यसलाई लागि कृपया पढ्नुहोस । "गहरी नजर गीतामे", "परमेश्वरको सार संदेश" परिभाषा प्रभु की तथा पुस्तक "यथार्थ ज्ञान प्रकाश मे" ।

वास्तविक ज्ञानलाई स्वयं कलीयुगमा प्रकट भएर कर्विदेव (कवीर परमेश्वर) ले आफ्नो खास सेवक श्री धर्मधास साहेवजी (वांधवगढ वाला) लाई पुर्न ठीक-ठीक भन्नुभयो । जुन यसै पुस्तकमा सृष्टि रचनामा वर्णित छ । कृपया त्यसलाई पढ्नुहोस् ।

श्री परासरजीले काल ब्रह्मालाई परब्रह्मा पनि भनेको छ तथा ब्रह्मा तथा विष्णु पनि भनिन्छ तथा यसैलाई अनादी अर्थात् अमर पनि भनिन्छ । यो ब्रह्मा अर्थात् कालको जन्म मृत्यु हुँदैन् । यसैबाट ऋषिको काल बुद्धि सिद्ध हुन्छ ।

विचार गर्नुहोस् - विष्णु पुराणको ज्ञान एउटा ऋषिद्वारा भनिएको छ कि जसले लोकवेद (सुने सुनेको ज्ञान अर्थात् दंत कथा) को आधारबाट भनेको छ तथा ब्रह्मा पुराणको ज्ञान श्री लोमहर्षण ऋषिहरूबाट सुनेको थियो, उसले लेखेको छ । त्यसैले उपरोक्त हुने (विष्णु पुराण र ब्रह्मापुराण) लाई वुझ्नको लागि श्रीदेवी पुराण तथा शिवपुराणको सहयोग लिइनेछ । जुन स्वयं श्री ब्रह्मजीले आफ्नो पुत्र नारदजीलाई सुनाउनुभयो । जुन श्री ब्यास ऋषिद्वारा ग्रहण भयो तथा लेखियो । अन्य पुराणहरूको ज्ञान श्री ब्रह्माजीको ज्ञानको समान हुन सक्दैन । त्यसैले अन्य पुराणहरूलाई वुझाउनको लागि देवीपुराण तथा शिव पुराणको सहयोग लिईनेछ किनकी यो ज्ञान दक्षादी ऋषिहरूको पिता श्रीब्रह्माजीबाट दिईएको छ । श्री देवी पुराण तथा शिवपुराणलाई वुझ्नको लागि श्रीमद्भागवत गीता तथा चारै वेदहरूको सहयोग लिइनेछ । किनकि यो ज्ञान दक्षादी ऋषिहरूको पिता श्री ब्रह्मजीबाट दिइएको छ । श्री देवी पुराण तथा शिवपुराणलाई वुझ्नको लागि श्रीमद्भागवत गीता तथा शिवपुराणलाई वुझ्नको लागि श्रीमद्भागवत गीताको तथा चारै वेदको सहयोग लिईनेछ । किनकि यो ज्ञान स्वयं भगवान काल रूपी ब्रह्माद्वारा दिईएको छ । जुन ब्रह्मा विष्णु तथा शिवजीको उत्पन्न कर्ता अर्थात् पिता हुन् । पवित्र वेदहरू तथा पवित्र श्रीमद्भागवत गीताजीको ज्ञानलाई बुझ्नकोलागि स्वयं वेद अर्थात् सुकम वेदको सहयोग लिनु पर्दछ । जुन काल रूपी ब्रह्मको उत्पतिकर्ता अर्थात् पिता परम आदर (ब्रह्मा) कविर्देवबाट दिईएको छ । जो कविर्वाणीद्वारा स्वयं सत्पुरूषले प्रकट भएर भनेको थियो । ऋग्वेद मण्डल गीतामा अनुवाद काल अर्थात् ब्रह्माले आफ्नो स्थिती स्वयं बताउनु भएकोछ ।

गीता अध्याय १५ श्लोक १८ मा भन्छ कि म (काल रूपी ब्रह्मा) आफ्नो २१ ब्रमाण्डहरूमा जति प्राणी छ त्यसमा श्रेष्ठ हुँ त्यो चाँही स्थुल शरीरमा नाश वान छ अथवा आत्मा रूपमा अविनाशी छ । त्यैसले लोक वेद (सुने सुनाएको ज्ञान) के आधारबाट मलाई पुरूर्षोत्तम मान्नुहुन्छ । वास्तवमा पुरूर्षोतम म त (क्षरपुरूष अर्थात् काल) बाट तथा अक्षर पुरूष (परब्रह्मा) बाट अन्य र त्यही वास्तवमा परमात्मा अर्थात् भगवान भन्ने गरिन्छ । तीनै लोकमा प्रवेश गरी सबैको धारण पोषण गर्दछ । यही वास्तवमा अविनाशी परमेश्वर हो । ( गीता अध्याय १५ श्लोक १६,१७ मा) । गीता ज्ञान दाता ब्रह्मा स्वयं भनिरहेका छन् कि हे अर्जुन ! तिमी तथा मेरो धेरै जन्म भईसकेको छ । तिमी जान्दैनौ म जान्दछु । श्रीमद्भागवत गीता अध्याय ४ श्लोक ५, अध्याय १२ मा प्रमाण छ तथा अध्याय ७ श्लोक १८ मा आफ्नो साधनालाई पनि (अनुत्तमाम्) अति अश्रेष्ठ भनेको छ । यसकारण अध्याय १८ श्लोक ८२ मा भनिएको छ, कि हे अर्जुन ! सबै भावले त्यो परमेश्वरको शरणमा जाउ जसको कृपाले तिमीलाई परमशान्ति प्राप्त हुन्छौ । तथा कहिले पनि कष्ट नहुने लोक अर्थात् सतलोकको प्राप्त गर्नेछौ । अध्याय १५ श्लोक ४ मा भनिएको छ कि जव तिमीलाई तत्त्वदर्शी प्राप्त हुन्छ (जुन गीता अध्याय ४ श्लोक ३४ मा तथा अध्याय १५ श्लोक १ मा वर्णित छ ।) त्यसपछि यो परम पद परमेश्वरको खोज गर्नु पर्दछ । जसमा एउटा साधक फेरि फर्केर संसारमा आउदैन । अर्थात् पूर्णमोक्ष प्राप्त गर्दछ । जुन परमेश्वरबाट यो सवै संसार उत्पन्न भएकोछ । तथा त्यसैले सबैको धारण पोषण गर्नेछ । म (गीता ज्ञान दाता ब्रह्मा रूपी काल) पनि आदि पुरूष परमेश्वरको शरणमा छु । पुर्ण विश्वासको साथ उहाँकै भक्ति साधना अर्थात् पूजा गर्नु पर्दछ ।

## "श्री देवी पुराण ज्ञानबाट आर्जन गर्नुस"

"श्री देवी पुराणबाट आंशिक लेख तथा सार विचार"

(संक्षीप्त श्रीमद्देवीभागवत, सचित्र, मोटो पाइप, केवल हिन्दी सम्पादक - हनुमान प्रसाद पोद्दार, चिम्मनलाल गोस्वमी, प्रकाशक - गोविन्द भवन कार्यलय गीता प्रेस गोरखपुर ।)

।। श्रीजगदम्बिकायै नमः ।।

श्री देवी भागवत

तेस्रो स्कन्घ

राजा परिक्षितले ब्यासजीलाई ब्रह्मण्डको रचनाको विषयमा सोध्नुभयो । श्री ब्यासजीले भनेछन् कि राजन यही प्रश्न मैले ऋषिवर नारदलाई सोधेको थिए । त्यो वर्णन तपाईलाई सुनाउछु । मैले (श्री ब्यासजीले) श्री नारदलाई साधेछन् कि यो ब्रह्माण्डको रचयिता को हो ? कसैले त श्री शंकर भगवानलाई यसको रचयिता मान्दछन्, केहीले श्री विष्णु भगवानलाई तथा

केहीले ब्रह्माजीलाई तथा धेरै आचार्य भवानीलाई सबैको मनोरथ पूर्ण गर्ने भन्छन् । उहाँ माया महाशक्ति हुनुहन्छ तथा परम पुरूषको साथ वसेर कार्य सम्पादन गर्ने प्रकृति हो । ब्रह्माको साथ उसको अभेद सम्वन्ध छ । (पृष्ठ ११४)

नारदजीले भन्नुभयो, ब्यासजी प्राचिन समयको कुरा हो । यही संन्देश मेरो हृदयमा पनि उत्पन्न भईसकेको थियो । तव म आफ्नो पिता अमित तेजस्वी ब्रह्माजीको स्थानमा गए र उहाँसंग यो समय जुन विषयमा तिमी सोधिरहेछौ त्यही विषयमा मैले सोधे । मैले भने पिताजी ! यो सम्पूर्ण ब्रह्माण्ड कहाँबाट उत्पन्न भएको हो । यसको रचना तपाईले गर्नु भएको हो या विष्णुजीले या शिवजीले कृपया साँचो - साँचो भनिदिनुहोस् ।

ब्रह्माजीले भन्नुभयो - छोरा ! म यो प्रश्नको के उत्तर दिउ ? यो प्रश्न धेरै नै जटील छ । पूर्वकालमा सर्वत्र जलै जल थियो । त्यसबेला कमलबाट मेरो उत्पति भयो । म कमलको कोपिलामा वसेर विचार गर्न थाले, यो अगाध जलमा म कसरी उत्पन्न भयो ? को मेरो रक्षक हो ? कमलको डाठ समातेर जलमा ओर्ले । त्यहाँ मलाई त्यहाँ शेषशायी भगवान विष्णुको दर्शन भयो । वहाँ योग निन्द्रामा मंग्न भएर गहिरो निद्रामा सुतिरहनु भएको थियो । यसैमा भगवती योग निद्रा याद आयो, मैले उसलाई स्मरण गरे । अनि वहाँ कल्याणमयी भगवती श्री विष्णुको विग्रहबाट निस्केर अचिन्त्य रूप धारण गरेर आकाशमा विराजमान भईहालिन् । दिब्य आभुषण उनको छविलाई वनाइरहेको थियो । जव योग निद्रा भगवान विष्णुको शरीरबाट उछिट्टीएर आकाशमा वस्न थाली तव तुरून्तै श्री हरि उठेर वगिहाल्नु भयो, अव त्यहाँ म र भगवान वियणु दुईथे त्यही रूद्र पनि प्रकट हुनुभयो । हामी तीनैलाई देवीले भन्नुभयो ब्रह्मा, विष्णु, शिव तिमीहरू आफै सावधान भएर आफ्नो-आफ्नो कार्यमा संलग्न भईहाल । सृष्टि, स्थिती र संहार यो सबै तिमीहरूको कार्य हो । यतिकैमा एउटा सुन्दर विमान आकाशबाट उत्रिहाल्यो । अनि यो देवीले मलाई आज्ञा दिनुभयो । देवताहरू निर्भिक भएर इच्छा पुर्वक यो विमानमा प्रवेश गर । ब्रह्मा, विष्णु र रूद्र आज म तिमीहरूलाई एउटा भदभुत दृष्य देखाईरहेको छु ।

हामी तीनै देवतालाई त्यहाँ वसेको हेरेर देवीले आफ्नो सामर्थ्यले विमानलाई आकाशमा उडाइदिइन् ।

त्यतिकैमा हाम्रो विमान द्रुत गतिले चल्न थाल्यो र त्यो दिब्यधाम ब्रह्मालोकम पुग्यो । त्यहाँ एक अर्को ब्रह्मामा अवस्थित थियो । वहाँलाई हेरेर भगवान शंकर र विष्णु धेर आश्चर्य भयो । भगवान विष्णु र शंकरले मसंग सोध्नभयो । चतुरानन ! यो अविनाशी ब्रह्मा को हुन ? मैले उत्तर दिए, मलाई केहि थाहा छैन । सृष्टिको अधिष्ठता यो को हो ? भगवान ! म को हुँ ? र हाम्रो उद्देश्य के हो यो उल्भनमा मेरो मन भौतारिरहेछ ।

यतिकैमा मनको जस्तो तिव्रगामी त्यो विमान तुरून्तै त्यहाँबाट उड्यो थाल्यो र कैलाशको सुरम्भ शिरमा आई पुग्यो । त्यहाँ विमान पुग्ने वित्तीकै एउटा भब्य भवनबाट त्रिनेत्रधारी भगवान शंकर निस्कीए । त्यो नन्दी (साँढे) वसेको थियो ।

केहि क्षणपछि नै त्यो विमान त्यो शिखरबाट पनि तेज हावाको समान चालले

उड्यो र बैकुण्ठ लोकमा पुगिहाल्यो । जहाँ भगवती लक्ष्मीको विलास भवन थियो । छोरा नारद वहाँ मैले जुन सम्पती देखे त्यसको वर्णन गर्न मलाई असंभव भयो । त्यो उत्तम पुरीलाई देखेर विष्णुको मन आश्चर्यले समुन्द्रमा गोता लगाउन थाले । त्यहाँ कमललोचन श्रीहरी विराजमान थिए । चार हात युक्त थिए ।

यतिकैमा नै हावासंग कुरा गर्दै विमान तुरून्तै उडिहाल्यो । अगाडी अमृत जस्तो मिठो जलभ भएको समुन्द्र भेटियो । त्यहाँ एउटा मनोहर दिप पनि थियो । त्यही द्विपमा एउटा मंगलमय मनोहर मंगलमय पलंग ओछ्याइएको थियो । त्यो उत्कृष्ट पलंगमा एउटा दिब्य रमजी वसेकी थिइन् । हामी आपसमा भन्न थाले यो सुन्दरी को छिन् ? र यसको नाम के हो ? हामी यसको विषयमा एकदमै अनजान छौ ।

नारद ! शंकालु रूपमा हामीहरू त्यही वसीरहेका थियौं । भगवान विष्णुले त्यो चारूहासिनी भगवतीलाई देखेर बुद्धिमानी पुर्वक निश्चय गर्नुभयो कि त्यो भगवती जगदम्वीका हुनुहुन्छ । त्यसपछि वहाँले भन्नुभयो कि हामी सवैको धेरै कारणहरू छन्, महाविद्या र महामाया वोंहरको नाम हो । वहाँ पनि पूर्ण प्रकृति हुनुहुन्छ । यिनीहरूलाई विश्वेश्वरी, वेदगर्मा र शिवा भनिन्छ ।

त्यो त्यही दिब्यत्रना हुनुहुन्छ, जसको प्रलयार्णवमे मलाई दर्शन दिनुभएको थियो । त्यो समय वाल्यकालको थियो । मेरो पालन पोषणबाट भुलिरहेको थियो । वरको पातमा एउटा सुदृढ शैया लागेको थियो । त्यसमाथी सुतेर खुट्टीको बुढिऔंला आफ्नो कमल जस्तो मुखमा लिएर चुसीरहेको थियो र खेलिरहेको थियो। त्यो देवी आएर मलाई भुलाउनुहुन्थ्यो । वहाँ नै त्यो देवी हो । यसमा कुनै शंका छैन । वहाँलाई हेरेर मलाई फेरि पहिलेको कुरा सम्झना आयो । वहाँ हामी सवैको जननी हुनुहुन्छ ।

श्री विष्णुले समयानुसार त्यो भगवती भुवनेश्वरीको प्रार्थना शरू गर्नुभयो ।

भगवान विष्णुले भने - प्रकृति देवीलाई नमस्कार छ भगवती विधात्रीलाई निरन्तर नमस्कार छ । तिमी शुद्धस्वरूपी हौ, तिमीबाट नै उदभाषित भईरहेको छ । म ब्रह्मा र शंकर हामी सवै तिम्रो कृपाबाट विद्यमान छौ । हाम्रो अविर्भाव र तिरोभाव भएको हुन्छ । मात्र तिमी नै नित्य हौ, जगतजननी हौ, प्रकृति र सनातनी देवि हौ ।

भगवान शंकरले भने - देवी यो महाभाग विष्णु तिमीबाट नै प्रकट भएका हौं । त्यसपछि उत्पन्न हुने ब्रह्मा पनि तिम्रो वालक थिए । फेरि म तमोगुणी लिला गर्ने शंकरको किन तिम्रो सन्तान होइन अर्थात् मलाई पनि जन्म दिने तिमी हौ । यो संसारको सृष्टि, स्थिति र संहारमा तिम्रो गुण सधै समर्थ छ । त्यहि तिनै गुणबाट उत्पन्न म ब्रह्मा, विष्णु एवं शंकर नियमानुसार कार्यमा तत्पर रहन्छौं । म ब्रह्मा र शिव विमानमा चढेर गइरहेका थियौ । हामीले बाटोमा नयाँ नयाँ जगत देख्यौं । भवानी ! अब भन्नुहोस् उनलाई कसले वनाएको हो ?

यसकारण यहि प्रमाण हेर्नुहोस् श्रीमद्देवीभागवत महापुराण सभासटिकम् सहमहात्यम् खेमराज श्री कृष्ण दास प्रकाश मुम्वई, यसमा संस्कृत सहित हिन्दी अनुवाद गरिएको छ ।

तेस्रो स्कन्ध अध्याय ४ पृष्ठ १० श्लोक ४२ मा

ब्रह्मा-अहम् इश्वर फिल ते प्रभावात्सर्वे वधं जीन युता नयदा तू नित्याः को अन्य सुराः शतमख प्रभुखाः च नित्य त्वमेव जननी प्रकृती पुराणा (४२)

अनुवाद - हे माता ! ब्रह्मा, म तथा शिव तिम्रो प्रभावले नै जन्मीएका हौं । नित्य छैन् अर्थात् हामी अविनाशी छैनौ फेरि अन्य इन्द्रादी अर्को देवता कुन प्रकारले नित्य हुन सक्छ । तिमी नै अविनाशी हौ, प्रकृति तथा सनातनी देवी हौ ।(४२)

पृष्ठ ११-१२ अध्याय ५, श्लोक ८ः -

यदि दयाद्रमना सदांविके कथामहं विहितः च तमोगुणः कमलजश्च रजोगुण संभवः सुविहित किमु सत्वगुणो हरिः (८)

अनुवाद - भगवान शंकरले भन्नु भयो ः- हे माता ! यदि हामीमाथि दयायुक्त छौ भने मलाई तमोगुणी किन वनायौ, कमलबाट उत्पन्न ब्रह्मालाई रजोगुणी किन वनायौ तथा विष्णुलाई सत्गुणी किन वनायौ ? अर्थात् जीवको जन्म - मृत्यु रूपी दुष्कर्ममा किन लगायौ ?

श्लोक १२

रमयसे स्वपतिं पुरूषं सदा तव गति न हि विद्म शिवे (१२),

अनुवाद ः- आफ्नो लोग्ने पुरूष अर्थात् काल भगवानका साथमा सधैँ सदा भोग-विलास गर्दे रहन्छौ । तपाईको गति कसैले जान्दैन ।

ब्रह्माजी भन्नुहुन्छ - म पनि महामाया जगदम्विका चरणम परे र मैले उनीलाई भने आमा ! वेदले भन्छ (एकमेवाद्वितिय) ब्रह्मा छ के त्यो आत्मस्वरूपणा तिमी नै हौ अथवा त्यो अर्को कोही मान्छे हो ?

देवीले भनिन् - म र ब्रह्मा एउटै हुँ । म र यो ब्रह्मा कहिले अलिकति पनि फरक छैन् । गौरी, ब्राह्मी, रौद्री, वराही, बैष्णवी, शिवा वारूणी कौवरी नारसिंही र वासवी सवै मेरो रूप हो । ब्रह्माजी ! यस शक्तिलाई तिमी आफ्नी श्रीमती वनाउ । 'महासरस्वती' नामले विख्यात यो सुन्दरी अव सदा तिम्रो स्वास्नी भएर रहेने छिन् । भगवती जगदम्वाले भगवान विष्णुलाई भने - विष्णो ! मनलाई मुग्ध गर्ने यो महालक्ष्मी लिएर अव तिमी पनि वसी यो सदा तिम्रो वक्षःस्थलमा वसेकि हुनेछिन् । देवीले भनिन् शंकर मनको मुग्ध गर्ने यो महाकाली गौरी- नामले विख्यात छ तिमी यसलाई पत्नि रूपमा स्वीकार गर ।

अव मेरो कार्य सिद्ध गर्नको लागि विमानमा वसेर तिमीहरू चाडै जाउ । कुनै कठिन कार्य आई परेमा तिमीहरू जव मलाई संभने छौ तव म सामुन्ने उपस्थित हुनेछु । हे देवताहरू ! मेरो सनातन परमात्माको ध्यान सधै गर्दै गर्नु । हामी दुवैको स्मरण गर्नाले तिमीहरूको कार्य सिद्ध हुनुमा अलिकति पनि शंका उत्पन्न हुनेछैन ।

ब्रह्माजी भन्नु हुन्छ - यसरी भनेर भगवती जगदम्विकाले हामीलाई विदागर्नु भयो । उहाँले शुद्ध आचरणवाली शक्तिहरू मध्येबाट भगवान विष्णुकोलागि महालक्ष्मीलाई, शंकरकोलागि महाकालीलाई र मेरो लागि महासरस्वतिलाई पत्नी वन्ने आज्ञा दिनु भयो ।

अनि त्यस स्थनबाट हामी प्रस्थान गर्‍यौं ।

सार विचार - एक ब्रह्माण्डको वास्तविक स्थितिबाट महर्षि ब्यासजी, महर्षि नारदजी, र श्री ब्रह्माजी, श्री विष्णुजी, र श्री शंकरजी पनि अनभिज्ञ हुनुहुन्छ । यो पनि स्पष्ट भयो कि श्री दुर्गाजीलाई प्रकृति पनि भनिन्छ । दुर्गा र ब्रह्म (ज्योति निरंजन काल) को पति-पत्निको सम्वन्ध पनि छ । यसैले लेखिएको छ कि ब्रह्मासित प्रकृतिको अभेद सम्बन्ध छ, जसरी पत्निलाई अर्धांगिनी पनि भनिन्छ । श्री ब्रह्माजीलाई स्वयं पनि थाहा छैन कि उनी कहाँबाट उत्पन्न हुनु भएको हो । हजार वर्षसम्म जलमा पृथ्वीको खोजी गर्नु भयो तर भेटिएन । अनि पछि आकाशवाणीको भरमा हजार वर्षसम्म तप गर्नु भयो । फेरि कमलको नली समातेर लत झर्दा शेषनागको शैयामा विष्णु वेहोश भएको पाउनुभयो । श्री विष्णुको शरीरबाट एउटी देवी निस्की (प्रतनी जस्तो) जो सुन्दर आभुषण लगाएर आकाशमा विराजमान भइन । तव श्री विष्णुजी होशमा आउनु भयो । यतिकैमा शंकरजी पनि त्यहाँ आई पुगे ।

उपरोक्त विवरणबाट सिद्ध भयो कि तीनै भगवानलाई वेहोश वनाई राखिएको थियो । फेरि सचेत गराइयो । आकाशबाट विमान आयो देवीले तीनै प्रभुलाई विमानमा वस्न आदेश दिनुभयो । विमानलाई आकाशमा उडाईयो । माथि एक व्रह्मा, एक शिव र एक विष्णु अझै देखे जो ब्रह्मा लोकमा थिए ।

विचार गर्नुहोस् - ब्रह्मालोकमा अर्को ब्रह्मा, विष्णु र शिव देखिए । यो ज्योति निरंजनको कलावाजी नै हो । उहाँ नै तीन रूप धारण गरी ब्रह्मालोकमा तीन गुप्त स्थान (एक रजोगुण प्रधान क्षेत्र, एक सतोगुण प्रधान क्षेत्र, एक तमोगुण प्रधान क्षेत्र) वनाएर वस्नु हुन्छ र प्रकृति (दुर्गा अष्टंगी) लाई आफ्नी पत्नी (स्वास्नी) रूपमा राख्नु हुन्छ । जब यी दुवै रजोगुण प्रधान क्षेत्रमा रहनु हुन्छ तव यिनलाई महाव्रह्मा र महासावित्री भनिन्छ । यी दुवैको संयोगले जुन पुत्र जन्म लिन्छ त्यो रजोगुण प्रधान र उसको नाम ब्रह्मा राख्नु हुन्छ र युवा नभएसम्म अचेत गरी दिनु हुन्छ । जव यी दुवै (काल -ब्रह्मा र दुर्गा) महाविष्णु र महालक्ष्मी रूपमा सतोगुण प्रधान क्षेत्रमा वस्नु हुन्छ तव दुवैको पति पत्नी ब्यवहारले जुन पुत्र उत्पन्न हुन्छ त्यो सतगुण प्रधान हुन्छ र उसको नाम विष्णु राख्नु हुन्छ । युवा नभएसम्म उसलाई अचेर राखी पालन पोषण गर्नु हुन्छ । फेरि शेषनागको शैयामा उनलाई सुताएर अचेत गरि दिनु हुन्छ यसरी नै जव यी दुवै तमगुण प्रधान क्षेत्रमा बस्नु हुन्छ तब शिवा अर्थात् दुर्गा र महाशिव अर्थात् सदाशिवको पति -पत्नि ब्यवहारले जुन छोरा उत्पन्न हुन्छ त्यो तमगुण प्रधान हुन्छ र उसको नाम शिव राखिन्छ । यिनलाई पनि जवान नभएसम्म अचेत राखिन्छ र जवान भए पछि सचेत गरिदिनुहुन्छ । फेरि तीनवटैलाई एकै ठाउँमा राखेर जम्मागरी विमानमा वसाएर माथिल्लो लोकको दृश्य अवलोकन गराउनु हुन्छ यसैले कि कतै यिनिहरूले आफुलाई नै सर्वेसर्वा नभनुन् । गुण प्रधान क्षेत्रलाई सम्झनको लागि एउटा उदाहरण - कुनै घरमा तीन कोठा छन् । एउटा कोठामा देशभक्त सहिदहरूको चित्र राखिएको छन्, जव मानिस त्यो कोठामा जान्छ उसको विचार पनि देश भक्त जस्तै हुन जान्छ । दोस्रो कोठामा साधुसंतहरू, ऋषिमुनीहरूका चित्र सजाईएकको छ । त्यो कोठामा प्रवेश गर्ने वित्तिकै

मन शान्त र प्रभु भक्ति तिर आकर्षित हुन जान्छ । तेस्रो कोठामा अश्लील अर्धनग्न स्त्री पुरूषका चित्रहरू लगाईएका छन् भने स्वतः मलिन भावना जागृत हुन जान्छ । यस्तै किसिमले माथी ब्रह्मालोकमा कालरूपी ब्रह्माले तीन स्थान एक एक गुण प्रधान वनाई र राखेका छन् । तीनै प्रभु (रजोगुण ब्रह्मा, सतगुण विष्णु, तमगुण शिवजी) आ-आफ्नो गुणको प्रभाव कसरी पार्नु हुन्छ उदाहरण :- जस्तै भान्छा कोठामा खुर्सानीले दाल शब्जी भान्दा अन्य कोठामा वसेको मानिसलाई खुर्सानीको पिरोले आंछी आंछी पार्छ । जस्तै साकार वस्तु खुर्सानी त भान्छा कोठामा थियो । तर निराकार शक्ति अर्थात् गुणले टाढा वसेका मानिसलाई प्रभावित पारिदियो । ठीक त्यस्तै तीनवटै प्रभु (रजोगुण ब्रह्मा, सतगुण विष्णु, तमगुण शिवजी) आ-आफ्नो लोकमा वसेर पनि तीनलोक (पृथ्वी लोक, पाताल लोक, स्वर्गलोक) का प्राणीलाई प्रभावित पार्दछन् । जसरी मोवाईल फोनको रेन्जले फोन काम गर्छ । त्यसरी नै अदृष्य शक्ति रूपी गुणले तीनै देवता आफ्नो पिता कालको सृष्टि उसको भोजनका लागि चलाई रहेका छन् । दुर्गाको आफ्नै छुट्टै लोक पनि छ जसमा उ आफ्नो वास्तविक रूपमा दर्शन दिनु हुन्छ ।

फेरि यिनीहरूको विमान दुर्गा लोकमा पुग्यो । तव ज्योति निरंजन अर्थात् कालरूपी ब्रह्मले विष्णुजीलाई वाल्यकालको याद प्रदान गरिदिनुभयो । अनि विष्णुजीले वताए कि यो दुर्गा हामी तीनैको आमा हुन् । म वाल्यकालमा कोक्रामा पल्टेको थिएँ र यिनी मलाई झुलाई रहेकी थिइन् । तव श्री विष्णुजीले भन्नु भयो कि हे दुर्गा ! तपाई हाम्रो आमा हुनुहुन्छ । म ब्रह्मा र शंकर त जन्म लिने वाला हौ हाम्रो आविर्भाव अर्थात् जन्म र तिरो भाव अर्थात् मृत्यु हुन्छ, हामी अविनाशी छैनौं । तपाई प्रकृतिदेवी हुनुहुन्छ । यो कुरा श्री शंकरजीले पनि स्विकार्नु भयो र भन्नुभयो कि म तमोगुणी लीला गर्ने शंकर पनि तपाई कै संतान हूँ । श्री विष्णुजी र ब्रह्माजी पनि तपाईबाट नै उत्पन्न हुनुभएको छ । फेरि यी तीनै देवताको विहे दुर्गाले गरिदिनु भयो । प्रकृती देवी (दुर्गा ले आफ्नो शब्दशक्तिबाट आफ्नै अन्य तीन रूप धारण गर्नु भयो । श्री ब्रह्माजीको विहे सावित्री सित, श्री विष्णुजीको विहे लक्ष्मी सित र श्री शिवजीको विहे उमा अर्थात् काली सित गरि विमानमा वसाई यिनीहरूका छुट्टा छुट्टै लोकमा पठाइ दिनु भयो ।

ज्योति निरंजन (काल-ब्रह्मा) ले आफ्नो सासद्धारा समुन्द्रमा चार वेद लुकाई दिनु भयो । फेरि प्रथम पटक सागर मंथनको वेला माथि प्रकट गरि दिनु भयो । ज्योति निरंजन (काल) को आदेशले दुर्गाले चारै वेद श्री ब्रह्माजीलाई दिनु भयो । ब्रह्माजीले दुर्गा आफ्नी आमा सित सोध्नु भयो । कि वेदहरूमा जो ब्रह्मा (प्रभु) भनिएको छ त्यो तपाई नै हुनुहन्छ अथवा कुनै अन्य पुरूष हो ।

दुर्गाले कालको डरले वास्तविकता लुकाउने चेष्टा गरिन् र भनिन् कि म र ब्रह्मा एउटै हो कुनै फरक छैन । फेरि पनि वास्तविकता लुक्न सकेन । दुर्गाले फेरि भनिन् कि तिमी तीनै मेरो र ब्रह्मको सधै याद गरिरहनु । हामी दुवैको स्मरण गर्दै रहनाले यदि कुनै गाह्रो काम होला त म तुरून्त सामुन्ने उपस्थित हुनेछु ।

विषेश :- किनकि कालले दुर्गालाई भनि राखेको छ कि मेरो भेद कसैलाई नभन्नु त्यस डरले दुर्गाले दुनियालाई वास्तविकताबाट अपरिचित राखेकिछिन् । यिनीहरू आफ्नो छोराहरूलाई पनि भ्रुक्याई राख्छन् । यसको कारण छ कि काललाई श्राप लागेको छ एक लाख मानव शरीरधारी प्राणीहरूलाई नित्य आहार गर्ने । यसैले आफ्नो तीनै छोराहरूबाट आफ्नो आहार तयार गराउछ । श्री ब्रह्माजीको रजगुणबाट प्रभावित गरि सर्व प्राणीहरूबाट सन्तान उत्पन्न गराउँछ । श्री विष्णुजीको सतगुणबाट एक अर्कामा मोह उत्पन्न गराई स्थिती अर्थात् काल जालमा रोकि राख्नु र श्री शंकरजीको तमोगुणबाट संहार (नाश) गराएर आफ्नो आहार तयार गराउनु हुन्छ । फेरि तीनवटै प्रभुलाई मारेर खान्छ र नयाँ पुन्य कर्मी प्राणीहरू मध्यबाट तीन छोरा उत्पन्न गरी आफ्नो कार्य सचारू राख्छ तथा अधिका तिनवटै ब्रह्मा, विष्णु, शिव चौर ासी लाख योनीहरूमा तथा स्वर्ग नरकमा कर्माधारले चक्कर लगाईरहन्छन् । यिनै प्रमाण शिव महापुराण, रूद्र संहिता, प्रथम (सृष्टि) खण्ड अध्याय ६, ७ र ८, ९ मा पनि छ ।

## "श्री शिवमहापुराणबाट सार विचार"

### *"शिव पुराण"*

"श्री शिव महापुराण (अनुवादः श्री हनुमान प्रसाद पाद्दार । प्रकाशकः- गोविन्द भवन कार्यालय । गीता प्रेस गोरखपुर) मोटो टाइप, हध्याय ६ रूद्र संहिता प्रथम खण्ड ( सृष्टि) बाट विष्कर्ष)"

आफ्नो छोरो श्री नारदजीबाट श्री शिव र श्री शिवाको विषयमा सोधनी हुँदा श्री ब्रह्माजीले भन्नु भयो (पृष्ट १००-१०२) जुन परब्रह्माको विषयमा ज्ञान र अज्ञानले भरिपूर्ण युक्तिहरूद्वारा यसरी विकल्प गरिन्छ । जो निराकार परब्रह्मा हुनुहुन्छ । उहाँ नै साकार रूपमा सदाशिव रूप धारण गरि मानिस रूपमा प्रकट हुनुभयो । सदाशिवले आफ्नो शरीरबाट एउटी स्त्रिलाई उत्पन्न गर्नु भयो जसलाई प्रधान प्रकृति, अम्विका, त्रिवेद जननी (ब्रह्मा, विष्णु, शिवजी आमा) भनिन्छ । जसको आठ वटा हात छन् ।

## "श्री विष्णुको उत्पति"

जो सदाशिव छन् उनलाई परम् पुरूष, ईश्वर, शिव, शम्भु र महेश्वर भनिन्छ । उनी आफ्नो पूरै जिउभरि भस्म रमाएको हुन्छन् । ती कालरूपी ब्रह्मले एक शिवलोक नाउँका ( ब्रह्मलोकमा तमोगुण प्रधान क्षेत्र) धाम बनाई राखेको छ । त्यसलाई काशी भनिन्छ । शिव र शिवाले पति-पत्नी रूपमा रहँदा एउटा छोरोलाई जन्म दिए, जसको नाम विष्णु राखियो । अध्याय ७, रूद्र संहिता, शिव महापुराण (पृष्ठ १०३, १०४)

## "श्री ब्रह्म र शिवको उत्पति"

अध्याय ७, ८, ९ (पृष्ठ १०५-११०) श्री ब्रह्माजीले भन्नु भयो कि श्री शिव र शिवा (कालरूपी ब्रह्मा र प्रकृती दुर्गा - अष्टंगी) ले पतिपत्नि ब्यवहारबाट मेरो पनि उत्पति गर्नु भयो । यिनै काल महाविष्णु रूप धारण गरी आफ्नो नाइटो (नाभी) बाट एउटा कमल उत्पन्न गरि हाल्छन् । ब्रह्मा अगाडी भन्नु हुन्छ कि म फेरि होशमा आएँ । कमलको जर ो (मूल) पता लगाउन चाहे तर असफल भए । फेरि तप गर्ने आकाशवाणी भयो । तप गर ें फेरि मेरो र विष्णुमा कुनै कुराले गर्दा लडाई हुन गयो । (विवरण यसै पुस्तकको पृष्ठ सं. ५४९ मा) अनि हाम्रो बीचमा एउटा तेजोमय लिंग प्रकट भयो र ओ३म् -ओ३म् को नाद ( आवाज) प्रकट भयो । साथै त्यस लिंगमा अ-उ-म तीनवटै अक्षर पनि लेखिएका थिए । फेरि रूद्ररूप धारण गरी सदाशिव पाँच मुख भएको मानव रूपमा प्रकट हुनुभयो, उ सित शिवा (दुर्गा) पनि थिइन् ।

फेरि एक्कासी शंकरलाई प्रकट गर्नुभयो (किनकी यो पहिला अचेत थियो फेरि सचेत गरि तीनैलाई एकै ठाउँमा जम्मा गरी दिनु भयो) र भन्नु भयो कि तिमी तीनैजना सृष्टि - स्थिति र संहारको कार्य संभाल ।

रजगुण प्रधान ब्रह्माजी, सतगुण प्रधान विष्णुजी र तमगुण प्रधान शिवजी हुन् । यसरी तीनै देवतामा गुण छन्, तर शिव (कालरूपी ब्रह्मा) गुणातित मानिएको छ । (पृष्ठ ११०मा )

सार विचार :- माथीको विवरणबाट स्पष्ट छ कि कालरूपी ब्रह्मा अर्थात् सदाशिव र प्रकृति (दुर्गा) श्री ब्रह्मा, श्री विष्णु र श्री शिवका आमा वावु हुन् । यो सदाशिव अर्थात् ज्योति निरंजन कालको शरीर अर्थात् पेटबाट निस्केकी छन् । ब्रह्मा अर्थात् काल र प्रकृति (दुर्गा) सवै प्राणीहरूलाई भ्रमित राख्छन् । आफ्ना छोराहरूलाई पनि वास्तविकता बताउँदैनन् । कारण के छ भने कि कालको २१ ब्रह्माण्डका मानिसलाई यो थाहा नहोस् कि हामीलाई तप्तशिलामा भुटेर कालले नै खान्छ र जन्म मृत्यु तथा अन्य दुःखदायी योनिहरूमा पिडा दिने गर्छ । आफ्नो तिनै छोरा रजगुण ब्रह्माजी, सतगुण विष्णुजी, तमगुण शिवजीबाट उत्पति, स्थिति, पालन र संहार गराएर आफ्नो आहार तयार गराउछ । किनकी काललाई एक लाख मानव शरीरधारी प्राणीहरूको आहार गर्ने श्राप लागेको छ । कृपया श्रीमद्‌भागवत गीताजीमा पनि हेर्नुहोस् - काल (ब्रह्मा) र प्रकृति (दुर्गा) दुवैको पति - पत्नि कार्यबाट रजगुण ब्रह्मा, सतगुण विष्णु र तमगुण शिवजीको उत्पति ।

## "तीनै गुण के हो ? प्रमाण सहित"

तीनै गुण रजगुण ब्रह्माजी, सतगुण विष्णुजी, तमगुण शिवजी हुन् । ब्रह्मा (काल) र प्रकृति (दुर्गा) बाट उत्पन्न भएका छन् र तीनै नाशवान हुन् ।

प्रमाण :- गीता प्रेस गोरखपुरबाट प्रकाशित श्रीमद्देवीभागवत पुराण जसको सम्पादक छन्- श्री हनुमानप्रसाद पोद्दार चिमनलाल गोस्वामी तेस्रो स्वाद अध्याय ५ पृष्ठ १२३:- भगवान विष्णुले दुर्गाको स्तुती गरेर भन्नुभयो कि म (विष्णु) ब्रह्मा र शंकर तपाई कै कृपाले विद्यमान छौं । हाम्रो त अविर्भाव (जन्म) र तिरोभाव (मृत्यु) हुन्छन् । हामी नित्य अविनाशी छैनौं । तपाई नै नित्य हुनुहुन्छ । भगवान शंकरले भन्नु भयो । यदि भगवान ब्रह्मा र भगवान विष्णु तपाईबाट नै उत्पन्न हुनुभएको छन् । भने त्यसपछि उत्पन्न हुने म तमोगुणी लीला गर्ने शंकर के तपाईको सन्तान होइन ? अर्थात् मलाई पनि उत्पन्न गर्ने तपाई नै हो । यो संसारको सृष्टि - स्थिती - संहारमा तपाईको गुण सदासर्वदा छ । यिनै तीन गुणबाट उत्पन्न हामी ब्रह्मा, विष्णु र शंकर नियमानुसार कार्यमा तत्पर रहन्छौ ।

उपरोक्त यो विवरण मात्र हिन्दीमा अनुवादित श्री देवी महापुराणबाट जसमा कोटी तथ्य कुराहरू लुकाएको छ । यसैले यो नै प्रमाण हुर्नुहोस् । श्रीमद्देवीभागवत महापुराण सभाषाटिकम् समहात्यम् खेमराज श्रीकृष्ण दासप्रकाश मुम्वई, यसमा संस्कृत सहित हिन्दी अनुवाद गरिएको छ । तेस्रो स्कंद अध्याय ४ पृष्ट १० श्लोक ४२:-

ब्रह्म - अहम इश्वरः फिल ते प्रभातात्सर्वे वयं जनि युता न यदा तू नित्याः, के अन्ये सुराः शतमख प्रमुखाः च नित्या नित्या त्वमेव जननी प्रकृतिः पुराणा (४२) ।

अनुवाद :- हे आमा ! ब्रह्मा म र शिव तिम्रै प्रभावले जन्मवान हौ, नित्य छैनौ अर्थात् हामी अविनाशी छैनौ फेरि अन्य इन्द्रदी अर्को देउताहरू कसरी नित्य हुन सक्छन् । तिमी नै अविनाशी हौ, प्रकृती तथा सनातनी देवी हो ।।४२।।

पृष्ठ ११-१२ अध्याय ५ श्लोक ८ :-

यदि दयाद्रमना न सदांबिके कथमहं विहितः च तमोगुणः कमलजश्च रजोगुणसंभवः सुविहितः किमु सत्वगुणों हरिः । (८)

अनुवादः- भगवान शंकरले भन्नुभयो :- हे आमा ! यदि हामी माथी तपाई दयायुक्त हुनुहुन्छ भने मलाई तमोगुण युक्त किन वनाउनु भयो । कमलबाट उत्पन्न ब्रह्मालाई रजोगुण युक्त किन वनाउन भयो र विष्णुलाई सतोगुण किन वनाउनु भयो ? अर्थात् जीवहरूको जन्म-मृत्यु रूपी दुष्कर्ममा किन लगाउनु भयो ? श्लोक १२ :-

रमयसे स्वपतिं पुरूष सदा गतिं न हि विह विदम् शिवे (१२)

अनुवाद :- आफ्नो पति पुरूष अर्थात् काल भगवान सित सधै भोग विलास गर्दै र हनुहुन्छ । तपाईको गति कसैले जान्दैन ।

## "निष्कर्ष"

श्रीमद्भागवत गीताको ज्ञान पनि यिनै कालरूपी ब्रह्माले श्री कृष्णजीको शरीरमा प्रेतवस प्रवेश गरी भन्नु भएकोछ । उपरोक्त पुराणहरूले प्रमाणहरूले प्रमाणीत गरिदिए कि प्रकृति,

दुर्गालाई भन्छन् । सदाशिव अर्थात् काल रूपी ब्रह्मा र प्रकृतीबाट रजुगुण ब्रह्माजी, सतगुण विष्णुजी तथा तमगुण शिवजीको उत्पति पति-पत्नि व्यवहारबाट भएको हो । यसैको साक्षी श्रीमद्भागवत गीताजी पनि हो । श्री गीताजी सवै शास्त्रहरूको सार हो । यसैले यसमा संक्षीप्त विवरण सांकेतिक शब्दहरू (कोड वर्डस्) मा छन् । जसलाई तत्त्वदर्शी संत नै सम्फाउन सक्दछन् । अव कृपया प्रवेश गरौं - पवित्र श्रीमद्भागवत गीताजी मा ।

अध्याय १४ श्लोक ३ देखि ५ सम्म पवित्र श्रीमद्भागवत गीता भन्ने काल - ब्रह्माले श्री कृष्णजीको शरीरमा प्रेतवस प्रवेश गरी भनेका छन् कि प्रकृति (दुर्गा) त मेरी पत्नि हो म ब्रह्मा यसको योनीमा वीज स्थापना गर्छु । जसले सर्वप्राणीहरूको उत्पति हुन्छ । म सवैको पिता र प्रकृती (दुर्गा ) सवैको आमा हुन् । प्रकृति (दुर्गा) बाट उत्पन्न तीनै गुण ( रजगुण ब्रह्मा, सतगुण विष्णु, तमगुण शिव) जिवात्मालाई कर्माधारले शरीरमा वाधि राख्छन् अर्थात् यी तीनै सवै प्राणीहरूलाई संस्कारको आधारमा उत्पति, स्थिति, र संहार गरि फँसाएर राख्छन् ।

अध्याय ११ श्लोक ३२ मा भनेको छ कि म काल हुँ, सवैलाई खानको निमित्त प्रकट भएको छु । अध्याय ११ श्लोक २१ मा अर्जुन भन्दैछन् कि तपाई त ऋषिहरूलाई पनि खाईर हनु भएको छ, देउता र सिद्धहरू पनि तपाई सित मंगल अर्थात् रक्षाको याचना गर्दै छन् । वेदका स्त्रोतहरूद्धारा तपाईको स्तुति गर्दै छन् । तर तपाई सवैलाई खाँदै हुनुहुन्छ । केहि तपाईको दाह्रीमा झुण्डिएका देखिन्छन्, केहि तपाईमा प्रवेश गरिरहेको देखिन्छ ।

## "रजोगुण श्री ब्रह्माजी, सतगुण श्री विष्णुजी र तमगुण श्री शिवजी त्रिदेवहरूको पूजा व्यर्थ भनिएको छ ।"

यिनै गीता ज्ञान दाता प्रभु (श्रीमद्भागवत गीता अ. ७ श्लोक १२ देखि १५ सम्ममा) भन्दै छ कि तीनै गुणहरू (रजगुण ब्रह्मा, सतगुण विष्णु, र तमगुण शिव) को पूजा गर्ने मानिसको ज्ञान हरण गरिएको छ, यिनीहरू त ती तीन गुणहरू भन्दा माथी मेरो पूजा भक्ति पनि गर्दैनन् । तीनै प्रभुहरू ब्रह्मा, विष्णु, शिवसम्मको साधना गर्ने मानिसहरू राक्षस स्वभाव धारण गर्ने मानिसहरूको विच, दुश्कर्म गर्ने यी तीनै भन्दा माथी म ब्रह्माको पूजा पनि गर्दैनन् ।

श्रीमद्भागवत गीताको ज्ञान दाता प्रभुले अध्याय ८ श्लोक १८ मा आफ्नो भक्तिलाई अनुत्तम घटिया भनिएको छ ।

यसैले अध्याय १५ श्लोक ४ र अध्याय १८ श्लोक ६२ र ६६ मा कुनै अन्य पर मेश्वरको शरणमा जानलाई भन्नु भएको छ ।

जुन वेला गीताको ज्ञान भनिदै थियो । त्यो भन्दा अगाडी न त १८ पुराण थिए र न त कुनै ११ उपनिषद् न शास्त्र नै थिए । पछाडी ऋषिहरूले आ-आफ्नो अनुभवको पुस्तक लेख्नु भएको छ । त्यस वेला मात्र चारै वेद नै शास्त्र रूपमा प्रमाणित थिए र तिनै पवित्र चारै वेदहरूका सारांश पवित्र गीताजीमा वर्णित छ ।

## "शास्त्रार्थ विषय"

## "शास्त्रार्थले परमेश्वरको तत्वज्ञानलाई अल्भायो"

***शास्त्रार्थ कसरी हुन्थे ?***

**दुई विद्वान् प्रश्न- उत्तर गर्ने गर्थे र श्रोताहरू पनि अधिक संख्यामा शास्त्रार्थ ( प्रश्नोत्तर) सुन्नको लागि उपस्थित हुन्थे । हार जीतको फैसला श्रोताहरूको हातमा हुन्थ्यो जसलाई स्वयंज्ञान थिएन कि यिनीहरू के भन्दै छन् । जसले अधिक अधिक संस्कृत लगातार उच्चारण गर्थे त्यसको पक्षमा श्रोतागण ताली वजाएर विजय हुने प्रमाण दिने गर्थे । यसरी विद्वानको हार जीतको फैसला अविद्वानहरूको हातमा हुन्थे ।**

प्रमाण :- पुस्तक श्रीमद् दयानन्द प्रकाश लेखक श्री सत्यानन्दजी महाराज

प्रकाशकः- सार्वदेशिक आर्य प्रतिनिधि सभा ३/५ महर्षि दयानन्द भवन, रामलिला मैदान नयाा दिल्ली २, गंगा काण्ड आठवां सर्ग पृष्ठ ८९ बाट जस्ताको तेस्तै लेखः- तीन दिन तक, प्रतिसायं कृष्णानन्द जी और स्वामी जी का शास्त्रार्थ होता रहा । एक दिन शास्त्रार्थ के समय किसी ने कृष्णानन्द जी से साकारवाद का अवलम्बन किया और इसी पर शास्त्रार्थ चलाया । स्वामी जी का तो यह मन-चाहता विषय था । उन्होंने धाराप्रवाह संस्कृत बोलते हुए निराकार सिद्धान्त पर वेदों और उपनिषदों के प्रमाणों की एक लडड़ी पिरोदी, और कृष्णानन्द जी को उनका अर्थ मानने के लिए बाधित किया । कृष्णानन्द कोई प्रमाण न दे सका । केवल गीता का यह श्लोक 'यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारतू लोगों की ओर मुंह करके पढऩे लगा । स्वामी जी ने गर्ज कर कहा कि' आप वाद मेरे साथ करते हैं, इसलिए मुझे ही अभिमुख कीजियें ।' परन्तु उसके तो विचार ही उखडड़ गये थे, वह चौकडी ही भूल चुका था । मुख में झाग आ गए । गले में घिग्घी बाध गई । चेहरा फीका पडड़ गया । किसी प्रकार लाज रह जाए, इससे उसने तर्क-शास्त्र की शरण लेकर स्वामी जी को कहा कि 'अच्छा, लक्षण का लक्षण बताइये ? 'स्वामी जी ने उत्तर दिया कि' जैसे कारण का कारण नहीं वैसे ही लक्षण का लक्षण भी नहीं है ।' लोगों ने अपनी हंसी से कृष्णानन्द की हार प्रकाशित कर दी और वह घबडाकर वहाा से चलता बना ।

**उपरोक्त लेखमा स्पष्ट छ कि विद्वानहरूको हार जीतको निर्णय अविद्वान गर्थे । स्वामी दयानन्दजीले लगातार संस्कृत भनिदिनु भयो, श्रोताहरूले हाँसेर महर्षि दायानन्दजीलाई विजेता घोषित गरिदिए र परमात्मा निराकार मानी हाले । जवकी यजुर्वेद अध्याय १ मंत्र १५ र यजुर्वेद अध्याय ५ मंत्र १ मा स्पष्ट छ कि परमात्मा शसरिर छन् र साकार छन् ।**

स्वामी दयानन्दजी संस्कृत भाषामा प्रवचन गर्थेको प्रमाण :- "सत्यार्थ प्रकाश" को भूमिका पृष्ठ ८ मा स्वामी दयानन्दजीले भन्नु भएको छ कि प्रथम पटक सत्यार्थ - प्रकाश छापिएको थियो । त्यस वेला मलाई हिन्दी राम्ररी आउदैनथ्यो । किनकि वालकाल देखि सन् १८८२ (सम्वत्१९३९) सम्म सम्म संस्कृतमा भाषण गर्दै रहे । यसबाट सिद्ध भयो कि स्वामी दयानन्दजी संस्कृत भाषामा शास्त्रार्थ गर्नुहुन्थ्यो । सम्वत् १९३९(सन् १८८२) मा सत्यार्थ प्रकाशलाई दोस्रो पटक छापिएको एक वर्ष पछि सन् १८८३ मा स्वामीजीको निधन भई हाल्यो । स्पष्ट भयो कि निधन हुनु भन्दा एक पूर्व नै स्वामी दयानन्दजीलाई हिन्दी भाषा जानकारी भयो । यसभन्दा अगाडी संस्कृत भाषामा प्रवचन (ब्याख्यान) गर्नुहुन्थ्यो । श्रोतागण संस्कृतबाट अपरिचित हुन्थे र यिनीहरू नै विद्वानहरूको हारजीतको फैसला गर्ने गर्थे ।

अव यो दासहरूका दास (रामपाल दास) चाहन्छ कि सबै पवित्र धर्महरूको प्रभु चाहने पुण्यात्माहरू तत्त्वज्ञानले परिचित भई जाओस् अनि स्वयं लाल र लालडीको पारख (पहचान) गरि हाल्नेछन् । कथा - एउटा सेठको दुई छोरा थिए । एउटा १६ वर्ष र अर्को १८ वर्षको । पिताजीको मृत्यु भई हाल्यो । वालककी आमाले एउटा कपडामा वेरिएको लाल आफ्नो छोराहरूको हातमा राखेर भनिन् कि हे छोरा हो यो लाल लगेर आफ्नो काका सित भन्नु कि हामी सित पैसा छैन् । यो लाल तपाई आफु सित राख्नुहोस् र ब्यापारमा हाम्रो हिस्यादारी गरिदिनुहोस् । हामी केटा केटी छुट्टै ब्यापार गर्न सक्दैनौ । दुबै वालक आफ्नो आमाले दिएको लालहरू लिएर आफ्नो काकाको मा गए । र आमाले भनेको सबै कुरा भने । त्यो सेठ (काका) ले लालहरू देखेर र वालकहरूले भनेको कुरा स्वीकार गरि भन्यो कि छोरा यी लालहरू आफ्नी आमालाई नै दिनु, जोगाएर नै राख्छिन् । तिमीहरू म सित अर्को शहरमा हिँड मलाई उधारो धेरैमाल सामान भेटिहाल्छ । फर्केर आए पछि ती लालहरूको प्रयोग गर्नेछौ ।

दुबै वालक काका सित अर्को शहरमा गए । एक दिन काकाले एउटा लाल वालकलाई दियो र भन्यो कि छोराहरू यो लाल हो, यसलाई त्यो सेठलाई दिएर आउ जसबाट हिजो पचाँस हजारको माल उधारो लिएको थिएँ र उसलाई भन्नु कि यो लाल तपाई राख्नुहोस्, हामी फर्केर आएपछि तपाईको उधारो चुक्ता गर्ने छौ र आफ्नो लाल फिर्ता लग्ने छौ ।

दुबै वालकले सेठलाई उपरोक्त विवरण सुनायो । अनि सेठले एउटा जौहरीलाई वोलाएर लाल हेर्न दियो । जौहरीले लाललाई पारख गरि भन्यो कि यो लाल होइन यो लालडी हो । जो सय रूपैयाँको पनि छैन् । लालको मोल त नौ लाख रूपैया हुन्छ । सेठले नराम्रो अपशब्द भनेर त्यो लालडीलाई फाल्दियो । वालकहरू ती लालडीलाई उठाएर आफ्नो काका कहाँ आए । ती वालकले आँखाबाट आँसु वगाउदै सबै कुरा वयान गरे र भने कि एउटा मानिस आएर भन्यो कि यो लाल होइन लालडी हो ।

काकाले भन्नु भयो - छोरा त्यो जौहरी थियो । उ सहि भन्दै थियो । यो त

वास्तवमा लालडी नै हो, यसको यसको किमत सय रूपैयाँ पनि छैन् । म सित धोका भएको छ । लाल त यो छ, गल्तीले मैले नै तिमीलाई लालडी दिएको थिए । अव जाउ र सेठ सित भन्नु कि मेरो काका धोकेवाज छैन् । लालको धोकामा लालडी दिनु भएको थियो । दुवै दाजुभाइ फेरि तिनै ब्यापारी सेठ कहाँ गए । भने कि मेरो काका धोकेवाज छैन्, सेठजी, गल्तीले लालको सट्टा लालडी दिनु भएको थियो, यो लिनुस् लाल । जौहरीले वतायो कि यो वास्तवमा लाल हो, त्यो लालडी थियो ।

सामान लिएर दुवै आफ्नो शहर फर्केर आए । अनि अंकलजीले भन्यो कि वावु, आफ्नी आमा सित भएको लाल लिएर आउ, उधारो अधिक भईसकेको छ । दुवै केटा आफ्नी आमा सित कपडामा वेरिएको लाल झिकेर हेर्छन् त ती लालडी थिए, लाल एउटा पनि थिएन । अंकलले ती वालकहरूलाई लाल र लालडीको पहिचान गराई दिएका थिए । दुवै छोराले आफ्नी आमा सित भनेकि आमा यो त लालडी हो, लाल होइन । दुवै केटा फर्केर काकाको मा आएर हाम्री आमा धेरै सोझी छिन । उनलाई लाल र लालडीको पहिचान छैन् । ती लाल होइन, लालडी छन् । सेठले भन्यो कि छोरा । ती त्यसदिन पनि लालडी नै थिए जुन दिन म कहाँ लिएर आएका थियौ । यदि मैले लालडी भनी दिएको भए तिमीहरूकी आमा भन्थिन् कि मेरो लोग्ने छैन् त्यसैले मेरो लालहरूलाई पनि लालडी भन्दै छ । वावू ! आज मैले तिमीहरूलाई नै लाल र लालडीको पहिचान गर्ने क्षमता वान वनाई दिएँ । तिमीहरूले नै स्वयं फैसला गरिहाल्यो ।

विशेष :- यस्तै किसिमले आज यो दासको चाहना यही छ कि तत्त्वज्ञानलाई जन-जनसम्म पुर्‍याईदेउँ ताकि तपाई स्वयं शास्त्रहरूका प्रमाण देखेर पारख गर्ने योग्य भएर संत असंतको पहिचान गर्न सक्नुहोस् ।

शास्त्रार्थ विद्वानहरू गर्थे र हारजीतको फैसला अविद्वानहरूका हातमा थियो । यो दासको चाहना छ कि प्रभु प्रेमी पुण्यात्माहरू पहिला शास्त्र सम्झोस् । फेरि स्वयं थाहा पाउने छन् कि संत वा महर्षिहरू के पढाई पढाउनु हुन्छ ।

## "शास्त्रार्थ महर्षि सर्वानन्द र परमेश्वर कवीर (कविर्देव) को"

एक सर्वानन्द नाम गरेको महर्षि थियो । उसको पूज्य आमा श्रीमती सारदा देवी पाप कर्मफलले पिडित थिइन् । उनले सवै पूजा, जन्त्र, मंत्र अनेकौ वर्षसम्म कष्ट निवारणको लागि गरिन् । शारिरिक पिडा निवारणको लागि वैद्यहरूको औषधि पनि खाइन् तर कुनै फाइदा भएन । त्यस वेलाका महर्षिबाट उपदेश पनि प्राप्त गरिन्, तर सवै महर्षिहरूले भने कि वेटी शारदा यो तेरो पाप कर्मको दण्ड प्रारब्ध कर्मको फल हो । यो क्षमा हुन सक्दैन । यो भोग भोग्नै पर्ने हुन्छ । भगवान श्री रामले वालीको वध गरेका थिए त्यस पाप कर्मको दण्ड श्री राम (विष्णु वाली आत्मा) ले श्री कृष्ण वनेर भोग्नु पर्‍यो । श्री वाली वाला आत्मा शिकार ी भयो । जसले श्री कृष्णजीको पैतालामा विषाक्त वाण हानेर वध गर्‍यो । यसरी गुरूजी, संत,

महन्त एवं ऋषिहरूको विचार सुनेर दुःखी मनले भक्तमती शारदा आफ्नो प्रारब्ध पाप कर्मको कष्ट रोई
रोई भोग्दै थिइन । एक दिन निजी रिस्तेदारको भनाईमा काशीमा (स्वयंभू) स्वयं शसरिर प्रकट हुनु भएको कवीर परमेश्वर अर्थात् कवीर प्रभुबाट उपदेश प्राप्त गरिन् र कष्ट मुक्त भइन् । किनकी पवित्र यजुर्वेद अध्याय ५ मंत्र ३२ मा लेखिएको छ कि कवीरंधारिरसी अर्थात् (कवीर) कवीर (अंधारी ) पापको शत्रु (असि) छ । फेरि यसै पवित्र यजुर्वेद अध्याय ८ मंत्र १३ मा लेखिएको छ कि परमात्मा (एनसः एनसः) अधर्मको अधर्म अर्थात् पापहरूको पनि पाप घोर पापलाई पनि समाप्त गरिदिनु हुन्छ । प्रभु कवीर परमेश्वर (कविर्देव) जीले भन्नु भयो छोरी शारदा यो सुख तेरो भाग्यमा थिएन, मैले आफ्नो कोषबाट प्रदान गरेको छु र पाप विनासक हुने प्रमाण दिएको छु । तेरो छोरो महर्षि सर्वानन्द भन्ने गर्छ कि प्रभु पाप क्षमा ( विनाश) गर्न सक्तैन र तिमी मबाट उपदेश प्राप्त गरी आत्मकल्याण गर्छु । भक्तमति शार दाजीले स्वयं आउनु भएका कवीर परमेश्वरबाट उपदेश लिए आफ्नो कल्याण गराईन । महर्षि सर्वानन्द जो भक्तमती शारदाजीको छोरा थियो, जसलाई शास्त्रार्थको निकै चासो थियो । उसले आफ्नो समकालीन सवै विद्धानहरूलाई शास्त्रार्थमा पराजित गरिदिनु भयो । फेरि सोच्यो कि दुनियालाई वारम्वार भन्नु पर्छ कि मैले सवै विद्धानलाई पराजित गरेको छु, आमालाई भनेर आफ्नो नाम सर्वाजित राख्न लगाउँछु । यो सोचेर आफ्नी आमा श्रीमती शारदाजीसंग प्रार्थना गऱ्यो । भन्यो कि आमा मेरो नाउँ वदलेर सर्वाजित राखि दिनुहोस् । आमाले भनिन् के सर्वादन्द नराम्रो नाम हो र ? महर्षि सर्वानन्दजी ले भन्नु भयो आमा मैले सवै विद्धानहरूलाई शास्त्रार्थमा पराजित गरि सकेको छु त्यसैले मेरो नाम सर्वाजित र ाखिदिनुहोस् । आमाले भनिन् - एक विद्धान् मेरो गुरू महाराज (कविर्देव) कवीर प्रभुलाई पनि पराजित गरिदेउ, फेरि आउने वित्तिकै तिम्रो नाम सर्वाजित राख्ने छु । आमाको यो कुरा सुनेर पहिला त सर्वानन्द हास्यो । फेरि भन्यो कि आमा तपाई पनि कति सोझो । त्यो जुलाहा (धाणक) कवीर त अशिक्षित छ । उसलाई के पराजित गर्नु, अहिले गएँ, अहिले आएँ ।

महर्षि सर्वानन्द सवै शास्त्रहरूलाई एउटा गोरूको पिठ्युमा राखेर कविर्देव (कवीर परमेश्वर) को झुपडी पुग्यो । परमेश्वर कवीरजीको धर्म पुत्री कमाली पहिला कूपमा भेटिन्, फेरि प्रवेशद्धारमा आएर भनिन् - आउनुहोस्, महर्षिजी यहि हो परम पिता कवीरजीको घर श्री सर्वानन्दजीले कमालीद्धारा आफ्नो लोटा पानीले भर्न लगायो यतिसम्म कि एक थोपा पानी अझै राख्यो भने त्यो पानी पोखियोस् । अनि कमालीलाई भन्यो कि छोरी यो लोटा विस्तारै लगेर कवीरलाई देउ र उनले जे जवाफ दिन्छन मलाई आएर भन्नु । कमालीद्धार ा ल्याइएको लोटामा परमेश्वरजीले एउटा कपडा सिउने ठूलो सियो हाल्नु भयो, केहि पानी लोटाबाट तल झरेर भुइमा पऱ्यो र भन्नु भयो छोरी यो लोटा श्री सर्वानन्दजीलाई फर्काई दिनु । लोटा फर्काउन आएकी कमाली सित सर्वानन्दजीले सोध्नु भयो कि कवीरले के उत्तर दियो । कमालीले प्रभुबाट सियो हालेको वृतान्त सुनाइन् । अनि महर्षि सर्वानन्दजीले परम पूज्य कवीर परमेश्वर (कविर्देव ) सित सोध्नु भयो कि तपाईले मेरो प्रश्नको के उत्तर दिनु

भयो ? प्रभु कवीरजीले सोध्नु भयो कि के प्रश्न थियो तपाईको ?

श्री सर्वानन्द महर्षिले भन्नु भयो - मैले सवै विद्वानलाई शास्त्रार्थमा पराजित गरि सकेको छु । मैले आफ्नी आमाज्यू सित प्रार्थना गरेको थिएँ कि मेरो नाम सर्वाजित र ाखिदिनुहोस् । मेरी आमाले तपाईलाई पराजित गरिसकेपछि मेरो नाम परिवर्तन गरिदिने भन्नु भएको छ । तपाई समक्ष पानीले पूर्णरूपेण लोटा भरेर पठाउनुको अर्थ हो कि म ज्ञानको यति भरिपूर्ण छु जस्तै लोटा जलले । यसमा अझै अलिकति पनि जल अटाउदैन् अर्थात् वाहिर नै आउने छ । अर्थात् मेरो सितज्ञान चर्चा गर्नाले कुनै लाभ हुने छैन । तपाईको ज्ञान मेर ो भित्र जान सक्दैन । ब्यर्थको गन्थन मन्थन हुन्छ । यसैले हार स्वीकार गरि लेखेर दिनुहोस् । यसैमा तपाईको भलाई छ ।

पूज्य कवीर परमेश्वर (कविर्देव) ले भन्नु भयो कि तपाईको जलले परिपूर्ण लोटामा फलामको सियो राख्नको मतलव छ कि मेरो ज्ञान (तत्त्वज्ञान) यति भारी (सत्य) छ कि जसरी लोटाको पानीलाई वाहिर निकालेर सियो तलसम्म गयो । यसरी मेरो तत्त्वज्ञान तपाईको असत्य ज्ञानलाई निकालेर तपाईको हृदयमा वास गराउनेछ ।

महर्षि सर्वानन्दले भन्नु भयो प्रश्न गर्नुहोस् एक चर्चित विद्वानलाई जोलहा (धाणक) को मोहल्लामा आएको देखेर छर छिमेकीका सोझा अशिक्षित जोलाहाहरू शास्त्रार्थ सुन्नको लागि एकत्रित भए ।

पूज्य कवीरदेवले प्रश्न गर्नुभयो :-

कौन ब्रह्म का पिता है, कौन विष्णु की माँ ।
शंकर का दादा कौन है, सर्वानन्द दे बताए ।।

को ब्रह्माको पिता, को विष्णुको आमा ।
शंकरके दाता को , सर्वानन्द देउ वताई ।।

उत्तर महर्षि सर्वानन्दजीको - श्री ब्रह्माजी रजगुण, श्री विष्णुजी सतगुण र श्री शिवजी तमगुण युक्त छन् । यी तीनवटै अजर, अमर अर्थात अविनाशी छन्, सर्वेश्वर - महेश्वर- मृत्युंजय छन् । यिनको आमा वुवा छैनन् । तपाई अज्ञानी हुनुहुन्छ, तपाईलाई शास्त्रको ज्ञान छैन् । यस्तै जथाभावी प्रश्न गर्नु हुन्छ । सवै उपस्थित स्रोताहरूले ताली वजाएर महर्षि सर्वानन्दको समर्थन गरे ।

पूज्य कवीर प्रभु (कविर्देव) जीले भन्नु भयो कि महर्षिजी तपाई श्रीमद्देवीभागवत पुराणको तेस्रो स्कंन्द र श्री शिव पुराणको छैठौर सातौ रूद्र संाहिता अध्याय प्रभुलाई साक्षी राखेर गीताजीमाथी हात हालेर पढ्नुहोस् र अनुवाद सुनाउनुहोस् । महर्षि सर्वानन्दजीले पवित्र गीताजी माथी हात हालेर सपथ लिनु भयो कि सहि सहि सुनाउनेछु ।

प्रभु कवीर (कविर्देव) जीले भने पछि पवित्र पुराणहरूलाई ध्यान पूर्वक पढ्नु भयो । श्री शिव पुराण (गीता प्रेस गोरखपुरबाट प्रकाशित, अनुवादक श्री हनुमान प्रसाद पोद्दार) पृष्ठ नं. १०० देखि १०३ सम्ममा लेखिएको छ कि सदा शिव अर्थात् कालरूपी ब्रह्मा र प्रकृती (दुर्गा) को संयोग (पति-पत्नी ब्यवहार) बाट सतगुण श्री विष्णुजी,

रजगुण श्री ब्रह्माजी तथा तमगुण श्री शिवजी को जन्म भयो । यिनै प्रकृति (दुर्गा) जो अष्टंगी कहलिन्छे त्रिदेव जननी तीनै ब्रह्मा, विष्णु र शिवजी की आमा भनिएकी छिन् ।

पवित्र श्रीमद्देवी पुराण (गीता प्रेस गोरखपुरबाट प्रकाशित, अनुवादक श्री हनुमान प्रसाद पोद्दार तथा चिमनलाल गोस्वामी) तेस्रो स्कन्द पृष्ठ नं. ११४ देखि १२३ सम्म मा स्पष्ट वर्णन छ कि भगवान विष्णुजी भन्नुहुन्छ कि यो प्रकृति (दुर्गा) हामी तीनै कि जननी हुन् । मैले यसलाई त्यस वेला देखेको थिए । जव म सानो वालक थिएँ । आमाको स्तुती गर्दै श्री विष्णुजीले भन्नु भयो कि हे आमा म (विष्णु) ब्रह्मा र शिव त नाशवान हौ । हाम्रो अविर्भाव (जन्म) र तिरोभाव (मृत्यु) हुन्छ । हजुर प्रकृति देवी हुनुहुन्छ । भगवान शंकरले भन्नु भयो कि हे आमा यदि ब्रह्मा र विष्णु हजुरबाट उत्पन्न भएका हुन् भने म शंकर पनि हजुरबाट नै उत्पन्न भएको हुँ अर्थात् हजुर मेरी पनि आमा हुनुहन्छ ।

महर्षि सर्वानन्दजी पहिला सुनी सुनाइएका अधुरो शास्त्र विरूद्ध ज्ञान (लोक वेद)को आधारमा तीनवटै (ब्रह्मा, विष्णु र शंकर) लाई अविनाशी, अजन्मा भन्ने गर्थे । पुराणहरूलाई पढनु हुन्थ्यो तर पनि अज्ञानी नै थिए । किनकी ब्रह्मा (काल) पवित्र गीताजीमा भन्नु हुन्छ कि म सवै प्राणीहरूको (जो मेरो २१ ब्रह्माण्डहरूमा मेरो अधिन छन्) बुद्धि छ । जहिले पनि मन लाग्छ बुद्धि प्रदान गरिदिन्छु र जहिले मनलाग्छ अज्ञान भरि दिन्छु । त्यस वेला पूर्णपर मात्मा (कवीर) ले भने पछि काल ब्रह्माको दवाव हट्यो र सर्वानन्दजीलाई स्पष्ट ज्ञान हुन गयो । वास्तवमा यस्तै लेखेको रहेछ । तर मान हानीको भयले भन्यो कि मैले सवै पढिसकें, यस्तो कहि पनि लेखिएको छैन् । कविर्देव (कवीर परमेश्वर) सित भन्नु भयो तिमी झुटा हौ, तिमीलाई शास्त्र विषयमा के थाहा । म प्रति दिन पढछु । फेरि सर्वानन्दजीले धारा प्रवाह संस्कृत वोल्न थाल्नु भयो । वीस मिनटसम्म कण्ठस्थ गरेको कुनै वेदवाणी भन्दै जानु भयो, पुराण सुनाउनु भएन ।

सवै उपस्थित नादान श्रोतागण जसले संस्कृत बुझ्न पनि बुझ्दैनथे प्रभावित भएर सर्वानन्दजीको समर्थनमा वाह वाह महाज्ञानी भन्न थाले । भावार्थ छ कि परमेश्वर कवीरलाई पराजित गरिदीयो र महर्षि सर्वानन्दजीलाई विजय घोषित गरिदिए । परमपूज्य कवीर पर मेश्वर (कविर्देव) जीले भन्नु भयो कि सर्वानन्दजी तपाईले पवित्र गीताजीको सपथ लिनु भएको थियो त्यो पनि विर्सनु भयो । जव तपाई सामुन्ने लेखिएको शास्त्रहरूको सच्चाईलाई पनि मान्नु हुन्न भने म हारे र तपाई जीत्नु भयो ।

एक जमिनदारले छोरा कक्षा सातमा पढ्दथ्यो । उसले अलिकति अंग्रेजी भाषा पढेको थियो । एक दिन दुवै बाबु छोरा वैलगाडा लिएर खेतमा जाँदै थिए । अगाडीबाट एउटा अँग्रेज आइपुग्यो । उसले अँग्रेजी भाषामा बाटोको वारेमा उनी सित सोध्यो । बाबुले छोरालाई भन्यो - छोरा यो अँग्रेज आफुलाई अधिक शिक्षित देखाउन चाहन्छ । तिमी पनि त अँग्रेजी भाषा जान्दछौ । यसको घमण्ड तोडिदेउ । सुनाई देउ अंग्रेजी वोलेर । जमिन्दारको छोराले अंग्रेजी भाषामा विरामी विदाको लागी प्रार्थना पत्र पढेर पुरै सुनाई दियो । अंग्रेज त्यो नादान वालकको वेवकुफीमा भन्दै छु बाटो सम्वन्धमा र सुनाउछ विरामी प्रार्थना पत्र । टाउकोमा

ाएँ, एम. आर. गराएँ तर पनि रोगको कुनै थाहा लागेन । त्यसपछि फेरि हाड-जोर्नी विशेषज्ञ डा. लखनलाल साह सित टिंचिंग अस्पताल, महाराजगंज, काठमाण्डौं, र डा. रामकेवल साह सँग नेपाल मेडिकल कलेज, जोरपाटी, काठमाण्डौंमा उपचार गराएँ । कुनैपनि डाक्टरले न त रोग पत्ता लगाए न त रोग निदान गर्न सके । म साह्रै हताष भएँ । एउटा प्रोजेक्टमा काम गर्दै थिएँ । त्यो पनि विरामीका कारण छुट्यो, पैसा पनि मनग्गे खर्च भयो । म आर्थिक र मानसिक रूपमा पूरै विछिप्त भइसकेको थिएँ । झार-फुक गराएँ र देवी-देवता लाग्यो कि भनेर पनि देखाएँ तैपनि कुनै लाभ हात लागेन । त्यसैबेला पारिवारिक कलहले गर्दा सबै दाजु-भाइ छुट्टी-भिन्दो भए । चारै तिरबाट दुःखै दुःख आइलाग्यो । त्यसपछि मैले सोचें कि अब भगवान्ले नै यो रोग ठीक गर्न सक्छन्, डाक्टर वा झारफुक, ओखतीबाट ठीक हुनवाला छैन । मसंग एउटा श्रीमद्भगवत गीताको पुस्तक थियो । ओशोको पुस्तक पनि थियो । ती पुस्तकहरू अध्ययन गर्न थालें । मेरो दशा देखेर मेरो परिवार, मित्र, गाउँ समाजका सबै मानिसहरू धेरै दुःखित थिए । त्यसैबेला गाउँको एक भक्त ललन कर्णले ज्ञान गंगा किताबमा लेखिएको भगवानको अद्भूत चमत्कारहरूको कहानी सुनायो र केहि कुराहरू सम्झाउँदै ज्ञान गंगा पुस्तक पढ्नका लागि दियो । ज्ञान गंगा पुस्तक पूरै पढेपछि सबै कुराले मेरो हृदयलाई आशावादी बनाइ दियो । सतलोक आश्रम बरवाला हरियाणामा जनको लागि र पूज्य गुरूदेव सित नाम उपदेश लिनको लागि मेरो मन ब्याकुल भयो । फेरि म एक पटक काठमाण्डौं गएँ । त्यहाँको धार्मिक पुस्तक पसल रत्न पुस्तक भण्डार माइतीघरबाट ज्ञान गंगा पुस्तक रू. ५० मा खरिद गरें । फेरि दोस्रो पटक ज्ञान गंगा र श्रीमद्भगवत गीता सँगसँगै पढें अनि मलाई पक्का विश्वास भयो कि ज्ञान गंगामा लेखिएको सबै कुरा सत्य हुन् । स्वयं विश्वस्त भएँ शास्त्र अनुकूल साधनाबाट नै प्रभुको प्राप्ति हुन सक्छ । त्यो साधना प्रदान गर्ने औकात यस पृथ्वीमा मात्र पूज्य गुरूदेव संत रामपालजी महाराजलाई नै छ । अब मलाई पूरा विश्वास भयो कि कबीर साहेब नै भगवान हो, बाँकी सबै कालका साधनासम्म हुन् ।

त्यसपछि मैले योग, मेडिटेशन पनि गर्न छाडें । त्यहाँबाट म र भक्त ललन दास दुवैले सतलोक आश्रम बरवाला, हिसार, हरियाणामा फोन गर्‍यौं र यथासक्य छिटो पूज्य गुरूदेव रामपालजी महाराजबाट नाम उपदेश लिन प्रस्थान गर्‍यौ । म ६ मार्च, २०११ मा नाम उपदेश प्राप्त गरी पूर्ण विश्वासका साथ भक्ति गर्दैछु । नामदान लिएर भक्ति गर्नाले मेरो सम्पूर्ण दुःखकष्ट नाश हुन गयो र आज म पूर्णरूपेण स्वस्थ छु । म एम. ए. पास गरी नोकरीको लागि भौंतारीइ रहेको थिएँ । नाम दान लिए पछि गुरूजीको कृपाले मलाई गाउँकै कलेजमा सरकारी नोकरी पनि मिल्यो । यी सबै सतगुरू रामपालजी महाराजको असीम कृपाले भएको हो । अतः अन्य भक्ति मार्गमा लागेका भक्तजनसित अनुरोध छ कि परमेश्वर कबीर साहेवको भक्ति सद्गुरू रामपालजी महाराज सित नाम उपदेश लिएर गर्‍यो भने जन्म-मरण रूपी भंयकर रोगबाट मुक्ति प्राप्त हुन्छ र सांसारिक सुख सम्पति र दुःखको स्वतः नाश हुन जान्छ ।

जय बन्दीछोड की !

सत साहेब !
भक्त ब्रजकिशोर (विजय)
पुत्र-श्री विल्टु साह
गाउँ - करून्याही
जिल्ला - सिराहा
गा. वि. स. - कल्याणपुर, नेपाल ।